





# सरस्वती वन्दना

- हर्क परियार

हे शारदेश्वरी तिम्रो सदैव जय-जय

कृपादृष्टिले मानव जगत् बन्छ अभय

अज्ञानता विनाश-गरी ज्ञानज्योति प्रज्ज्वलित

गर्छौं धर्म-कर्म-सेवा-ज्ञान मार्गमा अग्रसित

महिमा तिम्रो अति अपरम्पार

गर्दछौं बाल-बनिताप्रति अनन्त उपकार

हे विद्यादायिनी माता! श्रद्धेय नमन

प्रतिपल तन मन सुम्पी गर्छौं स्मरण

हे श्वेताम्बरी देवी कोटि कोटि प्रणाम

जगत्जननी दिनु होस् ज्ञानको महादान

चरणकमलमा शीश गर्छौं आराधन।

हे वीणाधारिणी! गुँजिंरहोस् घरमा ज्ञानरुपी झंकार

हे हंसवाहिणी माता सदा सर्वदा रहोस् तिम्रो जय जयकार!!



# श्रद्धेय गुरुवर टीकाराम शर्मा

- जी० बी० थापा
सिलगढ़ी

श्रद्धेय गुरुवर टीकाराम शर्माप्रति श्रद्धाका दुइ शब्द सम्झनाको रुपमा समर्पण गर्न चाहन्छु। गुरुवर टीकाराम शर्मालाई कुमुदिनी होम्सका निर्माताका रुपमा मान्न सकिन्छ। सानो टाउन स्कूललाई एक विराट् ख्यातिप्राप्त कुमुदिनी विद्याश्रम बनाउनमा उहाँको अथक परिश्रम र योगदानको भूमिका रहेको छ। उहाँ एक असाधारण प्रतिभाका धनी हुनुहुन्थ्यो। हजारौं विद्यार्थीहरूको नाम उहाँलाई मुखस्थ रहन्थ्यो। प्रत्येक विद्यार्थीलाई नामले बोलाउनु एउटा आश्चर्यको विषय लाग्छ।

उहाँको नेतृत्वमा विद्यालयले सर्वाङ्गीण विकास गरेको अनुभव हुन्छ। प्रत्येक बोर्डको परीक्षा (तिनताक उच्च माध्यमिक)-मा शत-प्रतिशत विद्यार्थी उत्तीर्ण हुनेगर्थे। पहिलो दर्जामा राम्रो अंक लिएर उत्तीर्ण हुने परीक्षार्थीहरू पनि थुप्रै हुने गर्थे। उहाँका समयमा विद्यालयबाट उत्तीर्ण हुने विद्यार्थीहरू आज ठूला-ठूला पदमा आसिन छन्। धेरै विद्यार्थीहरू त राम्रा ठूला-ठूला पदमा नोकरी गरी अवकाश पनि ग्रहण गरिसके खेलकुदमा पनि त्यति नै प्रगति गरेका थिए। सांस्कृतिक क्षेत्रमा त विद्यालयको योगदान चीरस्मरणीय छ। उहाँ आफैंले मुना-मदन खण्डकाव्यलाई सरलीकरण गरी जुन गीति नाटक मञ्चन गरे त्यस नाटकलाई कालेबुङका कुनै निवासीले भुल्नसक्ने छैनन्। विद्यालय दिवसमा एकपल्ट अन्तर-विद्यालय शिक्षक-शिक्षिकासामु "विवाहित सुखी कि अविवाहित" भन्ने विषयमा जुन तर्कसभा भएको थियो त्यसमा उहाँ आफैले विवाहित सुखी तार्किकको पक्षमा नेतृत्व दिएका थिए। शायद तत्कालीन उहाँका तर्कका बुँदाहरू कहिल्यै भुल्ने छैनन्। साठीको दशकमा उहाँले विद्यालय कुमुदिनी भवनको जुन प्रगति गराएका थिए सो शायद कुमुदिनी नै प्रथम थियो। प्रत्येक श्रेणी कक्षामा माइक्रोफोनको स्पीकर लगाइएका थिए। प्रधान अध्यापकको सबै सूचना माइक्रोफोनबाटै विद्यार्थीलाई प्राप्त हुने गर्थे। टिफिनको समय विद्यार्थी बजारतिर घुम्न जानुपर्दैन थियो। श्रेणी कक्षामा बसी सबी मीठा नेपाली गीतहरू सुन्न सक्थे।



विद्यालयको फुटबल खेलमा गुरुवारको जोश र उत्साहप्रदान सराहनीय हुन्थ्यो। उहाँ आफैले हलमा विद्यार्थीहरूलाई प्रोत्साहनका शब्दहरू सिकाई प्रत्येक विद्यार्थीलाई खेल मैदानमा जाने आदेश दिनुहुन्थ्यो। त्यसैले होला कुमुदिनी विद्यालयले अति योग्य खेलाड़ीहरू जन्माउन सकेको थियो। उहाँ आफैं पनि

खेल मैदानमा उभिएर खेलाड़ीहरूलाई प्रोत्साहन दिइरहनु हुन्थ्यो ।

प्रशासनको क्षेत्रमा उहाँजस्ता अब्बल दर्जाका प्रधान अध्यापक शायद कुनै विद्यालयले पाउनु विद्यालयको एउटा अहोभाग्य हुन्छ होला । चार-पाँच हजार विद्यार्थीहरूमा फौजी शासन चलाउन शायद सबै प्रधान अध्यापकको निम्ति सम्भव नहोला । विद्यार्थीले विद्यालयको अनुशासन भङ्ग गरे उहाँले कठोर सजाय दिनु वा विद्यालयबाट निकाल्नु उहाँ किञ्चित् पनि हिच्किचाउनु हुँदैन थियो ।

शिक्षकको रुपमा उहाँ विद्यार्थीका साथी झैं हुनुहुन्थ्यो । उहाँले पढ़ाउनु भएका पाठ घरमा एकचोटि पढ़े छर्लङ्ग हुन्थ्यो । श्रेणी कक्षामा उहाँ विद्यार्थीहरूका मित्र हुनुहुन्थ्यो भने श्रेणीबाहिर हिटलर थिए । जस्तै बदमाश विद्यार्थी पनि उनको सामू भिजेको मूसो हुन्थ्यो । यी सबै अद्‌भुत प्रतिभाका धनी हाम्रा प्यारा गुरुवर श्रद्धेय टीकाराम शर्मा थिए ।

उहाँका देन धेरै-धेरै छन्। लेखेर सम्भव छैन। उहाँका दिवंगत आत्माले शान्ति पाउन्। उहाँजस्ता व्यक्तित्वको हाम्रो समाजमा खाँचो छ। उहाँले फेरि जन्म लिनुपर्छ अनि अर्को एउटा कुमुदिनी निर्माण गरी नेपाली समाजलाई एक खुड़किलो अघि बढ़ाउनुपर्छ ।

*With Best Compliments from :*



**AJAY KUMAR PRADHAN**

Life Member, Kumudini Pariwar

(Govt. Contractor)

Kalimpong

*With Best Compliments to :*

**Kumudini Pariwar**

**Shri Tseten Tashi**

Life Member, Kumudini Pariwar

Gangtok, Sikkim





# न्याक भयो



- दिनेश खाती
महकुमा अस्पताल, कालेबुङ

आफै त महादेव कसले दिन वर.......... भन्न त्यति उचित नलागेर चल्ती भाषामै भन्नुपर्दा न्याक भयो भन्नु पर्छ।

झण्डै दुइ दशकदेखि सोही "न्याक" शब्द दार्जीलिङ पार्वत्य श्रृंखलाभारि कलीसरह सलसली फैलँदै भए तापनि ........आफू लेख्ने भनाउँदाले धरि उक्त शब्दको सठिक अर्थ र मुहान नमेटेर, खै के भनूँ, आफूलाई धेरै भाषाहरूका ज्ञान नभएर साह्रै न्याक भएको छ। तर त्यो भन्दा पनि पर त्यो के भन्छ......... अँ, रौड़िस् भाइको न्याक गराइ र भाइमाथि भएको न्याक ले गर्दा मानसपट भरि भाइ नाँचिदिएकोले रातभर निद्रादेवीले आँखामा बास नलिइदिएर आँखालाई साह्रै न्याक भयो।

हुनत भाइले साह्रै गिज्याएको पनि होइन तर पनि कुन्नि किन हो........ पहिलो प्रेमको........ प्रेयसीको मुहार हरपल्ट आफ्नो आँखामा बसेझैं उसको त्यो जाँड, रम, रक्सी, भाँग, धतुरोले जलेको अनुहार मेरा नयनअघि घुमिरह्यो......... नाचिरह्यो। उसका पुकारहरू......., मसित उसले साँचेका आशाहरू औ....... औ फेरि मप्रतिको घृणाका भाव मेरो कानमा गुँजिरह्यो।

"अमर दाइ, मैले खाएका धोकाहरू, आकृतिमाथि भएका अन्यायहरू समेटी कतै न कतै केही न केही अवश्य लेख्नुपर्छ है।"

"अमर दाइ, एउटा कथाकार भएर किन यति कठोर हुनुहुन्छ?.............. यत्तिका वर्षसम्म तपाईंको प्रत्येक नयाँ लेखमा म, मेरा कथाहरू खोजी हिंड़े।"

"उफ! तर,....... शायद तपाईंले मेरो जीवन गाथामा बजारमा बेच्न सकिने रस नै भेट्टाउनु भएन।"

होइन! होइन भाइ!.............. म तिम्रो कथा अवश्य लेख्छु। आजै राती, अहिले नै....... तर यति हो पाठकलाई रिझाउनको निम्ति यसमा म आफ्नो विद्वताले भ्याइज्जेलको ऋँगार-पेटारले भर्दिनँ। बस्!....... त्यस्तै कोर्छु। दुरूस्तै त्यसरी नै, जसरी मैले तिमीलाई भेट्टाएयें अँ, त्यस......... साँझ.......................साँझ झमक्क परिसकेथ्यो। "स्ट्रीट लाइट" र इमारतका गुलुफहरूको प्रकाश पनि प्रायः प्रायः हुस्सेले नै खाइरहेथ्यो। फेरि जाड़ो बड़ेर शरीरभरि काँड़ै-काँड़ा उमारी दिएथ्यो भने हात र गोड़ाहरू छ - मा छैन सरह भैरहेथ्यो औ मनभरि छः इञ्ज घट्ने प्रथाले डरै-डर उमाररिसकेथ्यो।

हुनत पहिले पनि धेरैचोटि सानै छँदा, आमा-बाबासित यसरी नै अबेर साँझसम्म गाड़ी नकुरेको होइन तर आजको वातावरण र त्यस ताकको परिवेशमा आकाश-पातालको अन्तर छ।

साँझ गहिरिएर बिस्तारै निशाको घुम्टोभित्र लुक्दै थिई......., गाड़ीको ला.......मो प्रतीक्षामा वाक्क भएर म, त्यहींमोटरस्टाण्डअघि प्रधान होटलमा रात काट्न पसें।

कालेबुङमा दस बजीतिर ओछ्यान पस्ने आदत भए तापनि....... ठण्डा ठाउँ आठै बजी रोटी-सब्जी खाएर औछ्यान पसी भगीरथ रावतज्यूको "क्षमा" उपन्यास पढ्न थालें। यस्तै चार-पाँच पृष्ठ





पढ़ेको हुँदो हुँ....... अचानाक ढोका ढक्-ढकियो ।

"को हो?"

"म हुँ, दाइ ।"

प्रत्युत्तरमा आएको नौलो र अपरिचित स्वरले म केही झस्किएँ तर ढोका खोल्नै पर्ने हुनाले, आतङ्कित र शङ्कित मन बोकी ा खोल्न पुगें ।

आगन्तुकको प्रथम दर्शनले नै मेरो मुटु काँप्यो ।

हुन पनि ला.......मा-लामा कश र दाह्री-जुँगा । त्यैमाथि जताभावी काटेका दागहरूले अझ क्रूर र भयानक देखिने ठूलो.......गोलो अनुहार । दाहिने खुट्टा लँगड़ो । फेरि पहिरन,....... टाटे-पाँग्रे तर रङ्ग नै छुट्याउन गाह्रो पर्ने मैला ज्याकेट र पेन्ट । पैरमा घुँड़ासम्म आउने कालो तर धेरै दिन पालिस नपाएको बुट औ स्वासमा ह्वास्सै रक्सीको दुर्गन्ध ।

कम्पित स्वरले उसलाई सोधें, "भाइको परिचय.......?"

"नमस्कार, हजुर । म शरण छेत्री, पोखियाबुङ निवासी ।"

म तीनछक्क परें । शारीरिक बनौट र पहिरनले बनाएको उसको छविको विपरीत उसको मृदुवाणी सुनी । मभित्रको डरले केही पर हटेर मनलाई स्वस्थ तुल्यायो । प्रत्युत्तरमा शिष्टाचार दर्शाउदै बोलें, "आउनु हवस् न! बसौ!" म गई पलङमा बसे औ उसलाई छेवैको कुर्सीमा बस्ने आग्रह गरें । केही सङ्कोचपूर्ण बस्दै उ बोल्यो, "हजुरको निद्रा पो....... बिगारें, मैले ।"

"होइन! होइन!! उता कालेबुङमा पनि दस बजीअगि सुतिन्छ र। .......यहाँको जाड़ो धपाउन सिरकभित्र पसेको मात्रै हुँ। .......अँ, भाइको....... केही विशेष काम थियो कि?"

प्रत्युत्तरमा उही गम्भीर मुद्रामा बोल्यो, उ....... "हुनत....... त्यति आजै नआई नहुने काम थिएन, मेरो....... तर यहाँलाई यसरी जहिले सुकै, आफ्नै ठाउँमा भेट्न सकिने होइन....... । फेरि भएन आकृतिको आत्माले झस्काइरहन्छ- मलाई । .......वास्तवमा भन्नु नै हो भने तपाईंको एक पाठक हुँ -म । सामाजिक रुढ़ीबाद, राजनैतिक "गुण्डाइज्म" आदिमाथि स्वच्छन्द चल्ने तपाईंको कलम.............., साँच्चै धन्य छौं हामी तपाईंजस्ता साहित्यकार आफ्नो समाजमा पाएर ।"

एकक्षण चूप रहेर फेरि एकदमै गहिरो एवं रुद्र श्वर पुनः बोल्न लाग्यो - उ ।

"खोई.............. तपाईंले जस्तै हामीले पनि दिनौं-दिन भाँड़िन्दै गइरहेको हाम्रो समाजलाई गोड़गाड़ गर्ने प्रयास गरेथ्यौं तर ..............

उफ् ! कस्तो विडम्बना..............यही समाजकै कोल्टे नीतिले मेरो प्रेरणा, मेरो साथ.............. मेरी आकृतीलाई सदा-सदाको निम्ति मदेखि हरेर लाग्यो । बस्..............के थियो लाचार बेवश....... म एक्लो....... बिलकुल बेसहारा....... ।"

बोल्दाबोल्दै उ ठप्प रोकियो। एकाएक उसका नयनहरू रसिएर आए औ दुइ गालाहरू मार्फत् भूईमाँ खसे तप्.......तप्.......तप्....... ।

मलाई उसको र आकृतिको सम्बन्धबारे जान्ने जिज्ञासाले निकै साह्रो पारिसकेथ्यो त्यसैले प्रश्न गरें- "भाइ शरण, अन्त आकृतिबारे केही नभन्ने? उ तिम्री को थिई?"

भन्छु दाइ, सब भन्छु! आज त्यही भन्न त तपाईसमक्ष आएको छु - म ।

अँ.............. आकृति विश्व, मेरी सहपाठी थिई । हामी पर सुकेपोखरी हाइस्कूल पढ्थ्यौं । बिहान-बेलुकी पोखियाबुङबाट सँगै आउँथ्यौं, सँगै जान्थ्यों । स्कूल र बाहिरका प्रत्येक सांस्कृतिक कार्यक्रमहरूमा हामी दुवैले अंशग्रहण गर्थ्यौं ।

समय बहँदै गयो....... समयको त्यही बहावसँग-सँगै.............. एकै साथको हिँड़ाइ-डुलाइ





र बसाइले कुन्नि कसरी मेरो मनमा उप्रति प्रेमको वीज छरिदिएछ।

उ एकदिन स्कूल नआउँदा, उसलाई एकैक्षण आफ्नो आँखाबाट ओझल भएको पाउँदा पनि मेरो मन अथाह तड़पनको सागरमा छट्पटिन्थ्यो।

समय बित्दै गयोः....... मेरो हृदयभित्रको प्रितको विजयलाई तन्दुरुस्त बनाउँदै। सौभाग्यवश एकदिन मेरो एकपक्षी प्रेमले प्रणय बन्धनको रुप लियो।

समयको तेज गतिसँग-सँगै हाम्रो प्रेम हुर्कदै-मौलँदै गइरहेथ्यो।

माध्यमिक हामी दुवैले दोस्रो दर्जामा पास गऱ्यौं औ फेरि कलेजको निम्ति प्रयास र प्रतीक्षा गर्न लाग्यौं।

अचानक....... हाम्रो प्रेमलाई कसको-कसको नजर लाग्यो-लाग्यो।

मेरा बाबले थाहा पाएछन्। बस्, के थियो....... हाम्रो प्रेमलाई समाजको थोत्रो परम्परा र जातिपातिको भेदभावले प्रहार गऱ्यो। मैले बाबालाई अनेक सम्झाउने प्रयत्न गरें तर उनको मनभित्रको आगो शान्त भएन। उनको एउटै कुरा दोहोरी रह्यो...........-

"कुलच्छिन! तँलाई पढ़ाउन नै मैले ठूलो गल्ती गरें। पढ़ेर....... तैले....... पुस्तौंदेखि हामीले जोगाएर राखेको इज्जत माटोमा मिलाइस्। तर याद राख्....... त्यो पानीमुनिको जात .......त्यो डाँग्रा खलक कसै गरेर पनि मेरो घरमा एक पस्दैन .......दुइ पस्दैन.......तीन पस्दैन.......बुझिस्?"

अन्तमा म आफै आकृतीलाई लिई घर छोड़ीदिएँ।

कालेबुङमा केही चिनारू साथीहरू थिए त्यसैले त्यतैतिर लागें।

कालेबुङ रौसे बजारस्थित जम्बक स्कूलमाथि रोशन साथीको घरमा तीन दिन बितायौं औ फेरि चौथो दिनमा रोशनकै घरछेउ एउटा कोठा किराइ गरी बस्यौं।

केही दिन चल्ने पैसा मसँग थियो फेरि भएन रेशनले काम गर्ने कपड़ा दोकानमै मैले पनि महीनाको तेह्र सय तनखामा काम पाएँ जो हामी दुइको निम्ति यथेष्ट थियो।

बिहान साँड़े साततिर प्रायः जस्तो रोशन र मसँगै जोरधारा रेली रोड, सिडफार्म, डड़वा डाँड़ा हुँदै डी० एस० गुरूङ रोडस्थित "नासिम स्टोर" -मा दिनभरि व्यस्त रही साँझपख घर फिर्थ्यौं।

घर एकप्रकार राम्ररी चल्दैथ्यो। आकृतिको चोखो प्रेम र उसको हातको स्वादिष्ट पकवान पाउँदा म घर, बाबा र दाज्यूहरू सब भुलिदिन्थें औ गमक्क पर्थे आफै-आफ आकृति जस्ती जीवनसाथी पाएकोमा।

हाँसो खुशीको हाम्रो सानो परिवारमा आकृतिले एकदिन हाम्रो प्रेमको फूलबारीमा एक नन्हा शिशु आई खेल्ने सन्देश दिई। साँच्चै दाइ त्यस साँझ म, म खुशीले खै के भनूँ नाचूँ-नाचूँ .......उड़ूँ उड़ूँ जस्तो वर्ण नै गर्न नसकिने गरी मातिएको थिएँ त्यस साँझ।

पेटमा एक महीनाको बच्चा छँदादेखिकै त्यसको निम्ति लुगाफाटा, खिलौना आदि थुपार्न थालें। यो देखी गाउँ-घरकाहरू कत्ति आह्रिस् गर्थे भने कति सम्झाउँथें.............. "यसरी आउने आगन्तुकको निम्ति पहिलेबाटै यति साह्रो लुगाफाटा खेलौना आदि किन्नु अपसगुन हो"।

तर म कहाँ मान्ने.............. आफ्नो खूनको पहिलो छिटाको स्वागत थियो। हामी दम्पती खुशीसाथ आगन्तुकको प्रतीक्षा गर्न लाग्यौं।

नानी पेटमा झण्डै तीन महीनाको हुँदो हो एकदिन घर मालिककै कुकुरले टोकि दिएछ। कुकुर





राम्रै थियो त्यसैले महकुमा अस्पताल लगी मात्र टी० टी० को इञ्जेक्सन लगाइदिएँ ।

घाउ निकै गहिरो थियो त्यै माथि दोजिया....... उसलाई प्राय: ओछ्यानमै विश्राम गर्न लगाउथें औ आफै घर-धन्धा गर्थें ।

मैले अफ्ठ्यारोसँग पकाएको भाँड़ा माझेको, लुगा धोएको बढ़ारेको देखी आकृति मरी-मरी हाँस्थी औ गुनासो गर्थी....... "मेरै कारण तिमीले के-के सहनुपरेको नि ।"

यस्तै प्रकारले दिनहरू प्राय: माया-प्रिती, हाँसी-खुशी मै काटिन्ये अचानक खै कस्ले सराप्यो....... कस्ले सराप्यो !

एक साँझ घर फिर्दा आकृति ज्वरोको पीड़ा खप्न नसकी छट्पटाइरहेकी थिइ । वल्लो घर पल्लो घरकाहरू आ-आफ्नो बुद्धिले भ्याएअनुसार सेवासुसार गर्दै रहेछन् ।

म पुग्नसाथ अस्पताल लाने बन्दोबस्त गऱ्यौं । महकुमा अस्पतालमा उचित जानकारी लिएपछि भर्ना लेखियो ।

कागज बनाई फिमेल वार्डको नौ नम्बर बेडमा लगी सुतायौं । केही क्षणपछि दुइ सेता-सेता ट्याबलेट दिइयो । तर झण्डै आधा घण्टा बित्दा पनि आकृतिको पीड़ामा केही कमी आएन ।

आठ बजीदेखि हामीलाई त्यहाँ बस्न दिइएन । त्यसैले घर छेउँकै मगरनी दिदीलाई त्यहाँ आकृतिसित राखी हामी रौसे घरतर्फ लाग्यौं ।

रातभरि आँखामा निदाको लेश मात्र पनि आउने प्रश्नै थिएन ।

साँच्चै त्यो कालो अँध्यारो एक्लो रात.............प्रत्येक पल युग बनी सामु खड़ा थियो । म पलङमा घरि उल्टो घरि कोल्टो पर्दै अथाह छट्पटाहटको साथ उँगेलीरहेको प्रतीक्षा साँचि रहे....... साँचि रहें....... ।

खल्लै आखाँमा गाँउ घरका भालेहरू बाँसेर दोस्रो डाक डाक्यो । म उठी हात मुख धोएँ औ चिया बनाउन लागें । त्यस्तैमा भालेहरूले तेस्रो चोटि बसेर प्रभात नजिकै आइपुगेको सङ्केत दियो । म चिया बनाई उकालो लागें ।

अस्पताल खुलेकै थिएन, त्यसैले म बाहिरै प्रतीक्षा गर्न लागें ।

झण्डै आधा घण्टापछि ढोका खोलियो म हतारसाथ भित्र पसें ।

आकृतिको पलङछेउ पुग्नसाथ अचानक मेरा पाइलाहरू टक्क अड़िए । हृदय छियाछिया भएर आयो । पैतालामुनिको जमिन आफै-आफु खस्किँदै जान लाग्यो ।

मगरनी दिदी रोइरहेकी थिई औ आकृतिलाई शीरसम्मै ढाकिएको थियो ।

हिम्मत बटोरी मगरनी दिदीलाई सोधें.............

"दिदी, आकृति कस्ती छे?"

प्रत्युत्तरमा रुँदै बोली दिदी-

"भाइ, आकृति सबलाई छोड़ेर गई ।"

"आकृति ! आ....... कृ.......ति....... ।"

म असाध्य पीड़ा खप्न नसकी आकृतिकै शरीरमा घोप्टो परी अचेत भएछु ।

भरे कता-कता कानमा पऱ्यो.................

"कुकुरले टोकेकोले नै त त्यो खसेकी होइन । रातभरि ज्वरोमै त्यो धताइरही जसलाई अस्पतालका कर्मीहरूले कुकुरले टोकेर धेरै दिन बित्दा पनि उपचार नगरिएकोले पग्ली भएकी भनी नजरअन्दाज गरिदिए । फेरि त्यो वार्ड डिउटीमा रहने डाक्टर पनि कस्तो पाँच-





पाँच चोटि फोन गर्दा पनि नआइदिएको। बिचरी हेरचाह नपाएरै देहत्याग गरी।"

"हो नि दाज्यू!"

अर्को श्वर गुँजिन लाग्यो.......।

"कुकुरले टोकेरै ऊमरेकी भए त कम-से-कम उसले सामानहरू फाड़-फुड़ गर्थी, भुक्थी, पागल कुकुरै सरह हुन्थी तर खोइ, उसमा त्यो सब। प्राण त्याग्ने बेलामा खालि अतिकति उल्टी गरेकी रहिछ। खोइ, के भन्नु यो सरकारी डाक्टर र कर्मचारीहरूको मनपरि..............।"

यत्रो सुन्दा नसुन्दै मेरो शरीरको सम्पूर्ण रगत उम्लेर आइसकेथ्यो। म जुरुक्क उठी डिउटी रुम तर्फ लागें। मलाई देख्न साथ एउटी सानी ट्रेनिङ्ग गर्दै गरेकी नर्सले भनी - "हामी तपाई होशमा आउने क्षणकै प्रतीक्षामा थियौं।"

म त रिसले आगो भइसकेथे। उसका कुराको वास्तै नगरी गर्जिएँ।

"हिजो राती आकृति साह्रो भएकी बेला बोलाउँदा नआउने कुन डाक्टर हो? म त्यस पाखण्डीलाई "डाक्टर" शब्दको परिभाषा र हिजोको माहापापको दण्ड दिन्छु।"

"होइन भाई......., होइन......." एक अर्को सिस्टर सम्झाउन थाल्छे..............।

"भाइ, यी सब कुराहरू त पछि गरे भइहाल्छ नि। पहिले डेड बडी घर लगी संस्कार सिध्याउनु हवस्। अहिले, तपाईँको कर्तव्य त त्यो पो हो त..............।"

"हो! हो! शरण पहिले त्यसै गरौं।"

मगरनी दिदीबाट खबर पाई रौसेबाट दस-बाह्रजना हितैषीहरू आएका रहेछन्।

"केको पछि? आकृतिलाई यहाँबाट लानुभन्दा पहिल्यै हिसाब-किताब बराबर गर्छु - म।" क्रोधमा चिच्याएको हुन्छु -म।

तर गाँउ-घरकाहरूले रोके।

लाश घरमा ल्यायौं। यहाँबाट लाश निकाल्दै गर्दा एउटी सिस्टरले ज-जसले लाश छुन्छ झट्ट इञ्जेक्सन लगाउनुपर्छ भनेकीले सबै साथी-सँगी केही त्रस्त भए।

जेहोस् मलाई जस्तोसुकै बज्राघात परोस्..............समय रोकिएन।

आकृतिको अन्तिम क्रिया पनि सिद्धियो।

भोलिपल्टदेखि म काममा जानुपर्ने तर देह मानेन। मन-मस्तिष्क भरि एउटै कुरा दोहोरिरह्यो.....................

एक चोटी अस्पताल जानुपर्छ। सरकारी कर्मचारीको खेलाइँचीमाथि प्रहार गर्नैपर्छ। नत्र भने आज तेरी आकृति मरी। भालि अर्को, पर्सि अर्को.............. यो परम्परा त्यतिकै रहनेछ यस्तो परिधिभित्र दिनौ-दिन गरीबको इच्छा र आकाक्षाको खून भइ रहनेछ।

म रोकिन सकिनँ। जीवन प्रथमचोटि "दुई पेग" रम पिएर अस्पतालतर्फ हानिएँ।

अस्पतालमा कुरा उठाएँ औ आकृति अस्पताल भर्नाका सारा रिकार्ड देऊभनी उल्लि बिल्ली पार्न खोजें....... तर..............

"मातेर आएर झगड़ा गर्छस्?" भनी उल्टै त्यहाँका गार्डहरूले मलाई चुटे। म असह्य हुँदा चोटैचोट बोकी भागेर डेरामा आएँ।

केही दिनपछि गाँउ घरमा सोही विषयको निम्ति मद्दत मागें तर सबले "अब केही हुन्न" भनी बिट मारिदिए।

म एक्लै भएर हारें। मेरो आकृतिको प्राण कुकुर-बिरालोको जतिकै साबित भयो। बस् अरू के थियो। आकृति बिना कालेबुङ खण्डहर जतिकै लाग्नथाल्यो मलाई। म पुनः पोखियाबुङ फर्कें।

उसले आफ्नो रामकहानी सिध्याई सकेथ्यो औ मौन भूईँमा के-के खोजे झैं घोप्टी रहँथ्यो। शून्यतालाई भङ्ग गर्दै म बोल्छु.......,

"खोइ त भाइ यस्तै छ यहाँको चलन। भ्रष्टाचार नपसेको कुनै कार्यालय रहेन। मानवता र आँट पहाड़बाट हरायो। आज यहाँ दिनौं-दिन बढ्दै गइरहेको भीड़ त केवल हातभागीका मुहार बोकेका सब डरका कैदीहरू मात्र हुन्। जेहोस्, भाइका आउँदा दिनहरू सफलीभूत हुन सकून, भाइलाई मेरो शुभकामना।"

"तर दाज्यू, एउटा वचन दिनूपर्छ - तपाईंले।"

"कस्तो वचन?" अश्चर्यचकित भई बोलेको हुन्छु - म।

"दाइ, मेरी आकृतिलाई कम-से-कम एउटा कथैमा भए पनि जिउँदो राखिदिनुपर्छ। भन्नुहोस् लेखिदिनु हुन्छ, होइन?" "अँ भाइ.............., म अवश्य लेख्नेछु।"



केही क्षण अझ बात गरी शरण गयो। रातमा केही क्षणसम्म बेला-बेला उसको याद आइरह्यो। कति चोटि त उसको इच्छा पूरा गर्न कोरिदिऊँ उसको गाथा भनी बसें पनि तर खोइ के पुगेन, के पुगेन।

अनि आज अगि दिउँसो तीन बजीतिर फेरि पोखियाबुङको गाड़ी कुरिरहेको समय अचानक रक्सीको नशामा चुर - उ मेरोअगि देखापर्‍यो औ बर्सन लाग्यो.............,

"अमर दाइ, एउटा कथाकार भएर किन यति कठोर हुनुहुन्छ? यतिका वर्षसम्म तपाईंका प्रत्येक नयाँ लेखमा म, मेरा कथाहरू खोजी हिँड़े। तर उफ्................."

शायद तँपाईले मेरो दारुण जीवनगाथामा बजारमा बेच्न सकिने रस नै भेट्टाउनु भएन। हा! हा! हा!.......

आखिर तपाईं पनि त समाजका एक गन्यमान्य व्यक्ति हुनुहुन्छ। बट आइ हेट दिस ब्लडी गन्यमान्य व्यक्ति, नेताज एण्ड अदर सोसियल परसानालिटिज..........,

किनकि उनीहरूको भित्री अनुहार र बाहिर अनुहारको चक्करमा उसलाई ठिम्याउनै गाह्रौ पर्छ।

तर मजस्तो लुटिएको, ठगिएको, मत्थु बनाइएकोलाई हेर्नुहोस्.............

के बाहिर के भित्र मत्थु त मत्थु हो तर...........

तपाईंहरूजास्ता ठूलाहरूका कोल्टे नीतिले गर्दा लाटा-सोझा गरीब जनतालाई साह्रै रयाक भएको छ।।













# महान् पुरुषका महावाणी

सङ्कलनकर्ता : टी० एन० सुवेदी

१. मानवले मानव बन्नु उसको महानता हो, मानवले देउता बन्नु उसको विजय हो अनि मानवले दानव बन्नु उसको पराजय हो ।

- डा० राधाकृष्णन्

२. अर्काको दोष खोज्नु जति सय लगाइन्छ त्यो भन्दा बढ़ी समय आफ्नो दोष खोज्नुमा लगाउनुपर्छ ।

- स्वामी विवेकानन्द

३. ज्ञान प्राप्त गर्नु नै पर्याप्त कुरो होइन त्यसलाई आचरणमा पनि उतार्न सक्नुपर्छ ।

- कन्फुसियस

४. जसको आफ्नो बुद्धि नै हुँदैन शास्त्रले पनि उसको लागि के गर्न सक्छ र? जस्तो कि अन्धोको निम्ति दर्पणको के प्रयोजन अनि के महत्त्व ?

-चाणक्य

५. आपत्तिले मनुष्यलाई मनुष्य बनाउँछ, सप्पत्तिले भने मनुष्यलाई बनाउँछ राक्षस ।

-मिस्टर ह्युगो

६. प्रशन्न औ मधुर व्यक्ति सदैव सफल हुन्छ ।

-भोल्टेयर

७. पशु नबोल्ने हुनाले दुःख पाउँछ, मनुष्य चाहिँ बेसी बोल्ने हुनाले दुःख पाउँछ ।

-लुकमान

८. मनुष्य जति महान् हुन्छ उ अति नै विनम्र हुन्छ, जसमा विनम्रता हुँदैन, उ महान् होइन ।

- टेनि सन

९. कुरुप मनभन्दा कुरुप अनुहार राम्रो ।

- जेम्स एलन

१०. जसले आफूमाथि शासन गर्न सक्तैन, उसले हरदम अरुको गुलाम बन्नुपर्छ ।

- गेटे

# "कुमुदिनी परिवार"-द्वारा प्रकाशित मुखपत्र : एक अवलोकन

- ज्ञान सुतार
कालेबुङ



"कुमुदिनी परिवार"-ले यसको स्थापनाकालदेखि आजपर्यन्त जम्मा तीनवटा मुखपत्र प्रकाशित गरिसकेको छ र यसले नेपाली भाषा साहित्यप्रतिको आफ्नो दायित्व यसरी नै निर्वाह गर्दै अइरहेको भए पनि १९६१ र ६२-मा दुइ अङ्क "कुमुदिनी परिवार" शीर्षकान्र्तग पत्रिका प्रकाशित भएपछि प्राय: ४५ (पैंतालीस) वर्षको लामो अवधिभरि नै यसले न त कुनै साहित्यिक गतिविधिप्रति चासो राख्यो न त पत्रिका नै निकाल्यो। यसका मुख्य कारणहरूमध्ये एउटा थियो - सङ्गठनको अचल अवस्था र सङ्गठनिक निष्क्रियता। ४५ वर्षको अन्तरालपछि सन् २००७-मा परिवारले आफ्नो मुखपत्र निकाल्यो - "स्मारिका" नाम दिएर जो कुमुदिनी विद्याश्रमका प्रथम प्राचार्य स्व० टीकाराम शर्माप्रति समर्पित थियो।

*कुमुदिनी परिवार (अङ्क १, १९६१)*

पाठशाला दिवसको शुभ अवसरमा निकालिएको पहिलो अङ्क जम्मा ४६ (आवरणसहित) पृष्ठको थियो। प्रधान सम्पादक श्री कृष्णाबहादुर प्रधान र सम्पादक मण्डलीका सदस्यहरू थिए - सर्वश्री नरबहादुर दाहाल, भरत कुमार थापा, तिलक थापा र जबर्द्धन धमाला। यस अङ्कमा मोठ ६-वटा कविता र ७-वटा कथा परेका रहेछन् भने एक-एकवटा व्यङ्ग्य लेख, निवन्ध र समालोचना परेका छन्। यसका कवि-लेखक र कलमकारहरू रहेछन् - सर्वश्री नरबहादुर दाहाल, दीपक कुमार प्रधान, ए० क्लेमेण्ट, कृष्ण (सम्भवत: प्रधान सम्पादक कृष्णबहादुर प्रधान), तिलक थापा, मदन कुमार छेत्री, केवल बहादुर थापा, बालकृष्ण पराजुली, जबर्द्धन धमाला, गोपालमणि प्रधान, तिलक (तिलक थापा?), रुद्र बस्नेत, के० पी० राई, एच० प्रकाश शर्मा, भानु प्रधान (भानुभक्त प्रधान?) र भरत कुमार थापा। यसबाहेक , पहिलो आवरणपछिको प्रथम पृष्ठ सम्पादक मण्डलीको सूचीले ओगटेको छ भने त्यसपछिको पृष्ठमा कुमुदिनी परिवारका संरक्षकगण (सर्वश्री बी० एल० दीक्षित, एल० के० अहोय र देवचन्द बाबु) एवं कार्यकारी समितिका सदस्यहरूको नामावली दिइएको छ। अर्को पृष्ठमा विषयसूची एवं यसको लगत्तैपछिल्तिर स्व० टीकाराम शर्माले परिवारलाई दिनुभएको "श्याबासी सन्देश" छ। यसपछि कविताबाट आरम्भ भएको साहित्यिक लेकहरू पृष्ठ ३२-मा आएर टुँग्याइएको छ र यसै पृष्ठमा सम्पादकीय र शिक्षक एस० के० प्रधानको शुभकामना सन्देश प्रकाशित छन्। त्यसपछिका पृष्ठहरूमा "मूल मंत्रीको रिपोर्ट" (पृष्ठ ३३), २४ र २५ मई, १९९०-मा भू० पू० छात्रहरूले आयोजन गरेको कार्यक्रमको टिपोट (पृष्ठ ३४) र पृष्ठ ३५-३६-मा अर्थ सहयोगीहरूको सूची छ र त्यसअनुसार रु० ३२ दिएर सर्वाधिक सहयोग पुऱ्याएका रहेछन् श्री एल० के० अहोयले र न्यूनतम सहयोग राशि रू०२ (दुइ)-को दरले १९-जना महानुभावहरूले दिएका रहेछन्। पृष्ठ ३७-मा शुभकामना सन्देशहरू प्रकाशित छन् भने पृष्ठ





सं० ३८-मा बेलायत जान लागेका प्रधानाध्यपकप्रति विदाइ सन्देश दिइएको रहेछ। अन्तिम मुद्रित पृष्ठ आवरण-३ मा भने प्रकाशनसम्बन्धी घोषणा र विवरण रहेका छन्।

उक्त पत्रिकाको कुनै मूल्य कतै प्रकांशित छैन अनि घोषणा-पत्र (Form of declaration, Form 1) अनुसार विक्रय नगरी उपहारस्वरूप प्रदान गरिने उल्लेख गर्दै प्रकाशक श्री कृष्णबहादुर प्रधानले वार्षिक रूपमा एवं नेपाली, अङ्ग्रेजी, हिन्दी र बङ्गला भाषामा प्रकाशित हुने (चारवटा भाषाका सामग्रीसहित) उल्लेख गरेका छन्।

### *कुमुदिनी परिवार (वर्ष २, अङ्क २, १९६२)*

यस अङ्कको मोठ पृष्ठ सङ्ख्या (आवरणसहित) ५२ रहेको छ अनि प्रथम आवरणपछिको पृष्ठमा पत्रिकाको नाम "कुमुदिनी परिवार" अनि सम्पादक मण्डलीको नामावली प्रकाशित गरिएको छ, जसअनुसार सर्वश्री नरबहादुर दाहाल (प्रधान सम्पादक), बालकृष्ण पराजुली, कृष्णबहादुर प्रधानको सम्पादनमा पत्रिका प्रकाशित भएको रहेछ भन्ने कुरो थाहा लाग्छ। त्यसपछिको पृष्ठमा स्व० टीकाराम शर्माको सन्देश छापिएको छ। अर्को पृष्ठमा एकातिर विषय सूची रहेको छ भने यसको पछिल्लो पातोमा १९६१-६२ का पदाधिकारीहरूको सूची प्रकाशित छ। सभापति स्व० टीकाराम शर्मा, उपसभापति श्री महानन्द पौड्याल, मूलमंत्री श्री नरबहादुर दाहाल, सहमंत्रीहरू श्री भानुभक्त प्रधान र कृष्णबहादुर प्रधान, मूल कोषाध्यक्ष एवं सहकोषाध्यक्ष क्रमश: श्री भुवनसिंग थापा अनि श्री बालकृष्ण पराजुली रहेछन् भन्ने स्पष्ट हुँदछ।

उक्त अङ्कमा जम्मा ३-वटा निबन्ध, ७-वटा कथा, ८-वटा कविता, एउटा जीवनी, एउटा समालोचना र एउटा संस्मरणबाहेक स्कूल दिवसको प्रतिवेदन, तीनवटा अपील (आर्थिक सघाउ र रचनाका निम्ति) अनि सम्पादकीय लेख परेका छन्। रचनाकारहरूमा विषय-सूचीअनुसार क्रमागतरूपमा सर्वश्री भवन प्रसाद गुरूङ, नरबहादुर छेत्री, हेम हुमेगाई, मदन कुमार छेत्री, मोतीवीर राई, टहलदास अधिकारी, "कृष्ण" (कृष्णबहादुर प्रधान), राम राई, हर्क परियार, जे० एन० शर्मा, तिलक थापा, खिड्प बमजन, तारा गिरी, नरबहादुर दाहाल, डम्बर भट्टराई, जयवर्द्धन धमाला र लक्ष्मीप्रसाद शर्मा रहेका छन्।

यस पत्रिकाको मूल्य पनि कतै प्रकाशित रहेको नहुँदा अङ्क-१को बिक्री-वितरण व्यवस्था नै अपनाइएको थियो होला भन्ने अनुमान लाउन सकिन्छ।

### *कुमुदिनी परिवार स्मारिका (२००७)*

वास्तवमा यस अङ्कलाई "कुमुदिनी परिवार - अङ्क-३" भनिनुपर्ने थियो तर यसअघि प्रकाशित अङ्कहरूको बारेमा ठीकसँग ज्ञान नभएको र पत्रिकाका प्रतिहरू अनुपलब्ध रहेकाले यो त्रूटि हुनगएको हुनाले आगामी अङ्कमा यस सम्बन्धी समोचित संशोधन प्रकाशित गरी २००७-को अङ्कलाई अङ्क-३ अनि त्यसपछिका अंकहरूलाई ४, ५ इ० भनेर कुमुदिनी परिवार पत्रिकाको प्रकाशन अनुक्रमाङ्कलाई सच्याउनुपर्ने अनिवार्यता हुनजान्छ।

२००७-मा प्रकाशित अंक प्राय: सबैजसो हाम्रा सदस्यहरूसँग अद्यापि निश्चय नै उपलब्ध छ भन्ने विश्वास राख्दै त्यसमा परेका सामग्री एवं कलमकारहरूको सम्बन्धमा कुनै कुराको चर्चा गर्नु अनावश्यक ठानेकै भए पनि त्यसको सम्पादन, प्रकाशन र विज्ञापनसम्बन्धी मैले भोग्नुपरेका कतिपय समस्याहरूको विषय केही भन्नैपर्छ मैले।





कुमुदिनी परिवारले आफ्नो मुखपत्र प्रकाशित गर्ने विषयमा घाँइघुइँ कुरा २००७ को आरम्भदेखि नै चलिरहेको भए पनि अन्तिम निर्णय २२ अप्रेल, २००६-मा बसेको सभाले लियो अनि त्यही सभाले सम्पादन, प्रकाशन आदिसम्बन्धी यावत् उत्तरदायित्व मेरो थाप्लोमा हालिदियो। मैले नाइँ-नास्ति गर्ने ठाउँ थिएन।

थाप्लोमा अप्रत्याशित रूपले आइलागेको दायित्वको पृष्ठभूमिमा अन्तर्निहित समस्याहरूले मलाई घेरेर बिलखबन्दमा पारिदिएको जस्तो अप्ठ्यारो स्थिति थियो। सभा सिद्धिएर बाहिरिएपछि मलाई एकपटक त समस्याका ब्याँसाहरूले चिथोरिरहेका जस्तो लाग्नु स्वभाविकै थियो किनभने समय एक महीना जति मात्र शेष थियो। पत्रिका प्रकाशनको निम्ति आवश्यक धनराशि नभएकोले सम्पूर्ण व्यय विज्ञापन मार्फत जोगाड़ गर्नुपर्ने विवाशता थियो। रचनाहरू र प्रकाशन सामग्रीको निम्ति पत्र लेख्ने, सम्पर्क गर्ने अभिभारा पनि आफ्नै थाप्लोमा आइपरेथ्यो। म भने काटेको बोकोझैं भएको थिएँ, साथी भाइहरूलाई लुतो न कनाइ थियो।

यस्तै समयमा मलाई सघाउ पुऱ्याउने उद्देश्यले परिवारका कतिपय साथीहरू (नाम तोक्नुपर्दा विशेषरूपले सर्वश्री लीलाबल घिमिरे, दिनेश खाती, नन्दकिशोर प्रसाद एवं हर्क परियार) अघि आइदिए अनि सबैभन्दा पहिले मुद्रण-व्यवस्थाप्रति हाम्रो ध्यान गएकोले भाइ उमेश "उपमा"-सँग सम्पर्क गरी हजार प्रतिको चालीस हजारमा छापिदिने स्वीकृति उनले दिएपछि रचनाहरूका निम्ति व्यक्तिगत र फोनमार्फत् सम्पर्क गर्न थाल्यौं। निर्धारित तिथि २४ मई, २००७-का दिन विमोचन गर्नुपर्ने। २३ मईसम्म पनि रचनाको टुँगो नभएकोले र यस पत्रिकाको विषयवस्तु कुमुदिनी विद्याश्रम र स्व० टीकाराम शर्माको परिप्रेक्ष्यमा सान्दर्भिक हुनुपर्छ भन्ने कुरा पहिलेबाटै निर्धारित भएकोले जस्तोसुकै रचना खाँद्ने कुरा पनि नमिल्ने हुनाले कतिपय पत्र-पत्रिकाबाट पूर्व प्रकाशित रचनाहरू खोजखाज गरेर दिएपछि उमेश "उपमा" -ले आफ्नो काम थाले। यता विज्ञापनको खोजीमा दिनभरि जस्तै नै म, दिनेश खाती र नन्दकिशोर प्रसाद बजार घुमिरह्यौं। यस कार्यमा यदाकदा सहायता गर्नेहरूमा हर्क परियार, लीलाबल घिमिरे, तारा सुवेदी र अरूण कुमार गुप्ताको नाउँ लिनसकिन्छ। यसरी विज्ञापनबाट जम्मा ४०,४५० रू० सङ्ग्रह भएछ र यसले हामीलाई निश्चय नै उत्साहित तुल्यायो, ऊर्जा थपिदियो। रचनाहरू पनि प्रायः दिनमा एक दुइवटा प्राप्त हुनथाले। तर कतिपय रचनाका लेखौट बुझ्न नसकिने, "थीम" - भन्दा बेग्लै र व्याकरणगत त्रूटिहरूको अधिकताले गर्दा यसतर्फ पनि छनौटको समस्याले निक्कै नै अप्ठ्यारो पारेथ्यो। जेहोस्, पत्रिकालाई रचनाहरूको अभाव भएन, काम रोकिएन। निर्धारित तिथिमै विमोचित गर्ने लक्ष्य यथावत् रह्यो। काम चलिरह्यो।

तर अङ्ग्रेजी भाषामा आएका रचनाहरूको छनौट, शोधन-संशोधन, पुनर्लेखन (बुझ्नै गाह्रो पर्ने रचनाहरू), ईक्ष्य-शोधन सम्पूर्ण कार्य डा० इस्माइल मंग्राती र श्री त्रिरत्न राईले गरे पनि नेपाली भाषाका रचनाहरूसम्बन्धी सम्पूर्ण दायित्व मलाई दिएर यस विषयमा साथीहरूले टाउको दुखाउने कष्ट गरेनन्। अँ, अपवादस्वरूप एक-दुइजनाको नाउँ लिनसकिन्छ, जसमा दिनेश खाती प्रमुख हुन्।

जसरी तसरी २३ मईको बेलुकी हजार प्रति पत्रिका आइपुग्यो। बेलुकी नै खोलेर हेर्ने फुर्सत थिएन र पनि झण्डै तीन-चार बजीतिर दुःख निवारक सम्मेलनको एउटा कोठामा लगेर सरर हेर्दा अधिवक्ता श्री प्रभाकर देवानकृत "C.B RANA - A PROFILE" शीर्षक रचनाको त अलिअलि पनि होइन पूरै हत्या भएको रहेछ - पढ्न नै नसकिने गरी।





प्रेसको हेल्चेक्र्याइँले गर्दा मुद्रित सामग्रीमाथि राणा सरको फोटो पो छापिदिएछ! परेन बित्याँस र अप्ठ्यारो!! मेरा ओंठ सुके, काटे पनि रगत नआउने शारीरिक अवस्था भएथ्यो मेरो। पसीनासरि हुँदै उमेश "उपमा"-सँग फोनमा यससम्बन्धी कुरा गर्दा उनले आश्वासन दिए - "म प्रेससँग कुरा गरेर उपाय निकाल्छु।"

केही बेरपछि उनले फोनमै उपाय बताए मलाई - "प्रेसले छापिदिन्छु त्यो पन्ना फेरि त भन्दैछ तर सिलगड़ीको झंझट पर्छ आउने-जाने। यसकारण, म रातभरि बसेर भए पनि छापिदिन्छु। बिग्रिएको पन्ना अघिल्लो पन्नामा टाँसेर नयाँ पन्ना त्यसको ठाउँमा टाँस्नुपर्छ।"

यस प्रसङ्गमा मैले कसैसँग कुनै चर्चा नगरी घर फर्किएँ। रातभरि निद्रा लागेन। आँखा जोरिन माननेन्, नाना थरिका विचारका पैह्राहरू रोकिएनन्। भोलिको दिन पत्रिका निकाल्नैपर्छ तर कसरी? म चिन्ताग्रस्त थिएँ।

म २४ मईको बिहान, घामलाई पनि उछिनेर पत्रिका सुम्सुम्याउन पुगेँ। आठ बजीतिर संशोधित मुद्रित पृष्ठको थाक बोकेर आउपुगेछन् उमेश। त्यसपछि कतिपय साथीभाइको सहयोग लिएर टाँस्ने काम गर्दागर्दै पाठशाला दिवसको कार्यक्रम आरम्भ भइसकेको पनि पत्तो भएन। पाँच सय थान पत्रिका लिएर दस बजी पाठशाला पुग्यौं - शेष पत्रिकाका प्रति अर्को दिन सँच्याउने सल्लाह गरा।

समयमा विमोचन कार्यक्रम सम्पन्न भयो। बिक्रीको निम्ति पत्रिका राख्यौं - पाठशाला दिवस मनायौं। त्यसै साल अचलावस्थामा रहेको "टावर क्लक" -को जीर्णोदार भयो, स्व० टीकाराम शर्माको सालिग निर्माण गरी अनावरणसम्म गरियो......

तर पाठशाला दिवसको समारोह सम्पन्न भएको केही दिनपछि बसेको परिवारको सभामा उक्त पत्रिकामा रहेका त्रूटिहरू देखाउने थुप्रै निस्किए। निक्कै राँकिँदै बोले उनीहरू ......यसरी राँक्किनेहरूमा विशेष गरी ती अकर्मण्य र निष्क्रिय साथीहरू धेर थिए। जसलाई मैले पत्रिकाको सम्पादन - प्रकाशनको कार्यमा हजारपटक "लौ न, गुहार! लौ न, गुहार!!" भनी व्यक्तिगत अनुरोध, आग्रह र बिन्ति गरिसक्दा पनि "लुतो सर्छ" झैं अलग्गै रहनुमा अफ्नो कल्याण देख्ने गरेका थिए। त्यस सभामा मेरो पक्षमा बोलिदिने साथीहरूप्रति मेरो हृदयमा गहिरो श्रद्धा आज पनि छ। कुमुदिनी परिवारको स्मारिका-२००७ निकाल्दाको समय-स्थिति र अवस्था विषयक सबैलाई ज्ञात होस् भन्ने मनसाय मेरो, कसैको हृदय दुखाउने भने होइन। र पनि, झुकुल-पुकुलमा सघाउ पुऱ्याउने साथीहरूको नाउँ छुट्न गएको होला, अन्यथा नसम्झिदिने।





(संस्मरणात्मक कविता)

# घड़ी भा' को स्कूल सम्झी......

- मोतीप्रसाद शर्मा

एउटा सानो ख्याउटे केटो
ठूला-ठूला आँखा भा'को
लामा-लामा गोड़ा उसको
चार कोशदेखि स्कूल धा'को

कमीज सेतो, हाफप्यान्ट खाकी
चोसे रुमाल छातीमाथि
घुँड़ा छुने नीलो मोजा
कालो नट्टीब्ययको साथी।

पीठमा एम्मान त्रिपाल झोला
क ख...... ए बी...... पढ्थ्यो होला
लजौटे केही सङ्कोचावाला
अबोला कि भनौं भोला।

साथी-भाई थिए नाना थरका
लाग्थे तर एउटै घरका
खेल्दै पढ्ने, पढ्दै खेल्ने
ज्ञान र विज्ञान वर-परका।

कुमुदिनी विद्याश्रममा
चरित्रं हि बलम् मनमा
तैनाथ बालक सारा दिनमा
मन्टेस्सरी शिक्षा लिनमा।

पी० एम० सुब्बा, टी० आर० शर्मा
सरस्वती, माला गुरुमा
कमला, चन्द्र, रुपराम देवान
पाएकै हो धन्य शुरुमा।

सङ्कत्रको गोली चोर्ने
खेलको धुनमा ऐना फोर्ने
नाच्ने-गाउने-व्यायाम गर्ने
फुटबलतिर चियर-अप गर्ने।

पाला मिठाई, आइसक्रिम खाँदै
पाँच-दश पैसा दैनिक लाँदै
पढ्नै पर्ने, लेख्नै पर्ने
व्यवस्थाको सम्मान गर्दै।

होक्की-के र कानजोत-काट्टी
भित्ते साइटमा शैशव साटी
ढ्याउँ... ढ्याउँ... फाइटिङ कहिले बक्सिङ
व्यस्त सारा सहपाठी।

उगेन, नोर्बु, सोनाम, गणेश......
ज्योति, पङ्कज, भूषण, दिनेश......
ज्योत्स्ना, नीला, अरुणा, सुनीता......
गङ्गा, जमुना, नीता, ममता......।

सच्चा साथी, सच्चा समावेश
कहाँ पाउने अब त्यो परिवेश?
उभिरहेछ एक कुनामा
नालन्दाको एउटा अवशेष!

यही हो मोती ख्याउटे केटो
आज अलिक बलियो भाको
कला-शिक्षा...... भन्ने खोराक
"कुमु" - बाटै यसले पाको।



# कुमुदिनी परिवारका एकजना होनहार सदस्य डा० हरि प्रसाद छेत्री



- राज के० श्रेष्ठ
भूतपूर्व छात्र

समाज, राज्य र राष्ट्रको विकासको मूल आधार नै शिक्षा हो। माइनस शिक्षाबाट भएको विकास भौतिक विकास मात्र हो बाहिरी सजावटजस्तो। शिक्षित व्यक्तिबाट मात्र शिक्षित जाति, शिक्षित समाज र शिक्षित राष्ट्रको परिचय बन्दछ। यसर्थ शैक्षिक विकास विकासको निम्ति मूल जड़ हो। औद्योगिक विकासले श्रमिकहरू जन्माउँछ भने शैक्षिक विकासले बुद्धिजीवीहरू जन्माउँछ। यस्तै शैक्षिक विकासको निस्ति कार्य गर्ने एकजना कुमुदिनी परिवारका सदस्य डा० हरिप्रसाद छेत्री हाम्रो समाजका निम्ति ज्वलन्त उदाहरण बनेर रहेका छन् जसलाई हाम्रो समाजले जान्न र चिन्न आवश्यक छ। कुमुदिनी विद्याश्रमका स्व० टीकाराम शर्मा, प्रधान अध्यापक, सर कुमुदिनी परिवार सदस्यहरूका निम्ति प्रेरणा भएर रहेजस्तै छेत्रीज्यूको पनि विशेष गरेर सिक्किमको शैक्षिक विकासको क्षेत्रमा योगदान अविस्मरणीय छ। न्यारासनल ओपन स्कूल जहाँ सातौं-आठौं श्रेणीसम्म पढ़ेर अघि कतिपय कारणवश पढ्न छोड्नेहरू, कतिजना पढ्न नसक्नेहरू र कतिजना त बदमाशी गरेर पढ़ाइ छोड़नेहरूसमेत यो ओपन स्कूलबाट परिक्षा दिई पास गर्नेहरू छन्। वर्षमा लगभग चारपाँच विद्यार्थीहरू यसरी पढ़ाइको क्रम पूरा गर्नेहरू छन्। यसरी नै बाह्र क्लास पनि पास गरेर ल० पढ़ी एडभोकेट बन्नेहरू पनि छन्। यस प्रकारका केटाकेटीहरूले आफ्नो शैक्षिक योग्यता बढ़ाउने सुअवसर पनि यहाँबाट पाइरहेका छन्। यसदेखिबाहेक फार्मेसी विषयका डिप्लोमा, डिग्री, मास्टर र पी० एच० डी०सम्मको शैक्षिक संस्थानहरू स्थापित गरी सफलतापूर्वक सञ्चालन गर्नु खेलाँची कुरा होइन। यस अझ थप स्व० पिताको नाममा डम्बरसिंह कलेज, स्व० माताको नाममा हर्कमाया कलेज अफ एडुकेशन, बी० एड० र एम० एड० स्थापित गरी सञ्चालन गर्नु सबैले सोँच्न नसक्ने कार्य भाको छ। यससित अझै थप विषय लाइब्रेरी साइन्स, बी० एस्सी०, आइ० टी० जस्ता शैक्षिक संस्थानहरू सञ्चालित गरिदिएर अद्भूत कार्य गरी देखाइदिएका छन्। यसबाट शिक्षाको क्षेत्रमा गरिएको विकासमूलक कामको सराहना हाम्रो नेपाली समाजले गर्नुपर्ने हो यदि काँही साँचो र स्वच्छ विचारको छ भने।

कुनै पनि कामको सफलता कर्ताको दृढ़ सङ्कल्प, कर्मनिष्ठ र आत्माविश्वास यी तीनवटा कामहरूमाथि निर्भर गर्छ अनि यी तीनवटा विचारका कामहरूका साधक भएकाले समाजका निम्ति एकजना उदाहरणीय व्यक्ति बनेका छन् डा० छेत्री। उनीबाट गरिएका कामहरू शिक्षित भएर मात्र गर्नसक्ने कुरा पनि होइन तर यसको निम्ति विचारको जग दरिलो हुनुपर्‍यो। त्यहीँबाट उब्जेका विकासशील कार्य गराइ हो। यो सबैले गर्नसक्ने काम होइन।

विकासको पक्षमा उनको सौँचाइको उच्चता यसरी झल्किन्छ। भूटानका एकजना विद्यार्थी जो बी० फार्म० पढ़िरहेछ उसलाई एम० फार्म० पनि गरेर भूटानमा गई फार्मेसी कलेज खोल्ने सुझाउ दिनबाट प्रष्ट हुन्छ।

सदैव केही सिक्न रुचाउने प्रवृत्ति मान्छेको असल गुण हो। हुनत नेपालीमा एउटा उखान छ, "नजाने गाउँको बाटै नसोध्नू" भन्ने तर यसको ठीक विपरीत नजाने गाउँको बाटोको पनि सोधिखोजी गर्नु भनेको अज्ञान विषय जान्नु नै ज्ञान हो।

इतिहासमा हेर्‍यौं भने धेरै ऐतिहासिक चीजहरूको निर्माण गरिएका पाउँछौं। ताजमहल, कुतुब मिनार, भिक्टोरिया मेमोरियल हल, बिड़ला मन्दिर, लाल किल्ला, प्रख्यात बद्रीनाथ, केदारनाथ, ऋषिकेश आदि-आदि। यी सब ऐतिहासिक धरोहरहरू हुन् देशका। तर यी सब भौतिक विकासीय कार्यहरू हुन्, ऐतिहासिक हो तर बैचारिक र आध्यात्मिक विचारको निम्ति भने शिक्षा मूक्लमन्त्र हो। शिक्षितहरूको प्रमाण-पत्र दिने शैक्षिक संस्थानहरूको निर्माण भएको छ समाजमा उनीबाट।

शरीर सुतेर विचार नसुत्ने व्यक्ति। कम्ती सुतेर, खाएर, त्यसबाट समय उबारेर त्यसलाई काममा प्रयोग गर्ने एकजना सफल व्यक्ति। हामीले सिक्नुपर्ने गुणहरू हुन्। यस्ता हुन्छन् कार्यशील, समयनिष्ठ व्यक्ति र सफल पनि यस्तै खालका व्यक्तिहरू हुन्छन् जीवनमा। एकजनाले मलाई यसो भने- "हामीलाई टेबलमा फाइल नआवोस् भनेजस्तो लाग्छ तर उचाहिँ खोजी-खोजी काम गर्ने मान्छे। उ त्यस्तै हो। उनको क्रियाशीलताको बग्दो उदाहरण।"



कुमुदिनी विद्याश्रमका उपज डा० हरिप्रसाद छेत्री विशेष गरेर विद्यार्थीहरूका निम्ति उदाहरणीय व्यक्ति हुन्। शिक्षाको विकासको क्षेत्रमा केही गर्नु छ भने उनका सुझाउहरू लाभदायक हुनेछन्। कुमुदिनी विद्याश्रमको वर्तमान अवस्था ठीक नभएको बोध कुमुदिनी परिवारकाहरूले गरिरहेका छन्। यसलाई पूर्वकालीन विद्याश्रम बनाउनेक्रममा अनुभवी व्यक्तिहरूको सर-सल्लाह सुझाउहरूको आवश्यकताबाट सम्भव हुन्छ। तरै पनि आफू पढ़ेको विद्याश्रम प्रति श्रद्धार्पण गर्दै केही गरेंको भावना सदैव राख्छौं कुमुदिनी परिवारको प्रयास।

## लेखक परिचय



नाम : रोसन छेत्री

जन्म थलो : सिड फार्म, कुमाले डाँड़ा, कालेबुङ

पिता एवं माता : श्री लाल बहादुर छेत्री एवं श्रीमती शकुन्तला छेत्री

शिक्षा : माध्यमिक परिक्षा सन् - १९८८ , स्नातक बी० ए० सन् - १९९३ (सिलिगुड़ी)

पेशा : इलेक्ट्रोनिक, ओंकार ब्रदर्श, कालेबुङ

# एक रुपियाँ

हाम्रो परिवारका उमेश दाइसित प्रायः मेनरोडमा भेट भइबस्छ | दाइ साह्रै फर्साइला, गफिला साथै मनका सफा हुनुहुन्छ त्यसैले मलाई दाइ साह्रै मन पर्छ | मलाई भनिरहनु हुन्थ्यो, "भाइ, यसो चाखलाग्दा रचनाहरू कुनै विषयमा भए पनि तयार गर्दै गर्नु है हाम्रो स्मारिका चाँड़ै प्रकाशित हुनेछ |" दाइको वचन अस्वीकार गर्नु सकिनँ मैले त्यसकारण मेरो मनमा धेरै कुराहरू खेल्न थाल्यो के विषयमा लेख्ने त? अहिलेको दुनियाँ हेरे अहँ सकिनँ बरू आफ्नो स्कूलमा बिताएका दिनहरू साथी-भाइ, शिक्षक शिक्षिका इत्यादि विषय लिएर साथै तीतो-सत्य ठान्दै एउटा हँसिलो घटनालाई दुइचार शब्दहरू मिलाएर साथी भाइ अनि परिवारका दाइहरूलाई बाँड़चुड़ँ गर्न लागिरहेछु लौ सुन्नुहोस् - "हामी कक्षा छैटों श्रेणी "ए"-मा थियौं |"




सधैं झैं कान्छा दाइले ९.१५-मा घण्टी ठोके टवाङ-टवाङ-टवाङ | सबै साथीहरू आफ्नो आफ्नो श्रेणीमा पस्न थाले | हाम्रो श्रेणीमा श्री पी० एल० सर हातमा रेजिस्टर बोकेर आउनुभयो | उहाँले हामीलाई अंग्रेजी ग्रामर पाठ पढ़ाउनु हुन्थ्यो | हिजो दिन भएको गृहकार्य सुनाउनु पर्ने हुनाले हामीलाई डर थियो कि सोधी पो हाल्नु हुन्छ कि? जस जसले सही उत्तर दिन्छ उ त्यस दिन बाँच्थ्यो नत्र गलत उत्तर भए अघाड़ि आएर आफ्नो पेन्ट उतार्नुपर्थ्यो अनि हात भूँइमा टेकेर घोप्टिनुपर्थ्यो सरकै आफ्नो बेल्ट खोल्नु हुन्थ्यो अनि मजाले बजाउनु हुन्थ्यो | सायद भन्नुपर्दा अहिले यस्तो पनिसमेन्ट कसैले पनि खाएको छैन होला जस्तो लाग्छ मलाई | हामी सधैँ गुरुहरूको आज्ञाकारी भएर बस्यौं | कहिल्यै अनुहार जुझाएर कुरा गरेनौं | हाम्रो भविष्य उज्वल बनाउन उहाँहरूले धेरै वर्ष परिश्रम





गर्नुभयो पसिना बगाउनु भयो। साँच्चै उहाँहरूको आशिषले हाम्रो कुमुदिनी होम्सका दाइहरू हिमालयका शिखरमा पुगे अनि पुगेका पनि छन्। खेलकुदपटि पनि हाम्रा गुरूहरूले खटेका छन्। सबैभन्दा अघाड़ि फूटबलमा कुमुदिनी होम्स थियो। सर्वप्रथम सन् 1955-को 15th August Shield जित्ने कुमुदिनी होम्स हो। सन् १९६०-मा अन्तर्स्कूल टिमहरूलाई विजय गर्दै Calcutta पुगेका थिए सेमिफाईनलमा कुचबिहारसित एक गोलले पराजय भएर पहिलो District Champion भएर आयो। यसरी धेरै वर्ष Kumudini Homes -ले फूटबल खेलमा प्रतिभा देखाएको थियो।

म एउटा कुरा भन्न चाहन्छु अहिलेका भाइहरूले धेरै परिश्रम गर्नुपर्छ खेलकूद साथै पढ़ाइलाई बराबर ध्यान दिए शिखरमा अवश्यै पुगिन्छ अनि शिक्षकहरूले पनि विशेष फूटबल खेलमा कोचिङ दिएर राम्रा राम्रा खेलाड़ीहरू जन्माइदिनुहुने निवेदन गर्दछु।

ए म त भावनामा नै पो डुब्न गएछु, सरी। त्यस दिन पी० एल० सरले हाम्रो कार्यपट्टि ध्यान दिनुभएन। कुरा मार्सल आर्ट पट्टि लानुभयो - "हेर केटा हो! अहिलेको युगमा मार्शल आर्ट गर्नु या जान्नु उत्तम हो। आफ्नो शरीरलाई स्फूर्ति साथै मस्तिष्कलाई तेज राख्छ। तिमीहरूमा Self Defence आँउछ। जापान, चीन, कोरिया, अमेरिका प्रायः देशहरूमा सबैले मार्शल आर्टलाई मान्यता दिइसकेका छन्। त्यसकारण तिमीहरू सबैले मन भित्रबाट इच्छा जगाऊ अनि अघि बढ़ म तिमीहरूको साथ छु।" साँच्चै पी० एल० सर योगा, मार्शल आर्ट खेलकुद इत्यादि पट्टि साह्रै इच्छुक हुनुहुन्थ्यो। यस्तै चर्चा परिचर्चा गर्दै उहाँले अन्तमा भन्नुभयो, "आज १ बजे हाम्रै हलमा मार्शल आर्ट मुभी प्रस्तुत हुन गइरहेको छ, त्यसकारण सबैले एक एक रुपियाँ लिएर आउने खाताकिताबहरू नलिईआउने।" पैसा हुने साथीहरू रमाए नहुनेहरू कालो भैंसी जस्तै देखे।

त्यस समय रुपियाँ एकको ठूलै इज्जत थियो। हाम्रोमा हतपत एक रुपियाँ हुँदैनथ्यो हाम्रो कक्षाबाट एक रुपियाँ नहुने प्रायः निकै नै थियौं। समय बित्दै गयो टिफिन भयो। साथीहरू हल्ला मच्चाउँदै बाहिर निस्किए। पैसा नहुनेहरू घर गएर ल्याउने भए। कोही नहेर्ने भए तर हामी सात भाइ पैसा नहुनेहरू टिफिन समयमा कक्षामा बस्यौं। साथी फिलिपले हेरेको एउटा हिन्दी चलचित्रको कहानी शुरू गऱ्यो सबैले ध्यान दिएर सुन्न थाल्यौं। अन्तमा उसको कहानी समाप्त भयो फिलिपले भन्यो, "कस्तो लाग्यो कहानी?" हामी सबैले "राम्रो लाग्यो" भन्यौ। भरे त उ आफै हाँस्दै भन्यो "मैले यो कथा बनाएर भनेको।" हामी सबैले काँड़े फिलिप भनेर गाली गऱ्यौं। यस्तै दिल्लगीहरू गर्दागर्दै फेरी १.१५ को घण्टी कान्छा दाइले ठोके ट्वाङ ट्वाङ ट्वाङ.........!

सबै साथीहरू आफ्नो श्रेणीमा प्रवेश नगरी स्कूल अफिस अघाड़ि लाइन बनाएर बसे। हामी सात भाइ कक्षाभित्रै बसेर झ्यालबाट हेरि बस्यौं। सबै साथीहरू बिस्तारै हलतिर बढ़े अनि हामी पनि बिस्तारै बाहिर निसक्यौं। हेर्दाहेर्दै सबै हलभित्र पसिसके। हामी पनि लाइन बनाएर हलभित्र पस्न खोज्यौं। झण्डै मारे ठूला दाइहरूले। अब कहाँ जाने? कसलाई भन्ने? अनि मार्सल आर्ट मुभी कसरी हेर्ने? बिस्तारै हलको मूल ढोका बन्द भयो झ्यालको प्रत्येक कालो पर्दा झर्न थाल्यो। हामी पनि बिस्तारै हल पछाड़िपट्टि गयौं। यसो छिर्ने बाटो हेऱ्यौं। भाग्यवश हामीले त्यहाँ नालाछेउमा

एउटा फलामको जाली देख्यौं। सबै मिलेर त्यो जालीलाई भत्कायौं अनि त्यहाँ एउटा प्वाल बन्यो। पहिला साथी फिलिप छिऱ्यो अनि भित्रबाट एक-एक जना आउने इशारा दियो। हामी छ भाइ पालै सिते बिरालो भई भित्र पस्न थाल्यौं। हल भित्रको सिँढ़ी चड़ेर स्टेजको भूँइमा पलँटी कसेर बस्यौं। अघाड़ि सेतो पर्दा झरेको थियो। कता-कता सेतो पर्दा हल्लिन्थ्यो। मनमा डर थियो -यदि त्यो पर्दा माथि उठ्यो भने मार्शल आर्ट मुभी होइन हामी सात भाइको राम्रो मुभी हुने थियो। साथीहरू डरले काँपीरहेका थिए। अँग्रेजी गाना हलको दुवै कुनाको चेन्जरमा गुँजिरहेको थियो। भन्नुपर्दा अहिले पनि मलाई गर्व लाग्छ हाम्रो स्कूलको हल दार्जीलिङ जिल्लामा पहिलो सो पिस नै हो आफ्नै साउण्ड सिस्टम documentry film चलाउने आफ्नै प्रोजेक्टर थियो। साँच्चै स्कूलहरूमा सबैभन्दा राम्रो हल कुमुदिनी होम्स हो। बिस्तारै गुँजिरहेको अंग्रेजी गाना बन्द भयो अनि प्रोजेक्टर चल्न शुरु भयो। सेतो पर्दामा कास्टिङ शुरू भयो।

फिल्ममा वास्तविक भुमि के थियो अनि जात्र र बुझ्नु पर्ने रहस्य के थियो त्यो हामीले स्पष्ट बुझ्नसकेनौं। केवल आवाज स्पष्ट बुझिन्थ्यो कारण हामी पर्दा पछाड़ि बसेका हुनाले फिल्म उल्टा देखियो। करिब एक घण्टाबाद फिल्म समाप्त भयो। सबै निस्कन लागे हामी पनि फेरि बिरालो भई त्यही प्वालबाट पालै सित बाहिर निस्क्यौं। हामी सातै भाइको मुखबाट कुनै शब्द पनि निस्कनसकेन कारण हामो टाउको घुमेको थियो मानौं कुनै बिहे पार्टी खाएर फर्के झैं।

*With Best Compliments from :-*



# Seva Pharmacy

Bagdhara Road, Kalimpong - 734301
Contact (03552) 255782











*Glimpses of*

INTER ALUMNI FOOTBALL TOURNAMENT 2010

ORG. BY. SASONIAN, KALIMPONG







# जवानीको झ्यालबाट

-सहदेव एस० गिरी
भू० पू० छात्र

बुढ़ेसकालको झ्यालबाट
चियाइरहेछ जिन्दगी
केही गर्नै नपाई जवानीमा
समाज र जातिलाई
गाउँ र पहाड़लाई
केही दिन्छु
केही गर्छु भन्दा-भन्दै
केही यसो गर्छु
केही उसो गर्छु
सोच्दा-सोच्दै जिन्दगीमा
जवानी भऱ्याङ्मा चड़ेछ।
मेरो उमेर पो बड़ेछ।

घड़ीको काटासँगै
क्यालेण्डरका पाताहरू पल्टाउँदै,
क्यालेण्डर फेर्दा-फेर्दै
नयाँ लुगा पुरानो भएछ
खोला कति बगेर गएछ
गइसकेछ जवानी
चालै नपाई जीवनमा
आशा र उमङ्ग बोकी मनमा।।

जाँगर, जोश तिमीमा हुँदाहुँदै,
जवानीको त्यो आँट रहँदारहँदै
शारीरिक र मानसिक बल छँदाछँदै
तिमीले समाजलाई केही दिनुछ।
मेरो त......।

अर्ति-उपदेश मात्र बाँड्ने समय आएछ,
आउँछन् यस्तै क्षणहरू जीवनमा।
तब...... त..................
उमेर र जवानी छँदाछँदै,
जीवन रहँदा-रहदै............
केही गर जवानी बित्न नपाई,
तिम्रो त उमेर बाँकी छ,
वर पर थुप्रै साथी छन्,
पछि-पछि हाम्रो जाति छ,
मेरो त............
बुड़ेसकाल अब थाँतीमा छ।







# महाकवि भारवि र उनको महाकाव्य किरातार्जुनीय सरसरी पढ्दा

- देवेन्द्र भट्टराई

भारवि संस्कृत साहित्यका एक प्रसिद्ध महाकवि हुन्। विद्वान् शिरोमणि भारविको स्थान कविहरूको गणनामा प्रमुख छ। यिनको रचनाशैली अत्यन्त सुन्दर तथा अर्थपूर्ण छ। तथा आजपर्यन्त "भारवेरर्थगौरवम्" भन्ने उक्तिलाई चारितार्थ गर्न सक्षम भएको छ। उनको प्राकृतिक वर्णन अतीव रोचक तथा चमत्कारपूर्ण हुने गर्छ। प्राकृतिक वस्तुको सुन्दर चित्रमाण गरेर उनी प्रत्येक प्राकृतिक वर्णनमा नैसर्गिकताको प्रदर्शन गर्न सफल भएका छन्। उनी याचना कार्यलाई अत्यन्त घृणित दृष्टिले हेर्ने भन्ने तथ्य उनको उद्‌गार "धिग्‌विभिन्नबुधसेतुमर्थिताम्"-ले प्रमाणित गर्दछ।

उनका सर्वतोभद्र आदि चित्र-काव्य तथा श्लेषात्मक एकाक्षर क्षर आदि श्लोकहरू अतीव सुन्दर छन् र यस विषयमा मल्लिनाथले भनेका पनि छन्-

"नारिकेलफसंनिभं वचो भारवेः सपदि यदिभज्यते।
स्वादयन्तु रसगर्भनिर्भरं सारमस्य रसिका
यथेप्सितम्।।"

उनलाई राजनीतिको प्रशस्त अनुभव थियो। उनको वंश विवरण गर्ने कलालाई कवि क्षेमेन्द्रले अद्वितीय ठानेका छन्।

यस्ता बेजोड़ कवि भारविको समय निर्धारण भने विवादास्पद रहेको छ र प्राप्त लेखहरूका आधारमा यस्तो विवरण प्राप्त गर्न सकिन्छ। भियेना ओरिएण्टल सोसाइटीको तृतीय भागको पृष्ठ १४४-मा हरमन जोकोबीले भारवि काल छैंटौ शदाब्दीको पूर्ण भाग मानेका छन्। सातौं शताब्दीका कवि वाणभट्टले आफूभन्दा अघिका प्रायः सबै कविहरूको उल्लेख आफ्नो कृति "हर्षचरित" नामक ग्रन्थमा गरेको भए पनि भारविको बारेमा नलेखेको हुनाले हरमन जेकोबीको अड़कलको पुष्टि गर्न सकिन्न। यसर्थ वाणभट्टअनुसार भारवि सप्तम शताब्दीपछिका मात्र कर लाग्दछ। तर दुर्विनीतले किरातार्जुनीय व्याख्याको परिचयमा भारवि काललाई स्पष्टरूपमा (५५०-६०० ई०) भनेका छन्। आफ्नो संस्कृत साहित्यको इतिहास भन्ने ग्रन्थमा प्रोफेसर वलदेव उपाध्यायले भारविकाललाई षष्ठ शताब्दीको आसपास भनेर उल्लेख गरेका छन्। पण्डित् सीताराम जयराम जोशी तथा विश्वनाथ शास्त्री भारद्वाजद्वारा प्रस्तुत संस्कृत साहित्यको संक्षिप्त इतिहासमा भारविको समय षष्ठ शताब्दीको उत्तरार्द्ध ठहराएका छन्। एहोल शिलालेखमा रविकीर्तिले कालिदास र भारविको उल्लेख गरेका छन्।

"योनायोजी नवेऽश्मस्थिरमर्थविधौ विवेकिना
जिनवश्म।
स विजयतां रविकीर्तिः कविताश्रित-कालिदास
भारविकीर्तिः।।
।। शिलालेखोऽयम्।।"





यस शिलालेखको समय ६३४ ई० हो र आज पनि एहोल ग्राममा अवस्थित जैन विहारमा उपलब्ध छ। यस शिलालेखको आधारमा भारविकाल पष्ठ शताब्दीको उत्तरार्द्ध नै ठहऱ्याउनु मिल्छ। सन् १९२४-मा के० रामनाथ शास्त्री तथा रामकृष्ण कविद्वारा दक्षिण भारती ग्रन्थमालाको तृतीय पुष्पमा प्रकाशित दण्डी कवि प्रणीत "अवन्ति सुन्दरी कथासारमा भारवि कौशिक गोत्रोत्पन्न अचलपुर निवासी नारायण स्वामीका पुत्र थिए भन्ने उल्लेख पाइन्छ"-तथा:-

"अस्त्यानन्दपुरं नाम प्रदेशे पश्चिमोत्तरे।
आर्यदेशशिरोरत्नं यत्रासन् वहवो नृपाः।।
ततोऽभिनिः सृता काचित कौशिक ब्रह्म सन्ततिः।
सुरलोकादिवायान्ती पुण्यतीर्था सरस्वती।।
नासिकयभूमावौत्सुकथान्मूलदेवनिवेशिताम्।
प्राप्याचलपुरं........रीमधिवसत्यसौ।।
तस्यां नारायण स्वामिनाम्ना नारायणोदरात्।
दामोदर इति श्रीमानादिदेव श्वाभवत्।।
स मेधावी कविर्विद्वान भारविः प्रभवो शिराम्।
अनुरूध्याकरोन्मैत्री नरेन्द्र विष्णु वर्धने।।"

महाकविको यौटा नाम दामोदर रहेछ र उनी दक्षिमात्य ब्राह्मण तथा महाराज विष्णुबर्धनका सभापण्डित भएको तथ्य उपर्युक्त श्लोकबाट पुष्ठ हुन्छ। तर सबै विद्वान्हरू यस तथ्यलाई मान्यता दिने पक्षमा छैनन्। धेरैको मतअनुसार भारवि दक्षिण भारतका निवासी थिए र दण्डीका चतुर्थ पूर्वज दामोदरसित उनको घनिष्ट मित्रता थियो तथा दक्षिण भारतका चालुक्य-वंशी महाराज विष्णुवर्धनका सभापण्डित् थिए।

किरातार्जुनीयमा अगह्र सर्ग छन्। महाकाव्यमा आवश्यक समस्त लक्षण यसमा विद्यमान् भएको हुनाले यसलाई महाकाव्य मानिन्छ। यस महाकाव्यलाई वृहत्त्रयो काव्यमध्ये अन्यतम् मानिन्छ। यसको कथावस्तु महाभारतको वनपर्वसित आधारित छ। यो काव्य प्रथममा "श्री" शब्दले विभूषित छ तथा प्रत्येक सर्गान्तमा "लक्ष्मी" शब्दको संनिवेश पाइन्छ। यस काव्यमा इन्द्रकील-पर्वतमा दिव्य अस्त्रलाभका निमित्त तपस्या गर्ने पाण्डुपुत्र अर्जुनको किराताधिपति भगवान् शंकरसित भएको युद्धको वर्णन गरिएको छ। यसै युद्धलाई महत्त्व दिएर कविले यस काव्यलाई रोचक तथा विस्तृत बनाएका छन् र किराताधिपति भगवान् शंकर र अर्जुनका बीचको युद्धलाई मुख्यतया ध्यानमा राखेर नै यसको नाम पनि "किरातार्जुनीय" राखेका छन्। यस काव्यमा राजनीतिको प्रदर्शन गर्दै कविले साम, दाम, दण्ड तथा भेदलाई गम्भीरतापूर्वक वर्णन गरेका छन्। भारतवर्षका प्राचीन नारीहरूका विचार कति गम्भीर थिए भन्ने तथ्य कविले द्रौपदीका मुखारवृन्दबाट प्रस्फूटित उक्तिबाट स्पष्ट पारेका छन्। भारविले पात्र अनुरुप नै शब्द चयन गरेर प्रस्तुत गरेको प्रमाण भीमद्वारा प्रयुक्त उक्तिबाट विदित गर्न सकिन्छ। त्यस्तै विवेचनाका विषयमा कुनै कार्य आरम्भ गर्नुभन्दाअघि पूर्णरुपले फलाफलको विवेचना गरेर मात्र अग्रसर हुन प्रवृत्त हुनुपर्छ भन्ने तथ्य युधिष्ठिरका निम्न उक्तिबाट प्रमाणित हुन्छ -

"सहसा विदधीत न क्रियामविवेकः परमापदां पदम्।
वृणते हि विमृश्य कारिणं गुणलुब्धाः स्वयमेव सम्पद।।"

(स० २ श्री ३०)





(विवेचना नगरी कुनै काम थाल्नु हुँदैन। सम्यक् विचार नगर्नु परम् आपत्तिको उत्पादन हुनु हो। गुणमाथि स्वतः समर्पण गर्ने साधनहरू विचारवान् पुरुष स्वयं मनोनित गर्ने गर्छन् अर्थात् काम गर्नुभन्दाअघि फलाफलको विचार गर्नै पर्छ)।

यस काव्यमा प्राकृतिक दृश्यहरूको वर्णन अत्यन्त मनमोहक तथा मनोरम छ। प्राकृतिक दृश्यमा कवि निमरन थिए भन्ने तथ्य गरेको सन्ध्या वर्णन सम्बन्धी निम्न श्लोकबाट प्रस्फुटित हुन्छ :-

मध्यमोपलनिभे लसदंशावेकतश्च्युतिमुपेयुषि भानौ।
धौरूवाह परिवृतिविलोलां हास्यष्टिमिव
वासरलक्ष्मीयम।

(मालाको मध्यमणि सदृश किरामहरूद्वारा शोभित भास्करले एक दिशालाई परित्याग गरेपछि आकाश रुपीवालाले मध्यान्नकाल अतिक्रमण गरेकोले गमनशीला दिनश्रीलाई माला समान धारण गरे।)

यस श्लोकमा "परिवृत्ति विलोला"-को प्रयोग अत्यन्त मनोहर भएको छ। यसको तात्पर्य यस्तो पनि हुनसक्छ-जसरी जप गर्दा माला हल्लन्छ त्यसै गरी चपला लक्ष्मी पनि चञ्चल भएकी छन्।

कविले ठाउँ ठाउँमा पर्वत, जलाशय, कुञ्ज, नदी आदिको अत्यन्त रम्य वर्णन गरेका छन्। चित्रकाव्य, यमक, अनुप्रास, एकाक्षर श्लोकको प्रयोग पञ्चदश सर्गमा अधिक सुन्दर रूपमा गरेका छन्। यो सर्ग उपेक्षाकृत कठिन पनि मनिन्छ।

एकाक्षर श्लोकको यौटा दृष्टान्तः-

न नोननुन्नो नुन्नोनो नानानानानु।।
नुन्नोऽनुन्नो ननुन्नेन नानेनानुन्न नुन्न नुत्।।

यस श्लोकले यस लेखको सठीक प्रस्तोतालाई यति विहन आकर्षित गर्‍यो कि यसको सठीक विस्तृत अर्थका निमित्त धेरै संस्कृतका प्रकाण्ड विद्वान्हरू समक्ष पुग्नुपर्‍यो। यसै क्रममा इटाँभट्टा निवासी सहृदय श्रीयुक्त भक्तिप्रसाद ढुंगानाले पत्राचार गरेर उहाँका भानिज-विण्डेश्वर विद्यापीठ, महेन्द्र संस्कृत विश्वविद्यालय धरानका स्वनामधन्य प्राध्यापक श्रीयुक्तीका प्रसाद शर्माबाट प्राप्त सामग्री उपलब्ध गराउनु भयो र त्यसै मामग्रीलाई यहाँ प्रस्तुत गरेको छु यथावत्। दिने र दिलाउने दुवैजना धन्यवादका पात्र हुनुहुन्छ। "(क) यस्ता श्लोकमा कविको ध्यान शब्द चमत्कारतिर नै विशेषतः जान्छ, त्यसैले अर्थ- सौन्दर्य पछि पर्दछ र पनि कविले यहाँ अर्थको गरिमालाई पनि कायम राख्न राम्रो समायोजन गरेका छन्।"

"(ख) यस श्लोकको प्रसङ्ग छ :- इन्द्रकील पर्वतमा बसेको एउटा वीर-तपसी (अर्जुन)-ले जब आफ्ना सम्पूर्ण सेनालाई परास्त गरी भाग्न वाध्य तुल्यायो, भग्नमान, हतदर्प, खिन्न आफ्नो सेनालाई, सेनापति सेनानी-शुह, स्कन्द यसरी सम्झाउँछन् :-"

(ग) श्लोक अलि गुढ़ छ, तैपनि सुप्रसिद्ध टीकाकार मल्लिनाथअनुसार अर्थ यस्तो छ। त पहिले पद-विभाजन (१४ पढ़छन्)

न ना ऊननुन्न, नुन्नोनः ना अना, नानाननाः ननु।
नुन्नः अनुन्नः ननुन्नेनः, नअनेनाः नुन्ननुन्ननुन्।। इति।।

(घ) यस कवितामा स्कन्दले खिन्न सेनालाई जम्मा चार कुरा सम्झाएका छन्-पूर्वार्द्धमा दुई र उत्तरार्द्धमा दुई, त अन्वय अनुसारी व्यवाख्था (अर्थ) अब हेरौं -

१. (हे) नानाननाः = नाना - नैकविधानि, विविधाकाराणि, मुखानि-आननोनि येयाम् (यहाँ संझौं





शिवजीको त्यो प्रथम सेनामा कस्ता कस्ता मुख भएका वीर थिए होलान्)

२. ऊ ननुन्नः = ऊ नेन-स्वस्मान न्यूनेन-हीनबलेन, नुम्न :-

विद्धः पराजित इति (एतादृशो वीरः)

३. न = नैव,

४. ना = पूरूषः (वीर इति) | आफूभन्दा दुब्लाले जितिएको, मान्छे, बीर मान्छे गनिन्न | त्यहाँ तिमीहरू आफूभन्दा बलिया बीर तपसीले जितियौ, त्यसैले तिमीहरूको वीरता कायमै छु, दुःख मान्नु पर्दैन भन्ने भावको यौटा कुरा भयो |

५. नुन्नोन = नुन्न :- विद्ध, पराजित, ऊनः = स्वस्मात् न्यूनः, निर्वलः येन सः (स्पतादृशः)

६. ना = पुरूषः (बीरः) अपि

७. अना = न ना इति अना, अपुरूष (नवीरः) एवं |

यसको अर्थ भयो जुन वीर आफूभन्दा कमजोरलाई हराएर, म बहादुर मान्छे हुँ भन्ठान्छ त्यो पनि ठीक हैन (तिमीहरू हारे पनि जिते पनि आफूभन्दा वीर (तपसी)-सँग भिड्न पुगेकाले वीरै हौ, दुःख मान्नु पर्दैन, यो भयो दोस्रो कुरा) | अब तेस्रो कुराः

८. ननुन्नेन :- = नुन्नः विद्धः (पराजितः) इनः = स्वामी (सेनापतिः) यस्यसः नुन्नेनः स न भवति इति अनुन्नेना, अर्थात् जुन बीर या सेनाको मालिक, शत्रुपक्षबाट पराजित भएको, गरिएको छैन, त्यस्तो बीर वा सेना

९. नुन्नः- (शत्रुणा-विरेण) विद्धः (पराजितः) अपि

१०. अनुन्न = अविद्ध (अभिजितः) एवं शत्रुले विद्ध गरिएपनि पराजित भएको ठहर्दैन (सेनापति न हारूञ्जेल, हार जितको फैसला हुन्न त्यसैले यहाँ पनि आफू तिमीहरू खिन्न हुन पर्दैन)

अब चौथो-पछिल्लो कुरा -

११. नुन्ननुन्ननुन् - अति शयेन नुन्नाः विद्धाः, पीडिताइति, तान् नुदति-पीड्यतीति-नुन्ननुन्ननुत् एतादृशः अपि वीरः

१२. अनेना-न विध्यते, एनस् (पापम्) दोस्रो यस्य निदुर्ण्ट इति यावत् (दोष-रहितः)

१३. न-नैव भवनीति शेषः

१४. ननु-वितर्के हो वा किनकि हो

अर्थात् आफूभन्दा कमजोर रहेकाले जसले हाऱ्यो त्यस्ता कमजोरलाई हारिसकेकालाई लघार्दै दुःख दिँदै पछि लागि खेद्दै जाने, खेदो गर्ने मान्छे वीर हैन, दोषी नै हो, दोषी ठहर्छ | तर यहाँ यो तपसीले हामीलाई आफ्नो नजीक (आश्रम)-बाट हराई धपाई पठायो पछि लागेन, त्यसैले त्यो तपसी दोषी पापी पनि हैन वीर हो भन्ने यस चौथो खण्डको भाव हो | त संक्षेपमा यस श्लोकको प्रसङ्गअनुसार अर्थ यति हो |

यस काव्यमा अर्जुन नायक छन् भने प्रतिनायक किराताधिपति शंकर छन् | यो वीर रस प्रधान काव्य हो | यस काव्यमा दुतमुख कथन तथा शंकरका वचन उद्दीपन, विभाग, नायक तथा प्रतिनायकहरूको धनुरादि आकर्षण आदि अनुभाव, धैर्य क्षमादि अविचारी भाव, उत्साह स्थायी भाव, श्रृङ्गारादि रस अङ्ग पञ्चाली रीति, प्रसाद गुण आदि समावेश छन् | यस महाकाव्यको उपलब्धि भगवान् शंकरबाट अर्जुनवाई पाशुपतास्त्र प्रदान हो |

**तिनसुकिया (असम)**





# कालेबुङको कुमुदिनी विद्याश्रमः मेरो स्मृतिमा

- तारानाथ सिंह विश्व
भूतपूर्व छात्र

कुरो १९७३ साल फरवरी महीनाको हो। म भर्खरै चन्दरलोक क्षेत्रस्थित गोलधरे जुनियर बेसिक स्कूलको पाँचौ श्रेणी उत्तीर्ण गरी, छैटौं श्रेणीमा भर्ना हुन कुमुदिनी विद्याश्रम गएका थिएँ। त्यस समय हाम्रा जुनियर बेसिक स्कूलका प्रधान अध्यापक श्री दशरथ प्रसाद घिमिरे हुनुहुन्थ्यो। उहाँले नै हाम्रो ब्याचलाई "तिमीहरू सबै कुमुदिनी विद्याश्रम जानू, त्यो स्कूल खूबै राम्रो छ भन्नु भएथ्यो"। उहाँकै उचित मार्गनिर्देशनमा र सिफारिशमा मलाई पिताजीले त्यहींभर्ना गरिदिनुभयो। त्यसपछि कुमुदिनी विद्याश्रमको छैटौं श्रेणीदेखि मेरो हाई स्कूलको यात्रा शुरु भएको थियो। त्यस समय कुमुदिनीका प्रधान अध्यापक हुनुहुन्थ्यो श्री टीकाराम शर्मा, जो अवकाश प्राप्त गरी जान लाग्नुभएको थियो। उहाँले कुमुदिनी विद्याश्रमलाई आफ्नो बल-बुद्धि र मेहनतले उच्च शिखरमा पुऱ्याउनु भएको थियो। टीकाराम सरलाई देख्नेबित्तिकै हामी डरले थुर् थुर् भई उहाँको सामुन्ने पर्दैन थियौं। हुन त उहाँ बाघ हुनुहुन्न थियो। तर उहाँको व्यक्तित्व नै त्यस्तो थियो। सुलुक्क परेको गोरो अनुहार, चटक्क परेको कालो जुँगा, चिटिक्क परेको दौरा सुरुवाल, कोट र ढाका टोपी लगाउनु भएका अनि आत्मविश्वासले भरिएको ओजपूर्ण मुहार देख्दा हामी छेउ पर्न डराउँथ्यौं। भर्ना भएपश्चात् स्कूलको ठूलो सभागृहमा सबै विद्यार्थीहरू सम्बोधन गर्दै स्कूलको अनुशासन र नियमहरू विषयमा उहाँले जुन ओजपूर्ण वक्तव्य दिनुभयो त्यसको छाप अझ ममा छ। पाठशालामा भइरहने सानासाना घटनादेखि ठूलो भन्दा ठूलो घटनालाई लिएर उहाँ गम्भीरतापूर्वक विचार गरेर उचित निर्णय लिनुहुन्थ्यो। त्यसपछि यथाक्रमले हामी पढ्दै गयौं। तर बीचैमा उहाँ आफ्नो प्रिय पाठशालालाई सधैंको निम्ति विदा दिएर जानुभयो। त्यस समय हामी खूबै दुःखी भएका थियौं। उहाँपछि हाम्रा प्रधान अध्यपक हुनु भो श्री सी० बी० राणा। उहाँ पनि धेरै पढ़ेका खुबै गोरा अनि देब्रेदेखि दाहिनेतिर फर्काएर कोरेको कालो केश, सुन्दर रुप, त्यमाथि सुट लाएर हँसिलो अनुहार लिएर स्कूलमा प्रवेश गर्दा पक्का हिरो देखिनुहुन्थ्यो। उहाँ पनि पाठशालाका नियम र अनुशासनमा कठोर हुनुहुन्थ्यो। सोमबारैपछि स्कूलहलमा हुने एसेम्ब्लीमा नियमित रुपले उपस्थित भई विद्यार्थीहरूको उत्तरोत्तर विकासको निम्ति विविध जानकारी अनि अनुशासन र नियमहरू विषय अवगत गराउनु हुन्थ्यो। पढ़ाइको क्षेत्रमा विद्यार्थीहरूले लापरवाही गरेर तोकिएको प्रतिशतभन्दा अलिकति पनि कम अङ्क ल्याएमा कन्सिडरेसन गरी पास गर्ने कुरै थिएन। त्यसैले होला त्यस समय एच० एस० -को परिणाम खूबै राम्रो हुन्थ्यो। यसै क्रममा भन्नुपर्दा, अन्य सह-शिक्षक शिक्षिकागण पनि खूबै इमान्दार र लगनशील हुनुहुन्थ्यो। उनीहरूमध्ये मेरो निम्ति उल्लेखयोग्य गुरुजनहरू हुन् - श्री खगेन्द्र सोङ्गपाङ्गबे, श्री पी० एल० सुब्बा, स्व० रूपराम देवान (आर० आर०

देवान) स्व० भरत थापा, श्रीमती पी० एम० सुब्बा, श्री गौतम सर, श्री एस० के० साहा, श्री राम आसन प्रसाद (आर० ए० पी० सर), स्व० बी० के० पाण्डे, स्व० एस० के० प्रधान, श्री पासाङ छिरिङ, श्री सी० जे० पी० (चन्द्रज्योति प्रधान) सर, श्री सी० के० सर, श्री जोन सर, स्व० टी० बी० राई, श्री कुमार सर, श्री पी० सी० अग्रवाल, स्व० हरि सर आदि।

उपर्युक्त सबै गुरुजनले विद्यार्थीहरूको सर्वाङ्गीण विकासमा खूबै महत्त्वपूर्ण योगदान पुऱ्याएका कसैले नकार्न सक्दैन। ती सरहरूमध्ये मेरो स्मृतिमा रहेका सरहरू को कस्ता थिए, सो यसप्रकार छ :-



श्री खागेन्द्र सोङ्गपाङगबे सर (हाल अवकाश प्राप्त)-ले हामीलाई १९७२-७३, ७४ -मा नवौं, दसौं र एघारौं श्रेणीमा अङ्ग्रेजी व्याकरण पढ़ाउनु हुन्थ्यो। त्यस समयको हाई स्कूल इंग्लिस ग्रामर पुस्तबाट प्रायः चालीस-पचासवटा अभ्यास मालाबाट होमवर्क दिनुहुन्थ्यो। ती सबै उनले खूबै सहजभावमा कमन क्लास (ए० बी० सी०)-को टेबलबाट धारावाहिक, अङ्ग्रेजीमा करेक्सन गरिदिनुहुन्थ्यो। हामी आफ्नो खाता हेर्दै भूलहरू सुधार्ने गर्थ्यौं। उनी हाम्रो ३४१ एन० सी० सी० टुपका अफिसर पनि हुनुहुन्थ्यो। ३:१० बजी स्कूल छुट्टी भएपश्चात् हामी एन० सी० सी० परेड गर्थ्यौं। सर नियमित रुपले उपस्थित भई हामीलाई उचित मार्ग निर्देशन एवं एकता, अनुशासन र एन० सी० सी०-को महत्त्वबारे धेरै महत्त्वपूर्ण कुराहरूको जानकारी गराउनु हुन्थ्यो। उहाँ स्वयं पनि अति नै अनुशासित र व्यावहारिक हुनुहुन्थ्यो। परेड हुँदा कसैले अनुशासन भङ्ग गरे कठोर सजाय पनि पाइन्थ्यो। उहाँले भन्ने गर्नुहुन्थ्यो : "I shall give you such a blow that you cannot forget in your life" त्यही डरले गर्दा होला हामी अहिलो व्यावहारिक जीवनमा केही गर्न सक्षम छौं।

उहाँ पनि हेर्दा कठोर परिश्रमी, आत्मविश्वासले परिपक्क एकजना आर्मी अफिसरजस्ता देखिनुहुन्थ्यो। तर इमान्दार विद्यार्थीहरूलाई खूबै माया गर्नुहुन्थ्यो। उहाँ हामीलाई प्रायः यसो भन्नुहुन्थ्यो "तिमीहरूले खोर्सानी रोपेर मेवा टिप्न सक्दैनौ। जीवनमा केही बन्न चाहन्छौ भने अहिलेदेखि नै लगनशील भएर केही गर।" गुरुहरूमा कहिल्यै भुल्न नसकिने हुन् - श्रीमति पी० एम० सुब्बा। मलाई जहाँसम्म थाहा छ, उहाँले आइतबार छोड़ेर कुनै दिन क्लास मिस गर्नुहुन्थ्यो। सन् १९६६ मा उहाँ





हामीलाई छैटौं श्रेणीमा स्वास्थ्य शिक्षा (हाइजिन) पढ़ाउनु हुन्थ्यो | केही होचो कदमा सफा र सुन्दर साड़ी अनि केही गोलाकार मुहारमा प्राय: कालो गगल्स लाउनु हुन्थ्यो उहाँले | उहाँ खूबै कर्तव्यनिष्ठा र कड़ा मिजाजकी हुनुहुन्थ्यो | श्रेणीमा पस्नेबितिक्कै उहाँ हाम्रो साफ-सफाइ राम्ररी नियाल्नु हुन्थ्यो | त्यसपछि स्वास्थ्य सफाईसम्बन्धी उचित ज्ञान एवं, सरसल्लाह दिनुहुन्थ्यो | हामीलाई व्यक्तिगत र पारिवारिक स्वास्थ्यसम्बन्धी नोट लेखाउनु हुन्थ्यो |

श्यामपटमा उहाँको सुन्दर हस्ताक्षर बनाउने चेष्टा गर्थ्यौं | हाम्रो हस्ताक्षर सुन्दर बनाउने र स्वास्थ्य रहने कलामा उहाँको ठूलो भूमिका छ | उहाँ भन्नुहुन्थ्यो – "तिमीहरू देब्रेपट्टि फर्किएर बेसी नसुत्नू मुटुलाई बेसी भार पर्छ, रक्त सञ्चारणमा बाधा पर्छ |" आज पनि देब्रे फर्केर सुत्दा झल्याँस्स गुरुमाको याद आउँछ | यस्ता असंख्य मन्त्रहरू उहाँले हामीलाई दिनुभएको छ |

गौतम सरले सातौं श्रेणीमा हामीलाई इतिहास पढ़ाउनु हुन्थ्यो | हेर्दा धेरै चंखो देखिने गौतम सर चौकीमा बसेर मुण्टो र हात यताउता हल्लाउँदै खूबै रोचक प्रसङ्गहरू प्रस्तुत गर्दै पढ़ाउनु हुन्थ्यो | पठन-पाठनकै क्रममा उहाँले एकदिन प्रस्तुत गर्नु भएको प्रसङ्ग म कहिले भुल्न सक्दिनँ | अलेक्जान्डर र राजा पुरुको सन्दर्भमा उहाँले भन्नुभयो "लड़ाइँको मैदानमा राजा पुरु नराम्रो घतले पराजित भए | तिनलाई तानेर अलेक्जाण्डरसमक्ष पुऱ्याइयो | अलेक्जाण्डरले पुरुलाई प्रश्न गरे, "तिमी अब घायल र असहाय छौं | म तिमीलाई जे गर्न पनि सक्छु | भन अब तिमी मबाट कस्तो बर्ताउको आशा गर्छौं?" मृत्यु शैय्यामा पनि राजा पुरुले जवाब दिए "राजाले राजासँग कस्तो बर्ताउ गर्नुपर्छ, त्यस्तै गर्नुहोस्," यो सुनेर अलेक्जाण्डरको होस खुल्यो | उनले राजा पुरुलाई सम्मान गर्दै सबै फर्काइदिए |" यति भनेर गौतम सरले हामीलाई भन्नुभो, "तिमीहरूले पनि एउटा कुरा याद राख, त्यो हो मानिस सबै एउटै हुन् | मानिसले मानिससँग कस्तो व्यवहार गर्नुपर्छ, त्यो जानेपछि अरू कुरा जान्नु जरुरी छैन |" उनको यो शिक्षा मेरो हृदयमा आजसम्म गाड़िएर बसेको छ | हुन त गौतम सरले भुलिसक्नुभो होला | तर आजकल पनि उहाँलाई बाटोमा देख्दा त्यही कुरा सम्झन्छु | हुन पनि ठिकै हो जब मानिसले मानिसलाई परस्परमा कस्तो व्यवहार गर्नुपर्छ भन्ने जानेपछि अरू के पो बुझ्नुपऱ्यो र?

हाम्रो वाणिज्य विभागका शर्टह्याण्ड र टाइपिङ अनि बंगला पढ़ाउनु हुने सर श्री एम० के० साह | उहाँले आठौं श्रेमीसम्म हामीलाई बंगला पढ़ाउनु हुन्थ्यो अनि उच्च श्रेणीमा शर्टह्याण्ड र टाइपिङ | "हरिणटिर नाम कि छिंल? हरिण कि घाँस खाय?" आदि प्रशनहरू सोद्धै पढ़ाउनु हुन्थ्यो | उहाँ भन्नुहुन्थ्यो – "समय छँदै बंगला पनि सिकिहाल | यसलाई हेला नगर |" साँच्चै अहिले मेरा कतिपय साथीहरू, मधेसतिर बंगला बोल्दा छेउमा लाटाजस्तै उभिरहन्छु | साँच्चै कुनै पनि भाषा सिक्नु नराम्रो होइन | हाल जुन जुन नेपाली पाठशालाहरूमा बंगला पढ़ाइन्छ त्यहाँका विद्यार्थीहरूले राम्ररी सिक्नसकेपछि त्यसको मिठो फल प्राप्त हुन्छ | हामीलाई तीनवर्षसम्म एम० के० सरले टाइपिङ र शर्टह्याण्ड खूबै राम्ररी सिकाउनुभयो | १९७५-को हाम्रो एच० एस०-को ब्याचमा यस विषयमा सर्वश्रेष्ठ अंक देखेर सरले मलाई जलपाइगुढ़ी केजमा स्टेनो-टाइपिस्ट पढ्न जाने सुझाउ दिनु भएथ्यो तर मेरो आर्थिक चपेटले गर्दा जान सकिनँ | हामीलाई छैटौं श्रेणीमा अंग्रेजीको रिड़िङ फर प्लेजर र नवौं र दशौं श्रेणीमा नेपाली दोस्रो





पत्र पढ़ाउनु हुन्थ्यो श्री पी० एल० सुब्बा सरले। पाठशालाको छुट्टी भए -पश्चात् हामीलाई एन० सी० सी०को परेड आदि गराउनु हुन्थ्यो। उहाँ ६१६ टुपका अफिसर हुनुहुन्थ्यो। हेर्दा कड़ा मिजासका गोर्खा अफिसर देखिने पी० एल० सर आफ्नो कर्तव्य क्षेत्रमा धेरै इमान्दार, परिश्रमी र लगनशील व्यक्ति हुनुहुन्थ्यो। हामीलाई Cunning Fox कथा पढ़ाउँदा हत्केलामा सानो कागजको टुक्रा राखी Fox भन्न लाउनु हुन्थ्यो। Fox उच्चारण गर्दा जसले कागज उड़ाउँथ्यो त्यसको कन्सिरीको केश तानेर फुकेर उड़ाउनु हुन्थ्यो। केटाहरू डरले गर्दा "पक्स पक्स" भन्थे। एकपल्ट "स्कीम" लाई "सचेम" पढ्दा मलाई भुतुकै पार्नुभएको छ। अंग्रेजी साहित्यमा उच्चारण विषय हामीलाई धेरै उदाहरण दिएर सचेत गराउनु हुन्थ्यो। त्यसै अंग्रेजी पढ्दा कठिन शब्द आए म पी० एल० सरलाई सम्झान्छु। एन० सी० सी० परेड खेल्दा अनुशासन भङ्ग गर्ने र अट्टेरी गर्नेलाई धुलाइ गर्दै अघिपट्टि ल्याएर एक्लै खेलाउनु हुन्थ्यो। आज पनि स्कूलमा नानीहरूलाई परेड खेलाउँदा पी० एल० सर र खगेन्द्र सरको याद आउँछ। त्यसरी दुःख गरेर सिकेका थियौं र नै हामीले पछिबाट एन० सी० सी० पास गरेका प्रमाणपत्र पाएका छौं। त्यस समय हामीलाई सातौं श्रेणीमा अंग्रेजी ग्रामर पढ़ाउनुहुन्थ्यो स्व० रूपाम देवान सरले, संक्षेपमा आर० आर० देवान सर। उनी माथिल्लो देब्रेपट्टिको दाँत तल्लो ओंठलाई अलि अलि उभो तान्दै, हातमा बाँसको हरियो सिर्कुना लिएर होमवर्क हेर्दै प्रत्येकको डेस्कमा निरीक्षण गर्नुहुन्थ्यो।

होम वर्क नगरी आउने विद्यार्थीलाई उहाँ हेर्नै चाहनु हुन्न थियो। त्यो सिर्कुनाले चाक र ढाड़मा मनपरी हिर्काउनु हुन्थ्यो। त्यो डरले हाम्रो होमवर्क सधैँ अप टु डेट हुन्थ्यो। ती सब कारणले होला हामीलाई बोर्डको एच० एस० पास गर्न गाह्रो परेन। देवान सर पाठशालाको प्रत्येक कार्यक्रममा खूबै सक्रिय भएर कार्य गर्नु हुन्थ्यो। पाठशालामा साहित्यिक, सांस्कृतिक, तर्क प्रतियोगिता, सभा आदि हुँदा रङ्गमञ्चको सजावट, बत्तीको प्रबन्ध आदिको व्यवस्थापन कार्य कहाँ स्वयं नै गर्नुहुन्थ्यो। हामीलाई पनि सिकाउनुहुन्थ्यो। छिटो-छरितो, सक्रिय, हँसिलो र उदार हृदय भएका देवान सरलाई हामी धेरै माया गर्थ्यौं। त्यसरी नै हामीलाई दसौं श्रेणीमा कथा कुसुम पढ़ाउनु हुने नेपालीको अर्को आदरणीय सर हुनुहुन्थ्यो स्व० भरत थापा। खेलकुदमा धेरै चासो राख्ने उहाँ हाम्रा फुटबल कोच पनि हुनुहुन्थ्यो। राता राता वर्णको हँसिलो र गोलाकिलो शिरमाथिको घुङ्गरिएको केशको पोथ्रा दाहिने हातले बेला बेला सुमसुमाउँदै देब्रे हातमा पुस्तक लिएर "चामेकी स्वास्नी गौंथली साह्रै मुखाले थिई" भन्दै रोचक ढंगले कथा वाचन गर्दै, कथामा भएको कठिन शब्दहरू सरल भाषामा उतार्दै अति मजाले पढ़ाउनु हुन्थ्यो। विद्यार्थीहरूलाई बीचबीचमा प्रश्नहरू तेर्स्याएर पाठमा संलग्न राख्नु उहाँको विशेषता थियो। स्कूलमुनिको ग्राउण्डमा बाँसको छोटो छोटो खम्बा केही दूरत्व राखी गाड़ेर हामीलाई जिगज्याक पाराले गोरी बढ़ाउन लाउनु हुन्थ्यो साथै रनिङ्ग फेल्टहरू हान्न र फुटबलका नियमहरू बताउनु हुन्थ्यो। पहाड़ेको भोजन सन्तुलित हुँदैन, फुटबल खेलेर केटाहरू कमजोर अनुभव गर्छन् भनेर उहाँले हामीलाई भन्नुहुन्थ्यो - "केटा हो, ढेंड़ो-रोटी दूध-अण्डा चैं मजाले खानु है।" एकपल्ट सेण्ट अगस्टिन स्कूलसँग फुटबल हारेर निस्कँदै सरले "फ़लामको बुट लाएको जस्तो गरेर खेल्दा पनि कहिले जित्छ" भन्नुभयो।

पछि घरमा गएर पलङ्गमा सुत्दा, राम्ररी बुझेर हासें। हुन पनि त्यो दिन, पानी परेर बालुवै सरीको मेला

ग्राउण्डमा बुट भिजेर फलाम जस्तै भएको थियो। जितेको भए सरले के भन्नुहुन्थ्यो, त्यो थाहा भएन।

अर्को स्कूलको सबैभन्दा अग्लो सर हुनुहुन्थ्यो आर० ए० प्रसाद सर (रामा आसन प्रसाद)। उनी हामीलाई बिजिनेस अर्गनाइजेसन (B.O.) र अर्थनैतिक भूगोल पढ़ाउनु हुन्थ्यो। उनी सरल, मृदुभाषी, कर्तव्यनिष्ठ र मिलनसार हुनुहुन्थ्यो। मैले तिनीसँग केही समय टिउसन पनि पढ़ें। पाठशालामा छँदादेखिन् तिनले हामीलाई वचत गर्ने बानी सिकाउनु हुन्थ्यो। स्कूल मार्फत् नै उनले पोस्ट अफिससँग सम्पर्क राखी इच्छुक विद्यार्थीहरूको बचत पास बुक खोलेर नियमित रूपले स्कूलमै विद्यार्थीहरूबाट पैसा उठाएर पोस्ट अपिसमा राखिदिनु हुन्थ्यो। आवश्यक पर्दा हामी सजिलैसित सरबाट रूपियाँ प्राप्त गर्थ्यौं। पछि एच० एस० पास गरेपश्चात् त्यो पास बुक पोस्ट अफिसमा नै स्थानान्तर गरिदिनु भयो। त्यस बेला सिकेको बचत गर्ने बानीले गर्दा अझै पनि पोस्ट अफिसमा त्यो एकाउण्ट छँदैछ। एकपल्ट उहाँले भन्नुभयो - "मानिसले जीवनमा जोखिम उठाउनुपर्छ अनि मात्र लाभ प्राप्त गर्न सकिन्छ (No risk no gain)।" उनको यही कुराले गर्दा म कालिम्पोङ इष्टमेन रोड प्राथमिक र कमसी बम बस्ती प्राथमिक पाठशालाबाट छँदाछँदैको काम छोड़ेर गैरीबाँस उच्चतर माध्यमिक विद्यालयमा सन् १९८३-मा आएको हुँ। त्यो जोखिम नउठाएको भए म अहिले पनि कमसीमा नै नानीहरूलाई क, ख, अ, आ पढ़ाइरहेको हुने थिएँ सायद। जति बेला पनि देख्दा, उज्जालो, रसिलो मिजाजको, जोशिलो टी० बी० सरले हामीलाई जी० के० पढ़ाउनुहुन्थ्यो। साधारण ज्ञान विषय रोचक जानकारी हामीलाई दिनुहुन्थ्यो। उनी प्रायः हामीलाई भन्नुहुन्थ्यो - "तिमीहरूले समय छँदै खूबै मेहनत अध्ययन गरी आफ्नो मस्तिष्कलाई सिङ्गार्ने गर। हाम्रो अनुहार प्राकृतिक तौरले त्यसै सुन्दर, चम्किलो र आभायुक्त छ। विभिन्न प्रकारको सौन्दर्य अप्राएर श्रृङ्गार गर्नु जरूरी छैन। त्यसले त झनपछि गएर रूपरंग नै बिगारिदिन्छ।" यसरी उहाँले आफ्ना अनुभवहरू व्यक्त गर्दै हामीलाई अगावै सतर्क गराउनु हुन्थ्यो। हामीलाई दसौं श्रेणीमा अंग्रेजी साहित्य पढ़ाउनु हुन्थ्यो हाल स्व० एस० के० प्रधान सरले। उनी खूबै सरल, मिलनसार, मृदुभाषी र उदार हृदयका थिए। हामीलाई दसौं श्रेणीमा अंग्रेजी साहित्यको गद्य र पद्य खूबै सरल अंग्रेजीमा खूबै चाखलाग्दो ढङ्गले बुझाउनु हुन्थ्यो। कथा, कविता कठिन शब्दको विश्लेषण र विषय वस्तुहरू हाम्रोअघि प्रस्तुत गर्न उनी खप्पिस थिए। कतिपय विषय अझसम्म मेरो मन-मस्तिष्कमा आलो छ।

श्री पासाङ भुटिया सरले हामीलाई हिसाब पढ़ाउनु हुन्थ्यो। केटाहरू उनलाई जादूवाला भन्थे। कारण जस्तै कड़ा हिसाब भए पनि श्यामपटमा ट्याक्कै ट्याक्कै मिलाउँथे। के पाराले मिलाउँछ हौ, बुड़ोले भन्दै छक्कै पर्थे। दिएको गृहकार्यहरू (Homework) कुन-कुन मिलेन भनेर सोध्नु हुन्थ्यो र फटाफट गरिदिनु हुन्थ्यो। त्यसपछि नयाँ विषय शुरू गरी राम्ररी बुझाएर अर्को गृहकार्य दिनुहुन्थ्यो। विज्ञानको शिक्षक भएकाले गर्दा होला उहाँ साह्रै व्यस्त देखिन्थे। श्री पी० सी० अग्रवाल सरले हामीलाई अर्थनैतिक शास्त्र पढ़ाउनु हुन्थ्यो। पढ्नमा ध्यान नदिँदा उहाँ भन्नुहुन्थ्यो - "तिमीहरूको पढ्ने काम हो, मेरो पढ़ाउने, तिमीहरूले ध्यान नदिए मलाई केही खाँचो पनि छैन।" हामीलाई सरकारले सेलरी दिइहाल्छ। त्यो भन्नु हुँदै दुइ आँखीभूईं माथितिर तन्काएर आफ्नो रिस व्यक्त गर्नुहुन्थ्यो। पढ़ाएको समय अलिकति पनि हल्ला-खुल्ला भए उहाँ

साह्रै रिसाउनु हुन्थ्यो। तर सबैले चासो राखेर एकाग्र भइ पढ्नमा ध्यान दिए उनी खुशी भई बेलाबेला खूबै रोचक प्रसङ्गहरू झिक्दै पढ़ाउनु हुन्थ्यो। उहाँले एकपटक भन्नुभएको घतलाग्दो कुरा म कहिल्यै भुल्न सक्दिँन। उहाँले भन्नुभएथ्यो, "यदि कुनै पनि जापानीलाई एउटा छुरी दिएर विश्व भ्रमण गर्न पठाए, त्यो छुरीको सहायताले विभिन्न बाँस, बेत र काठका सजावट सामग्री तयार पारी त्यसलाई बेच्दै उसले सजिलै विश्वभ्रमण गर्नसक्छ।" ट्रेनमा सफर गर्दा, अरूले उखु खाएर बोक्रा जतासुकै मिल्काएको तर दुइ जापानीहरू उखु खूबै होशियारी ढङ्गले रस चुसेर त्यसको बोक्राले एउटा सुन्दर सजाउने पानी जहाज तयार गरी बेचेको कुरा गर्नुहुँदा हामी सबै खूबै रोमाञ्चित बनेका थियौं। अमेरिकनहरूले ध्वस्त पारेको नागासाकी र हिरोसिमा शहरलाई सहयोग एवं उद्धार गर्न जापानका विद्यार्थीहरूले हस्तकर्म गरेर लाखौं रुपियाँ योगदान गरेका कुरा हामीलाई खूबै रोमाञ्चित भई अवगत गराउनु भएथ्यो।

यस्तो हुनुहुन्थ्यो हाम्रा त्यस समयका कुमुदिनी विद्याश्रमका गुरुजन्। अन्य सबै शिक्षक-शिक्षिकाहरूले पनि खुबै खटेर इमान्दारीसाथ पढ़ाउनु हुन्थ्यो। विविध क्षेत्रमा प्रोत्साहन दिनुहुन्थ्यो। यो छोटो लेखमा ती सबै उल्लेख गर्न साध्य छैन। अन्तमा म गौरव साथ गर्व गर्दै भन्नसक्छु, आज हामी जे जस्तो छौं, ती सबको पछि उहाँहरूकै बहूमूल्य योगदानको परिणाम हो। आज हामी सक्षम बनेर उनीहरूकै आङमा घाम तापिरहेका छौं। हामी सबै भूतपूर्व विद्यार्थीहरूले कुमुदिनी विद्याश्रमले लगाएका गुणहरू भुल्नु हुन्न। यस स्कूलको उत्तरोत्तर विकासमा उदार हृदयले सहयोग गर्नुपर्दछ।।






## निम्न विषयहरूलाई कुन शास्त्र भनिन्छ?

| | | | | | |
|---|---|---|---|---|---|
| सुन्दरता | - | क्यानोलोजी | अवशेष | - | पेलेन्टोलोजी |
| वायु | - | एनेमोलोजी | अस्त्र-शस्त्र | - | होर्पोलोजी |
| वृक्ष | - | डेन्ड्रोलोजी | माछा | - | इक्थ्योलोजी |
| बादल | - | नेफोलोजी | कमिला | - | मिमोकोलोजी |
| भूकम्प | - | सिस्मोलोजी | किरा | - | इन्टेमोलोजी |
| चिहान | - | लिथोलोजी | | | |



# याद

- धन० पी० अधिकारी
कालेबुङ

आज मलाई कता कता
हल्का हल्का लाग्दैछ,
आकाशबीच चराझैं
उड़ौं उड़ौं लाग्दैछ।





कता कता एउटा मुहार
मेरो अघि नाच्दैछ
भोलि भेटी मनको बह
पोखौं पोखौं लाग्दैछ।

आज मलाई कता कता
बगौं बगौं लाग्दै छ,
नदी भित्र माछासित
खेलौं खेलौं लाग्दैछ।







कता कता उनको यादले
मुटु मेरो छुँदैछ,
मुटुभित्र माया बसी
गुँड़ लाउन खोज्दैछ।।



कता कता मुटुभित्र
कुरी कुरी लाग्दैछ,
घरि घरि उनको छवि
मेरो अघि नाच्दैछ।



# तिमी घर फर्क

- विजय नारायण प्रधान
कालेबुङ

ए, शिक्षित भएर
अचेतनता देखाउने मान्छे
तिमी कहाँ गइरहेछौ?
दुनियाँको तमाशा बन्दै
मनोरञ्जनमा भुल्ने मान्छे
तिमी घर फर्क।
तिमीले घर धुरी-खम्बा फेरी
चुहुने छानु टाल्नुपर्छ,
अमूल्य खून जुकालाई चुसाई
आफ्ने परिश्रमले छाक टार्नुपर्छ।
दुःखको पेचामा खाँदिई, ढुङ्गाले थिचिई
तिखो भएर निस्किनुपर्छ,
पीड़ित आमा बाबुलाई शान्ति दिई
शुभ आशीर्वाद थाप्नुपर्छ।
तिमीले समाजमा बस्न सिकी
दुःखमा हार-गुहार गर्नुपर्छ।
भलो-कुभलो छुट्याउन सिकी
समाजलाई अघि डोऱ्याउनुपर्छ।।



# स्मारिका-दर्पणमा गुरु पौड्यालज्यूको छवि : यो फूल मेरो श्रद्धाको



- मणि कुमार रसाइली
(भूतपूर्व छात्र)

कुमुदिनी विद्याश्रमको इतिहासमा श्रद्धेय प्राचार्य टीकाराम शर्माका तीन मौलिक गीति-नाटकमध्ये १९६२ सालमा यसै विद्याश्रमको भव्य धर्महलमा मञ्चित गीति-नाटक "आमाको पुकार" एउटा हो। उक्त गीति-नाटकको सङ्गीतबद्ध गर्नुभएको, अर्कोतर्फ तिनताक विद्याश्रमको फुटबल दल जसले राष्ट्रिय स्तरको सुब्रत मुखर्जीकपमा नर्थ बेङ्गल च्याम्पियन भएर कलकत्तासम्म खेल्न पुगेका अथक, उत्कृष्ट फुटबल खेलाड़ीमध्ये एक एवम् वर्तमान समय, सेवानिवृत्त जीवनमा पनि विभिन्न धार्मिक अनि अराजनैतिक सङ्घ-संस्थामा संलग्न हुनुभएको मृदुभाषी, सङ्गीत-दक्ष, खेल-दक्ष, समाजसेवी, त्रिपाई पथ निवासी श्री लिलाबल घिमिरे हुनुहुन्छ। गत मई महिनाको अन्तिम साता, एक प्रभात बोङ बस्तीको ओह्रालो बाटो कुमुदिनी परिवार पक्षको एउटा पत्र लिएर मेरो वासस्थानमा आइपुग्नु भएथ्यो। उहाँसितको भेटवार्ता क्रममा यस वर्ष फेरि कुमुदिनी परिवारले स्मारिका प्रकाशित गर्ने सन्देश पाएर हर्ष लाग्नु स्वभाविक थियो कारण पूर्व स्मारिकाअन्तगर्त कति लेखहरूले अतीतका विद्यार्थी जीवन पुनः एकपल्ट आलो गराएको थियो। कुमुदिनी परिवार पक्षको पत्रमा आगामी स्मारिकाको निम्त एउटा लेख पठाइदिने निर्देशनले अरू थप हर्ष हृदयमा जागेर आयो। श्री लिलाबल घिमिरेले धेरै दिनअघि देखि यस विषयमा खई गरिरहनु भएकोले साथै आफै पाउकष्ट गरिआउनु भएकोले यस खेलको सम्पूर्ण श्रेय उहाँमा नै जान्छ।

अर्कोतर्फ यसरी नेपाली साहित्यमा जे जति लेख, कविता कोर्ने मेरो रहर हुन्छ त्यसबखत् प्रेरणा र ज्ञानको स्रोत स्व० कवि चन्द्रकान्त दर्नाल अनि श्रद्धेय गुरु श्री महानन्द पौड्यालमार्फत प्राप्त गर्ने गर्छु। यसर्थ यस लेखको आधार पनि श्रद्धेय गुरु श्री महानन्द पौड्याल नै हुनुहुन्छ। नेपाली साहित्य संसारमा, उहाँको विषय कतै पत्रिकामा, कतै सिलगड़ी दैनिकमा, गाउँ-बूढ़ाको उपाधिले सम्मानित, गोरुबथानमा सम्बर्द्धना जनाइएको कुरा इत्यादि सुन्न पाउँदा मेरो हृदयमा त्यसै-त्यसै खुशीको लहर उर्लिन्छ कारण यी नै नेपाली साहित्यका धनी व्यक्ति बोङ्बस्ती, टारी गाउँमा जहाँ म बस्ने गर्छु, त्यहाँकै बाटो-गोरेटोमा हिँड्ने, एउटै हावा-पानी सेवन गर्ने महानुभाव हुनुहुन्छ। सिक्किम सरकारको







शिक्षा विभागका उप-निर्देशकको उच्च पदमा सेवानिवृत्त हुनुभएपछि हाल उहाँ पाकिम, पूर्व सिक्किममा हुनुहुन्छ। तथापि तल्लो बोङ्ग बस्तीको मूल बाटोमा किनारछेउ रातो-माटो र ढुँगाद्वारा निर्मित दुइ तल्ले उहाँको पैतृक घर छ - जसलाई जन्म-स्थत्व (हेरिटेज)को रुपमा लिन सकिन्छ। यस वासस्थानको सम्बन्ध मात्र कहाँ हो र - कुमुदिनी विद्याश्रमको विद्यालय जीवनमा उहाँले मलाई भूगोल, नेपाली विषयमा शिक्षा पनि दिनु भएथ्यो। उहाँको भूतपूर्व छात्र बन्ने सौभाग्य प्राप्तिको निम्ति पनि म उहाँप्रति आभारी छु। यस अतिरिक्त १९५० सालमा उहाँ दशम् श्रेणीमा भर्ना भई कुमुदिनी विद्याश्रमको भूतपूर्व छात्र पनि बन्नुभएछ। विद्यार्थी जीवनमा मेरो परिवार भित्र राखेको पुरानो तस्वीरमा मेरा भिनाज्यू स्वर्गीय कवि चन्द्रकान्त दर्नाल, साहित्यकार श्री नर बहादुर दाहाल, स्व० भाइचन्द प्रधानसित श्रद्धेय गुरु महानन्द पौड्यालको पनि तस्वीर देख्दा तिनताकनै म अड्कल काट्थें मेरा शिक्षक साहित्यकार, कवि-लेखक हुनुहुन्छ भनेर। आज-भोलि मेरो त्यो अड्कलमा सत्य पाउँछु। नेपाली संसारमा साहित्यिक व्यक्तित्ववर्गमा सर्वमान्य, सुपरिचित, श्रेष्ठ, वरिष्ठ साहित्यकारको रूपमा श्रद्धेय गुरू श्री महानन्द पौड्याल हुनुहुन्छ। उहाँले नेपाली साहित्य क्षेत्रमा कथा, निबन्ध, संस्मरण आदिमा निरन्तर आफ्नो कलम चलाउनु भएको छ। उहाँका कतिपय प्रकाशित कृतिमध्ये "झुम्राको पुतली" (कथा सङ्ग्रह), छन्द र अलङ्कार, हाम्रा केही लोककथा, कथाश्री, भाषा-साहित्य: बाह्र बखान, आदि मुख्य छन्। "महानन्द पौड्याल : उनका विविध कृतिहरूमा" नामक पुस्तकमा अरू थप कृति- शेक्सपियरका केही नाटय-कथा, विचरण आफ्नै क्षितिजभित्र, केही रोचक कथा, सानुभाइ, पाउन सकिन्छ। यी साहित्यिक देन अतिरिक्त ध्रुव, बसुन्धरा, रामकृष्ण स्मृति अङ्क - आकाशदीप आदिको सम्पादन पनि गर्नु भएको हो। हालैमा १४ अगस्तको दिन कालेबुङमा साहित्यकार शमसेर अलीद्वारा लिखित कथा सङ्ग्रह - "बिउ भाले" विमोचनको निम्ति आमन्त्रित भई आउने समयको केही दिनअघि श्रद्धेय गुरुसित साहित्य विषय सम्पर्क राखिएको थियो। उक्त कार्यक्रममा कालेबुङ आउँदा आफूसित केही सम्मान गरिएको तस्वीर साथै पुरस्कृत, सम्मानित विवरण लिएर आउनु भएको थियो जसको छोटो विवरण यस प्रकार छ- उहाँले १९९९-मा पनि भानु पुरस्कार, सिक्किमा; सोही वर्ष नेपाली साहित्य सम्मेलन पुरस्कार, दार्जीलिङमा; २००४-मा शिव कुमार राई स्मृति पुरस्कार, नाम्चीमा; २००५ मा डा० पारसमणि प्रधान पुरस्कार-ने० सा० अ० समिति, कालेबुङमा; २०१०-मा महाकवि देवकोटा शताब्दी सम्मान, काठमाण्डौमा प्राप्त गरी आभूषित हुनुभएको छ।

गत ४ नोभेम्बर, २००७ सालमा श्री सरस्वती-रूद्र पाठशालाको स्वर्ण जयन्ती मनाउने विषयमा छलफल गर्न डाकिएका सभामा गुरूजी महानन्द पौड्याल पनि निमंत्रित भई उपस्थित हुनुभएको थियो। सभामा जयन्तीको उपलक्ष्यमा एउटा स्मारिका प्रकाशित गर्ने पनि निर्णय लिइयो। समितिले उहाँलाई स्मारिका तयार परिदिने जिम्मेवारी सुम्पेको थियो। त्यस सभाको सभापति पनि उहाँ स्वयम् नै हुँदा आफ्नो वक्तव्यको क्रममा उहाँले भन्नुभएको थियो - "स्मारिका प्रकाशित गर्ने जिम्मा मलाई सुम्पनु भयो। सो जिम्मेवारीलाई म हार्दिक स्वागत गर्दछु। मैले मेरो दीर्घ जीवनमा जानेको कुरा नै साहित्य लेखन तथा पुस्तक, पत्र-पत्रिका सम्पादन गर्नु हो। धन सम्पती थुपार्ने काम गरिँन। साहित्यको सेवामा नै मग्न रहे। विश्वास गर्नुहोस् स्मारिका तयार गरी समयमा बुझाइदिनेछु।"





उहाँका कुरा सुनी मनभित्र मैले गुनें, हाम्रा महाकवि लक्ष्मीप्रसाद देवकोटा लक्ष्मीपूजाको दिन जन्मिएकोले नाम नै रह्यो लक्ष्मीप्रसाद। तर उहाँमा लक्ष्मी सधै उँल्टा रहिन्। उहाँले सधै भरि दुःखको जीवन बिताउनु भयो। धनबारे उहाँको सिद्धान्त नै छ - "हातका मैला सूनका थैला के गर्नु धनले, साग र सिस्नु खाएको वेश आनन्दी मनले।" तसर्थ श्रद्धेय गुरु श्री महानन्द पौड्यालले सम्पत्ती कमाउनु भएन त के भयो? उहाँमा साहित्य-धन परिपूर्ण छ। उहाँले हाम्रो नेपाली साहित्यलाई धनी तुल्याउनुभएको छ। नेपाली साहित्य-संसारमा उहाँको देन करोड़ौं रूपियाँभन्दा मूल्यवान् छ। श्रद्धेय गुरु महानन्द पौड्यालज्यूलाई कुनै उपलक्ष्यमा सम्वर्द्धना जनाउन, हार्दिक अभिनन्दन चढ़ाउन नपाए पनि कुमुदिनी परिवारले प्रकाशित गर्ने यस स्मारिकाको दर्पणमार्फत् हृदयदेखि श्रद्धाको यो फूल चढ़ाउँछु।

~~~~~~~~•~~~~~~~~

## ठट्टा मात्रै

झुण्डिएर मर्ने विचारले एक व्यक्ति गलामा पासो लाउँदा-लाउँदै अचानक पासो छोड़ेर पुनः भूइँमा झर्‍यो। यो दृश्य देख्ने अर्को व्यक्तिले आश्चर्य मानेर आत्महत्या गर्न खोज्ने व्यक्तिलाई सोध्यो -

"भाई, तिमी त आत्महत्या गर्न गलामा पासो लाउँदै थियौ अनि फेरि पासो छोड़ेर भूइँमै उत्र्यौ? किन होला?"

"दाइ! मलाई पाइखाना लाग्यो र उत्रेको" त्यस व्यक्तिले भन्यो।



एक मित्रले अर्को मित्रलाई - "साथी, आजादी र मुक्तिमा के फरक छ?"
दोस्रो मित्र - "साथी! जब स्वास्नी मान्छे माइत जान्छे तब आजादी पाइन्छ तर जब उकालो जान्छे, तब मुक्ति पाइन्छ।"



सात वर्षे छोरोले आमालाई सोध्छ, "आमा तपाई कहाँ जन्मनु भएको?"
आमा - "म गान्तोकमा जन्मेकी हुँ।"
छोरो - "अन्त बुबा चैं कहाँ जन्मनु भयो?"
आमा - "दार्जीलिङमा!"
छोरो - "अनि म चाहिँ?"
आमा - "तँ कालेबुङमा!"
छोरो - "अन्त तपाईंहरूको भेट मसँग कसरी भयो त?"


~~~~~~~~



# शिक्षामा "चरित्र" - निर्माण

टी० एन० (तारा नाथ) शर्मा "सुवेदी"
भूतपूर्व छात्र

शिक्षानुरागीवर्गको जमातमा शिक्षाको चर्चा-परिचर्चा पारम्परिक रुपमा नै हुँदै आएको हो अनि हुँदै आइरहेछ। यस चर्चा-परिचर्चाअन्तर्गत शिक्षक जनमानसलाई समाजको स्तम्भ उर्फ राष्ट्र-निर्माता साथै शिक्षालाई समाजको दर्पण भनी स्तुतिको पूल बाँधिएकै छ। यो कुरो अकाट्य् भए पनि राष्ट्र-निर्माताको पगरी गुँथ्न फलामको चिउरा चबाउनै पर्दछ। अब कुन यस्तो साधन छ जसले शिक्षक समुदायलाई विश्व समाज राष्ट्र-निर्माताको रुपमा प्रस्तुत गर्छ। उत्तर यसको सोझो छ - चरित्र नै त्यो साधन हो जसले शिक्षक समाजलाई सक्षम, कर्मठ र अनुभवी राष्ट्र-निर्माताको प्रस्तुत गर्नमा महत् सहायता प्रदान गर्नसक्छ। यसर्थ शिक्षकजनको चरित्रको आश्रय लिई "हुने बिरुवाको चिपल्लो पात" नबनेसम्म राष्ट्र-निर्माताको ओहोदामा उक्लन र शिक्षा फस्टाउने कुरोलाई "आकाश-कुसुम" नै मान्नुपर्छ।

हो, शिक्षामा चरित्रको गरिमापूर्ण भूमिका रहेको हुन्छ जसले मानवलाई आत्मनिर्भरशील, सदाचारी, नीतिवान् तथा गुणवान् हुनुमा वैशाखीको काम गर्दछ। शिक्षाको क्षेत्रमा चरित्र एउटा यस्तो संवेदनशील तत्त्व हो जसले वंशानुक्रम र परिवेशमा एउटा महत्त्वपूर्ण प्रभाव छोड़ेको हुन्छ। यस अतिरिक्त चरित्रको मानवको सुप्त आत्मालाई जाग्रत तुल्याई अभिज्ञतामूलक सत्धारणा र विशुद्ध मनोवृत्तिको सही मूल्याङ्कन गर्नमा पनि अहम् भूमिका निभाएको हुन्छ। त्यसैले चरित्र यस्तो व्यापक शब्द हो जसमा धर्म, नैतिकता, अनुशासन, विनयशीलता, सहिष्णुता, मैत्री-भाव, सहयोगिता, सम्यक ज्ञानको बोध, संयम जस्ता महत् विशेषताहरू समावेश रहेका हुन्छन्। यिनै विशेषताहरूले युक्त चरित्रको आधारमा मानवको कुलीनता अनुप्राणित रहने गर्छ।

उसै त शिक्षामा चरित्रको अनिवार्यता विद्यमान् हुन्छ नै तथापि चरित्र निर्माणको निमित्त कर्तव्यबोध र शिक्षामूलक ज्ञानको पनि उतिकै प्रयोजन पर्न जान्छ। यस्तै-यस्तै चरित्रतर्फ उन्मुख शिक्षाद्वारा नै शिक्षक र शिक्षार्थी दुवै संसार-अरण्यको निर्भय पथिकको रुपमा प्रतिष्ठित हुन सम्भावित छ। महात्मा गान्धी, रवीन्द्रनाथ ठाकुर, ईश्वरचन्द्र विद्यासागर, देशबन्धु चितरञ्जन दास, मदन मोहन मालवीय, सम्राट् अशोक तथा सम्राट् विक्रमादित्य आदि त्यस निर्भय पथका निर्भय मिसालहरू हुन् जसलाई मानव समाजले नतमस्तक भई सम्मान प्रकट गर्दछ।

शिक्षकको पगरी गुँथेर उन्माद बोकेका आधुनिक शिक्षक समुदायले मदोन्मत्त हुनको सट्टा शिक्षाको मूल्यलाई सर्वोपरी मानेर चरित्रिक शिक्षा किंवा नैतिक शिक्षाको अनुगामी बनी शिक्षाको स्तरलाई सर्वोच्च शिखरमा पुऱ्याउन आफ्नो कर्तव्यरुपी उपासनालाई निष्ठाको साथमा चालु राख्न आवश्यक ठान्नुपर्छ किनकि चरित्र र नैतिक शिक्षाको अभावमा शिक्षा अपङ्ग औ निष्क्रिय साबित हुने प्रबल सम्भावना रहन्छ। त्यसैले चरित्र वा नैतिक शिक्षाको उपयोगिताको





सन्दर्भमा सर्वपल्ली डा० राधाकृष्णन् यसो भन्थे - "चरित्र निर्माणको निम्ति शिक्षामा नैतिक पद्धतिको प्रयोग परम आवश्यक हुन्छ।" डा० राधाकृष्णन्को यस उक्तिलाई टेवा दिनसक्ने अर्का दार्शनिक "थियोडोर उल्जे"-को भनाइलाई सदा सम्झनामा राख्नुपर्छ। तिनले भनेका हुन् - "नैतिकता र बुद्धिमत्ता दुवै मिलेर उज्ज्वलतम् चरित्रको निर्माण हुँदछ।" महापुरुषहरूका यस्ता तथ्यपरक औ सारगर्भित वाणीहरू शिक्षक जनसमुदायको निम्ति प्रेरणा बन्नसके शिक्षा स्तरीय मात्र नभएर जाति समाज र राष्ट्रको निम्ति हितकारी पनि बन्न सक्नेछ।

तर खेदको कुरो शिक्षामा चरित्रसँग सम्बद्ध संस्कार र नीतिको अभाव रहे बापत् वर्तमान परिवेश वा माहोल सङ्कीर्णता, वैमनष्य, भ्रष्टाचार, शत्रुता, साम्प्रदायिक साथै विछिन्नतावादले आच्छादित देखिन्छ। चिन्ताको विषय पनि यही नै छ। शिक्षा मात्रको के कुरा गर्नु, प्रशासकीय व्यवस्था एवं शिक्षार्थी र अभिभावकवर्गमा निहित चारित्रिक वा नैतिक आचरणको कमीको कारणले शिक्षाको मूल्य औ स्तरमा पतनको लक्षण देखा परिरहेको छ। यसबाहेक शिक्षक जनमानसद्वारा शिक्षाको उद्देश्यप्रति उपेक्षात्मक भाव हुनु पनि शिक्षाको पतनमा मूल कारण हुन गएको छ। अँ.......! शिक्षाको मूल्यलाई कसौटीमा हेर्ने शिक्षाको स्तरलाई सगरमाथा उक्लन आफ्नो जीवनको आधा अंश नै व्यतित गरेको हुन्छ। यही नै आदर्श-शिक्षकको लक्षण हुँदछ।

शिक्षाको उद्देश्य निम्न प्रकार छन् -

१. शिक्षार्थीको मनोशक्ति एवं प्रतिभालाई जनमानस समक्ष उजागर गर्नु।
२. पाशविक वृत्ति अथवा अपसङ्गतिबाट मुक्त राख्दै शिक्षार्थीवर्गमा मानवताको सञ्चार गर्नु।
३. अप्रबुद्ध, अपसंस्कृत र अविकसित शिक्षार्थीको आत्मालाई प्रबुद्ध एवं सुसंस्कृत तुल्याउँदै उसको सर्वाङ्गीण विकासमा योगदान दिनु।
४. शिक्षार्थीलाई चरित्रिक वा नैतिक शिक्षाअन्तर्गत धर्म-निरपेक्षताको महत्त्वबारे बोध गराउँदै अन्धविश्वास तथा रुढीवादको पिञ्जराबाट मुक्त गर्नु।
५. प्रत्येक शिक्षार्थीमा पारदर्शिता, सौन्दर्यवोध, शारीरिक स्वास्थ्य वोध, विनम्रता, कर्तव्य परायणता किंवा दायित्वबोध, नेतृत्व-बोध तथा स्वनिर्भरशीलता जस्ता सद्गुणहरूको र दक्षताको सञ्चार गर्दै शिक्षार्थीवर्गलाई राष्ट्रको योग्य औ असल नागरिक बन्ने सुयोग प्रदान गर्नु।

अब शिक्षादानको प्रक्रियामा यतिका उद्देश्य हुँदा-हुँदै हिजोआजको शिक्षा नीतिमा अधिक भूल-त्रूटिहरू प्रकाशमा आउनु खेदमूलक विषय बन्न जान्छ जसको श्रेय शिक्षकवर्ग र सरकारीतन्त्रलाई जाँदछ। साधारणतः विद्यालयको चार भित्ताको कक्षाभित्र शिक्षकद्वारा प्रदान गरिने त्रूटिमूलक शिक्षादान पद्धतिले विद्यार्थीवर्गको शैक्षिक गुणस्तरमा अनि सर्वाङ्गीण विकासमा अवरोध सृष्टि हुँदैन भन्न सकिँदैन। हिजोआजको चलनमा पुस्तकीय पाठ्यक्रमलाई सैद्धान्तिक पद्धतिमा मात्र उपस्थापन गर्दा चरित्र-निर्माण हुने कुरो विश्वसनीय ठहर्दैन।

यति मात्र होइन, शिक्षाको सम्बन्ध अध्यात्मवाद एवं धर्मसित नहुनाले शिक्षक र विद्यार्थीवर्गमाझ अर्थ (शुल्क) र अङ्कको विनिमय साइनो गाँसिएको देखिन्छ। शिक्षाको उद्देश्य पनि यसैमा सीमित रहेको थाहा लाग्छ। फलतः विद्यार्थीको दृष्टिमा शिक्षकप्रतिको सम्मान गौणा भएर गएको छ जबकि शिक्षक र विद्यार्थीको





सम्बन्ध पिता-पुत्रको जस्तो हुनुपर्ने हो। "भारीमाथि सुपारी" भनेझैं राजनैतिक कार्यकलापको कारणवश पनि शिक्षा-नीतिमाथि गम्भीर कुठाराघात भएको सत्यतालाई नकार्न सकिँदैन उसै पनि।

एवंरीतले आधुनिक धारणाले ग्रस्त कतिपय शिक्षकजनले शिक्षण-सेवालाई मात्र पेशाको रूपमा हेर्ने गर्दैन। यसको अर्थ - शिक्षा केवल तनखाको पर्याय बन्न गएको छ। यस्तो दायित्व पलायनवादी शिक्षकलाई जीवन-निर्माणको कलाको ज्ञान त हुँदैन नै विद्यार्थीवर्गको चरित्र-निर्माणको अभिभारा वहन गर्नुपर्दा र चरित्र-निर्माणप्रति उनीहरूलाई जागरुक बनाउनुपरे यो कार्य उसको लागि "भैंसीलाई सिङको भारी" हुनजाला बरू।

भन्नुपर्छ - प्राचीन भारतमा शिक्षा नै मानव जीवनलाई समुन्नत तुल्याउने उद्देश्यमा अग्रणी थियो। शिक्षाको लक्ष्य मानव जीवनलाई सार्थक बनाउन र मानव जातिको सर्वाङ्गीण विकास गरी सुप्त शक्तिलाई प्रकाशमान् गर्नमा नै परिलक्षित थियो। उसै त शिक्षाको अर्थ साक्षरता मात्र नभएर सद्गुणहरूलाई अप्नाउनु पनि हुँदछ किनकि शिक्षा सद्गुणको आश्रय एवं आधार पनि हो अथवा यसो भनौं, सद्गुणहरूको उपलब्धि शिक्षा नै हो अनि नैतिकता शिक्षाको अङ्ग हो। तसर्थ नैतिकतासँग सम्बद्ध शिक्षा धर्माचरणसँग जड़ित रहेको हुन्छ। यस अतिरिक्त मानव-कल्याण निमित्तार्थ जीवनलाई सदूद्देश्यतर्फ उन्मुख गर्ने साधन नै वास्तविक शिक्षा कहलाउँछ।

आजको वर्तमान घड़ीमा शिक्षा नैतिकतादेखि धेरै नै टाड़िएर गएको छ। एवंरीतले शिक्षा नैतिकतादेखि खण्डित हुनु चाहिँ सबैको निम्ति दुर्भाग्यको सूचक हो। यदि शिक्षाको सम्बन्ध नैतिकता वा चरित्रसँग नभए शिक्षाको स्वरुप विकृत भएर अनैतिक परम्पराको पोषक निस्सन्देह बन्न जानेछ। हो, प्राचीन युगमा मानव जीवन धर्मसँग सम्बद्ध थियो। त्यसैले त्यसताक आत्म-दर्शनको प्रवृत्तिलाई मानव जीवनको सार्थकता मान्ने गरिन्थ्यो। तर आधुनिकताले जर्जरित शिक्षित समाज चरित्र-निर्माणलाई शिक्षाको लक्ष्य मानिलिन कदाचित् सहमत छैन जबकि शास्त्रले पनि "आचारः प्रथमो धर्म : आचार : प्रभवो धर्म" भनेर आचार किंवा चरित्रलाई धर्मको नाम दिएको छ किनभने चरित्र वा आचारणद्वारा धर्मको उत्पत्ति हुँदछ भन्ने कुरोलाई पनि हामीले स्वीकारोक्ति जनाउनै पर्छ।

अर्को कुरो मानव चरित्र नै विचारहरूको कसौटी हुँदछ। भनौं, चरित्रको अभावमा विचारहरूको कुनै मोल हुँदैन। अझ भन्नु हो भने चरित्रको आश्रयद्वारा नै सम्पूर्ण व्यवहार गतिशील हुन्छ किनभने जस्तो चरित्र मानवको हुन्छ त्यस्तै उसको आफ्नो विचार हुँदछ। यस परिप्रेक्ष्यमा विचारहरूको पवित्रताको निम्ति वाह्य चरित्र हुनु पनि नितान्त आवश्य छ। तसर्थ विचारको अपेक्षा चरित्रलाई विशेष महत्त्व दिइएको छ। शास्त्रमा त बाल्यवस्थादेखि नै चरित्र शुद्धिमाथि विशेष ध्यान दिनुपर्ने विषयमा शिक्षा दिइएको पाइन्छ। शास्त्रमा व्यावहारिकतामा निहित शारीरिक आचार-व्यवहार जस्तै-उठ्नु-बस्नुदेखि लिएर शौच आदि सम्पूर्ण क्रियाकलापको यथाविधि पालन गर्ने शिक्षा पनि उल्लेख गरिएको पाइन्छ।

प्राचीन जमानामा भनौं हाम्रो शिक्षा उपदेश-प्रधान नभएर आचरण-प्रधान हुने गर्थ्यो तर समयको विडम्बना पनि कस्तो! वर्तमानयुगीन शिक्षाको प्रभावले गर्दा ठूला-ठूला विचारशील पुरुषहरूको पनि चरित्र शुद्धितर्फ उति ध्यान नपुगेको देखा पर्छ। फलतः चरित्रभ्रष्टता उनीहरूको महान् विचारधारालाई मिलाइदिन पर्याप्त हुन्छ। उदाहरणको तौरमा भन्ने हो भने





राक्षस राज रावणजस्तो प्रकाण्ड विदूषक ब्राह्मणको पनि चरित्रमा विसंगतिको प्रभाव पर्न गएको हुनाले उबाट अनेकौं दुष्कर्महरू घटित हुन गए। त्यसैले रामायणमा पनि भगवान् रामको आदर्श चरित्रशीलतालाई अप्नाउनुपर्ने अनि रावणको दुश्चरित्रमो परित्याग गर्नुपर्ने शिक्षा पाइन्छ अथवा भनौं, महापुरुषहरूको उदात्त जीवन चरित्र विश्वका मानवका निम्ति विशिष्ट उपमाहरू हुन्।

फेरि त्यसै आर्यकाल वा मध्ययुगकै अन्तरालमा भनौं, सम्पूर्ण शिक्षाक्रम चरित्र निर्माणमा आधारित थियो। देह-शुद्धि, वाक्-शुद्धि र मनोशुद्धिको शिक्षा एवं परोपकारजस्ता सद्गुणहरूलाई धारण गर्नु शिक्षार्थीहरूको निम्ति ज्ञान-आर्जनको विशेष आङ्ग हुँदथ्यो। प्रातःकालदेखि सन्ध्या-बेलासम्म उनीहरूको दिन चर्या साँच्चै नै चरित्र-निर्माणको शिक्षाद्वारा ओतप्रोत थियो। सन्तोष, पवित्रता, निष्कपट आचरण, मित-भाषण, गुरु-सेवा गुरूकुलका अनिवार्य नियम हुने गर्थे। त्यसर्थ सद्चरित्रवान् सुयोग्य औ प्रबुद्ध गुरुजनको संसर्ग पाएर शिक्षार्थीहरू चरित्रवान् बन्दथे जसले गर्दा शिक्षार्थीहरू गुरुको गुणको प्रकाशक बन्दथे। यस सन्दर्भमा भन्नुपर्छ कि यस प्रकारको सदाचारपूर्ण सद्चरित्रताको दृढ़ताले नै भारतीय संस्कृतिलाई अद्यावधि जीवन्त राखेको छ। यसको कारण हो - सद्चरित्रताले मानव-मनमा गहिरो प्रभाव पार्नु।

अर्को पक्षमा भन्नु हो भने चरित्रलाई मानवको शिष्टता र अशिष्टता सिद्ध गर्ने माध्यम मात्र सकिन्छ। यस अतिरिक्त हामीले यो पनि स्वीकार गर्न योग्य छ कि सच्चरित्रवान् मनुष्यले आफ्नो दुःखी मनलाई समेत वशमा गर्ने क्षमता राख्दछ। उसै त सच्चरित्रद्वारा मनुष्यको हृदय सबल, निर्मल र प्रसन्नतायुक्त हुँदछ जसले गर्दा उसको हृदयमा लोक-कल्याणको भावना जाग्रत हुनको साथै उसको अन्तः करण शुभ वासनाहरूको गढ़ बन्न जान्छ। यसबाट के प्रमाण पाइन्छ भने सद्विचारको पोषण सच्चरित्रबाट नै सम्भव हुन्छ। यस्तै तथङ्कको आधारभूत सत्यतालाई अंगिकार गरी ती प्राचीन मनिषिजनले आफ्नो स्वार्थत्यागको बलबुताको संरक्षण र लोककल्याण हेतु अनेकन् सत् शास्त्ररूपी अवदानहरू मानव समाजसमक्ष प्रस्तुत गरी अमर बने। अतः हामीले पनि चाह्यौं भने उनीहरूकै आदर्शसको अनुसरण गरी यश र कीर्तिको भाजन बन्न सक्छौं तर यसको निम्ति आवश्यक छ - दृढ़ आत्मविश्वास र निष्ठा।

जायज कुरो - कृत्रिम आचरणयुक्त मनुष्यले अन्य जनसाधारणको हृदयमा आफूप्रति श्रद्धा र सम्मानको बीजारोपण गर्न सद्विचारहरूको प्रदर्शन जति नै गरे पनि त्यो कहिल्यै स्थायी हुँदैन अनि भएको पनि छैन। अतः कृत्रिमताको वाहक बनेर चरित्र-निर्माणको उपेक्षा गर्नुकै कारणले हामी विकासदेखि विनाश तर्फ अथवा उत्थानदेखि पतनको दिशातर्फ तेजीको साथ उन्मुख भइरहेका छौं। तब भन्नुपर्छ जीवनको वास्तविक अभ्युदयको निम्ति चरित्र-निर्माण भावी जीवनको आधार-भित्ती न हो। भनिन्छ, शिक्षा र चरित्रको सम्बन्ध जहाँ सहज हुन्छ त्यहाँ शिक्षा नै चरित्र-निर्माणको पूरक हुँदछ साथै चरित्र-निर्माणमा जहाँ शिक्षाको आधार दृढ़ हुन्छ त्यहाँ नै चरित्र-निर्माणद्वारा शिक्षाको सफलता निहित रहन्छ। अतः भारतीय संस्कृति चरित्र-निर्माणमा प्रतिष्ठित रहन्छ अनि यो बिना शिक्षाको कुनै अर्थ हुँदैन। अब यी कथनहरू जति नै सत्य र सारभूत भए पनि आज-कृत्रिम सभ्यताका पुजारीहरूका निम्ति त्यति महत्त्वपूर्ण ठहर्दैन।






सर्वविदित कुरो - शिक्षाको उत्थान एवं शिक्षार्थीहरूको सर्वाङ्गीण विकासमा माता-पिता र शिक्षकजनको भूमिका सर्वोपरी हुँदछ। एउटा सभ्य, सुशिक्षित, सुसंस्कृत समाज वा राष्ट्रको निर्माण र समाजको अधोपतन शिक्षक र शिक्षामाथि नै निर्भर गर्दछ। अझ भन्नु हो भने राष्ट्रर समाजको उत्थान साथै शिक्षार्थीवर्गको चरित्र-निर्माण गर्ने अनि उनीहरूको सुप्त प्रतिभालाई प्रकाशित गर्ने उत्तरदायित्व शिक्षकजन कै थाप्लोमा हुन्छ। शिक्षक-शिक्षिकावर्गको जीवनमा संलिप्त यस महत् जिम्मावारीकै कारणवश शिक्षक समाजलाई संवेदनशील व्यक्तित्वको रुपमा त हेरिन्छ नै समाजको केन्द्रविन्दुको रुपमा पनि हेर्ने गरिन्छ।

साँच्चै मानव जीवन समस्यारुपी जंञ्जालमा परिवेष्टित छ यसबाट हामी आँखा चिम्लन सक्तैनौं। तर समस्या नभएको ठाउँ कहाँ छ र? यतिसम्म कि स्वर्गजस्तो विलाश भोग गरिने दिव्यलोक पनि समस्यबाट अक्षुण्ण छैन। यो कुरो हामीलो बुझ्नु पर्छ भलीभाँतीसित। त्यसैले समस्यादेखि आतङ्कित भएर हाहाकार गर्नु पुरुषार्थजन आफ्नो स्वाभिमानहीनताको रुपक मान्छन्। भनिन्छ - "पहाड़ चढ़नेले पहाड़को उँचाइ हेर्दैन।" यसै उक्तिको अनुसरण गर्दै राष्ट्र-निर्माणको पगरी गुँथ्ने शिक्षक समाजले आफ्नो दायित्व र कर्तव्य परायणतारुपी पहाड़मा उक्लेर लक्ष्य-शिखरमा पुग्न भगीरथ उद्यम गर्नु अपरिहार्य हुनजान्छ। तब मात्र शिक्षा र शिक्षणसेवाको सार्थकता अनुप्राणित रहँदछ।

~~~~~~~~•~~~~~~~~

*With Best Compliments from :-*

# C.K. Pradhan

Life Member, Kumudini Pariwar

(Govt. Contractor)

Kalimpong
~~~~~~~~



# सौभाग्यको कुरा

– नरबहादुर दाहाल

जन्म : ४ तारीख सितम्बर १९३७ कालिम्पोङ (दार्जीलिङ) | सन् १९५१ देखि साहित्यमा प्रवेश | प्रकाशित कृति "उन्माद" (काव्यकृति-१९५८), "तिम्रो प्रीत मेरो गीत" (काव्यकृति १९३९), "वर पीपल" (कथा सङ्ग्रह १९३०), "मध्यरातको तारा" (उपन्यास-१९३६) | सम्पादन-"गोर्खा" (साप्ताहिक) सन् १९३९ देखि १९३५ सम्म, "प्रतिनिधि" (साप्ताहिक) "कुमुदिनी परिवार", "सेलको माला" (हास्य-व्यंग्य कविता), "विश्व परिचय" (विश्वकोशका सम्पादन मण्डलीमा), "आसाम गोर्खा सम्मेलन रजत जयन्ती स्मारिका" (१९९२), "भानु स्मारिका", गुवाहटी (१९९३), "भानु स्मारिका", गुवाहाटी (१९९६) र प्रकाशोन्मुख केही कृतिहरू | साहित्य अकादमीको अनुदानमा उत्तर प्रदेशका केही पहाड़ी अञ्चलहरूको भ्रमण | भोपालमा साहित्य अकादमी र भारत भवनको संयुक्त त्वावधानमा आयोजित समकालीन भारतीय कथासम्बन्धी कार्यशालामा नेपाली कथाकारहरूको प्रतिनिधित्व साथै "समकालीन भारतीय साहित्यमा नेपाली कथा" कार्यपत्र प्रस्तुत |

त्रिभुवन विश्वविद्यालय काठमांडौ र यसअन्तर्गत नेपाल अधिराज्यभरिका नेपाली विषयका शिक्षकहरूको एउटा बृहत् सम्मेलन वि० सं० २०३४-मा काठमांडौमा भएको थियो | त्यसको कार्यविवरण बृहत् ग्रन्थको रुपमा पाठ्यक्रम विकास केन्द्रले प्रकाशित गरेको छ | यस सम्मेलनमा नेपाली अधिराज्यभरिका ११८-जना नेपाली पढ़ाउने शिक्षक तथा प्राध्यपकहरूले भाग लिनु भएको थियो | यस सम्मेलनमा ११ दिनसम्म नेपाली भाषा र साहित्यको विषयमा शिक्षणको क्षेत्रमा आइपरेका विविध समस्याहरू, नेपाली व्याकरणको विवाद, नेपाली लेखाइमा एकरुपता साथै नेपाली शिक्षणको क्षेत्रमा आइपरेका अरू पनि कति कठिनाइहरूमाथि कार्यशाला साथै सामूहिक छलफल भएको थियो | नेपालबाहिर दार्जीलिङ जिल्ला, सिक्किम, आसाम, मेघालय आदिका नेपाली भाषा, साहित्य र व्याकरण पढ़ाउने शिक्षक र प्राध्यापकहरू, नेपाली विषयको पाठ्यक्रम तयार गर्ने विद्वान्हरू, नेपाली प्रश्नपत्र बनाउने व्यक्तिहरू साथै परीक्षा-पत्र जाँच गर्ने परीक्षकहरूले अध्ययन गर्न अवश्यक छ | अझ नेपाली विषयमा स्नातकोत्तर, अध्ययन गर्ने, महाविद्यावारिधीको निम्ति शोध गर्ने विद्यार्थीहरूको निम्ति यो कार्यविवरण उपयोगी सिद्ध हुनेछ |

यो ११ दिनको कार्यशाला र सामूहिक छलफल सर्वश्री गोपाल पाँडे "असीम", माधवप्रसाद देवकोटा, माधवप्रसाद घिमिरे, रत्नध्वज जोशी, कृष्णचन्द्र सिंह प्रधान, बालकृष्ण सम, कमल दीक्षित, डा० मोहनभान सैंजू, भवानी भिक्षु, चुडानाथ भट्टराई, यदुनाथ





खनालजस्ता वरिष्ठ साहित्यकार, शिक्षाविद् र विद्वान् व्यक्तिहरूको सभापतित्वमा सम्पन्न भएको थियो ।

प्रस्तुत गरिएका निम्नलिखित २०-वटा कार्यपत्रहरूमध्ये यस सम्मेलनमा छलफल गरिएका ६ वटा कार्यपत्रहरू शिक्षण सिद्धान्त र शिक्षाको इतिहाससँग सम्बन्धित यस प्रकार थिए -

१. अनिवार्य नेपाली किन, कहाँ कुनकुन तहमा कस्तो र कति मात्रामा? - डा० बल्लभमणि दाहाल ।
२. माध्यमिक र उच्च शिक्षाबीचको सम्बन्ध - हेमाङ्गराज अधिकारी ।
३. ऐतिहासिक परिप्रेक्ष्यमा नेपाली भाषा र साहित्यको शैक्षिक प्रयोग तथा पाठ्यपुस्तक समस्या - डा० वासुदेव त्रिपाठी ।
४. प्रयोजनपरक नेपाली शिक्षणको आवश्यकता - डा० बल्लभमणि दाहाल ।
५. भाषा शिक्षणको परिप्रेक्ष्यमा नेपाली भाषा शिक्षण - हेमाङ्गराज अधिकारी र चुडामणि वन्धु ।
६. सबै अध्ययन संस्थानका प्रमाण-पत्र र स्नातक तहका निम्ति प्रस्तावित अनिवार्य नेपाली पाठ्यक्रमको सम्बन्धमा - डा० वासुदेव त्रिपाठी ।

यस कार्यशालामा पढ़िएका निम्नलिखित १४ वटा कार्यपत्रहरू अनिवार्य नेपालीका विभिन्न विषयहरूको शिक्षण र यसको मूल्याङ्कनसँग सम्बन्धित थिए -

१. वर्ण-विन्यास - शिवगोपाल रिसाल
२. बोध शिक्षण - जगन्नाथ जोशी
३. अभिव्यक्ति र शैली शिक्षण - कुमार बहादुर जोशी ।
४. संक्षेपीकरण शिक्षण - माधव भण्डारी
५. विस्तृतीकरण शिक्षण - मोहनराज शर्मा
६. प्राविधिक या पारिभाषिक शब्दावली शिक्षण - गणेश "विषम" र गोविन्द प्रसाद घिमिरे ।
७. वाक्य शिक्षण - चुडामणि वन्धु
८. शब्द निर्माण शिक्षण - नरेन्द्र चापागाईं र भानुभक्त पोखरेल
९. मूल्याङ्क विधि : अनिवार्य नेपालीको परिप्रेक्ष्यमा - शरदचन्द शर्मा

यसमा पनि निम्नलिखित ५ कार्यपत्रहरू चाहिँ मूल नेपालीका विभिन्न विषयका शिक्षणसँग सम्बन्धित थिए

१. नेपाली साहित्यको इतिहास शिक्षण - दयाराम श्रेष्ठ "सम्भव"
२. नाटक र एकाङ्की शिक्षण - केशवप्रसाद उपाध्याय
३. कविता शिक्षण - राममणि रिसाल
४. कथा शिक्षण - सुशीला भट्ट
५. उपन्यास शिक्षण - गोपीकृष्ण खनाल

यस कार्यशालामा पाठ गरिएका जम्मै कार्यपत्रहरू पठनीय छँदैछन् । विद्वान सभापतिहरूको मन्तव्य, सुझाउ र भाषण पनि विचारणीय छ । तर सबै भन्दा महत्त्वपूर्ण छ - सभापतिको आसनबाट विद्वान् लेखक कमल दीक्षितले दिनु भएको सङ्क्षिप्त भाषण - जो यस प्रकार छ -

शिक्षण र लेखन बेग्लाबेग्लै कुरा हुन् । यस सम्मेलनमा शिक्षक र लेखक दुवै छन् । लेखन भन्दा शिक्षण गाह्रो कुरा हो । नेपाली विषय पढ्नेहरूका निम्ति ठूलो सौभाग्यको कुरो लेखकसँग पढ्न पाउनु हो ।

यहाँ उपस्थित शिक्षकहरूमध्ये धेरैले लेख्नु हुन्छ, जो लेख्नु हुन्न वा जसले लेख्नु भएको छैन उहाँहरूसित लेख्नु होस्-भनेर अनुरोध गर्दछु । हामीले नेपाली पुस्तकहरूको सङ्ख्या ३० हजार पुऱ्याउने लक्ष्य राख्नु परेको छ ।

शैक्षिक र साहित्यिक क्षेत्रमा अन्वेषणको वातावरण बनाउन नितान्त आवश्यक छ । यो काम त्रिभुवन विश्वविद्यालय र प्रज्ञा प्रतिष्ठानले गर्न सक्छन् ।

नेपालीलाई वि० सं० २०४० सम्म माध्यम बनाउन प्राविधिक प्रस्तकहरूको उत्पादन हुनुपर्दछ। यस काममा ढिलाइ नहोस्। यसरी नेपाली विषय पढ़ाउने शिक्षकहरूलाई भेला पारिएकोमा त्रिभुवन विश्वविद्यालयलाई धन्यवाद छ।

विद्वान् लेखक कमल दीक्षितज्यूको भनाइ धेरै अंशमा अहिले नेपालबाहिर दार्जीलिङ, सिक्किम र पूर्वाञ्चलमा समेत नेपाली विषय पढ़ाउने शिक्षक तथा प्राध्यापकहरूमाथि यनि यथावत् लागू हुन्छ। साथै यस सम्मेलनको कार्य विवरण तथा कार्यपक्षहरू पढ्दा हामीलाई के लाग्छ भने नेपाली विद्यालय तथा महाविद्यालयहरूमा नेपाली पढ़ाउने शिक्षक तथा प्राध्यापकहरूको सम्मेलन, सेमिनार तथा कार्यशालाहरू बेलाबेलामा आयोजन गर्नुपर्ने हो। उत्तर बङ्गाल विश्वविद्यालयले एकपल्ट यस्तै एउटा सेमिनार नेपाली विभागद्वारा आयोजन गरेको थियो। तर त्यसमा पाठ गरिएका कार्यपत्रहरू कतै मुद्रित रुपमा प्रकाशित भएको देखिएन।

अर्को कुरा, हामीबीच पनि कतिपय शिक्षकतथा प्राध्यपकहरूलाई लेखकको स्थानमा राखी, मूल्यङ्कन गर्ने विद्वान्हरूको अझ कमी छैन। नेपाली पढ़ाउनेबित्तिकै लेखकको रुपमा गणना गर्ने उनीहरूको भूल प्रवृत्तिमा श्री कमल दीक्षितको उपरोक्त भनाइले आघात पुऱ्याएको छ। "लेखन र शिक्षण दुइ अलग अलगै विषयहरू हुन्" - यो वाक्य उनीहरूको निम्ति विचारणीय छ। हामीहरूमध्ये कति लेखकहरू छन् जो शिक्षण क्षेत्र बाहिर छन्। कति लेखकहरू जो शिक्षण कार्यसँग सम्बन्धित छन्। तर कति यस्ता शिक्षक र प्राध्यापकहरू छन् जो विद्यालय महाविद्यालयहरू नेपाली पढ़ाउँछन् तर कुनै स्रष्टा होइनन्। यसैले कमल दीक्षितज्यूको उपरोक्त मन्तव्य सम्झिनुपर्छ। शिक्षण क्षेत्रमा भएका हाम्रा सम्पूर्ण नेपाली विभागका शिक्षक र प्राध्यपकहरूले लेख्न थाले हामीसित कुनै पनि विषयका पुस्तकहरूको कमि रहने छैन। हामी भाषा र साहित्यको क्षेत्र पनि विषयका पुस्तकहरूको कमी रहने छैन। हामी भाषा र साहित्यको क्षेत्रमा वैभव सम्पन्न हुनेछौं। साथै हाम्रा नेपाली-अनेपाली विद्यार्थीहरू आज कतिपय स्कूल कलेजमा अध्ययन गर्दैछन्, कति नेपालीमा "अनर्स", एम० ए० गर्दैछन्। अझ कति त भाषा र साहित्यिक क्षेत्रमा विद्यावारिधी महाविद्यावारिधीको निम्ति अनुसन्धानमा समेत लागिसकेका छन्। यसैले यी जम्मै नेपाली भाषा साहित्यका विद्यार्थीहरू पनि लेखकहरूसित पढ्ने सौभाग्य चाहन्छन्। उनीहरूले आज कमल दीक्षितज्यूको यो वाक्य दोहोऱ्याएर भन्न खोजिरहेका छन् - "लेखकहरूसँग पढ्न पाउनु सौभाग्यको कुरा हो।"

अब यो सौभाग्य नेपालबाहिरका सम्पूर्ण शिक्षक-शिक्षिका, प्रध्यापक-प्राध्यापिकाहरूले पनि नेपाली विषय लिने हाम्रा विद्यार्थीहरूलाई प्रदान गर्ने बेला आइसकेजस्तो हामीलाई लाग्छ।



शिक्षामा मातृभाषा नै आमाको दूध हो

— रवीन्द्रनाथ ठाकुर







# अन्तमा फेरि एकपल्ट समाचार सारांश

- राजेन्द्र भण्डारी
भू० पू० छात्र

संसदमा घायल भएका
एक हूल सांसदहरूद्वारा
वर्तमान सरकारबाट फिर्ता
हृदयघातले सिकिस्त प्रधानमन्त्री
राममनोहर लोहिया अस्पतालको आइ०सी०यू० वार्डमा ।
सांसदहरूको खपतमा आएको ह्रासमाथि
जवाहरूलाल नेहरू विश्वविद्यालयका प्राध्यापकहरूको
टीभीमा गम्भीर बहस ।

स्कूटरमा आएका
एक हुल ज्ञात बन्दुकधारीहरू
भीड़माथि अंन्धाधुन्ध गोली चलाएर बेपत्ता ।
कतैबाट कुनै अप्रिय घटनाको समाचार छैन ।

मिर्ग र चितुवाहरूबीच
चिड़ियाखानामा अमनचैन कायम ।
फूलहरू नभए पनि
बर्घैंचाको सुरक्षाका लागि सेना तैनाथ ।
राजा आशीर्वाद मुद्रामा ।
प्रजा मौनताको अभ्यासमा मग्न ।
अर्थहरूको विश्वासमत गुमाएपछि शब्दहरू सत्ताच्यूत
स्थिति तनाउपूर्ण तर नियन्त्रणमा ।

गान्धीमार्गमा भएको बमविस्फोटमा
अठारको मृत्यु । चौधजना अस्पतालमा ।
पुलिसको कुकुरले विष्फोट सामग्री सुँघिरहेछ ।
सुँघिरहेछ । सुँघी नै रहेछ ।
विष्फोटमा युवा प्रगति मोर्चाको हात रहेको शङ्का ।
घटाको जाँच गर्न भनी बसेको छ
गुमनारायण चौधरी आयोग ।

गान्धीमार्गमा भएको दुर्घटनामाथि
गृहमन्त्रीद्वारा चिन्ता व्यक्त ।
मर्नेको आफन्तालाई
दस-दस हजार रुपियाँको अश्रुपूर्ण चेक ।
अनि बाँच्नेहरूलाई
अर्को दुर्घटनासम्म पर्खिदिने
विनम्र अनुरोघ ।







# पुत्का अनि त्यसको मह

- एच० के० प्रधान

सैकड़ौं किसिमका मौरीमध्ये पुत्का पनि एक किसिमकों मौरी नै हो। कव्यौरी पनि एक प्रकारको सानो मौरीको प्रजाति हो अनि पुत्का भने सबैभन्दा सानो प्रजातिको मौरी हो। पुत्काको शरीर प्रायः कालो अनि चार मिलिमिटर जति लामो मात्र हुन्छ। यसको खील नभएकोले यसलाई अङग्रेजीमा "स्टिंगलेस हनी बी" (Stingless Honey Bee) भनिन्छ अनि यसको महलाई "सुगर ब्याग" (Sugar Bag) भनिन्छ। अङग्रेजी जीवशास्त्रमा यसलाई "ट्रिगोना" (Trigona) वा "मेलिपोनाइन" (Meliponine) भनिन्छ। पश्चिमका देशहरूमा यसको महत्त्व नभएकोले होला अङजोरो अक्सफोर्ड, चेम्बर्स वा वेब्स्टर (Webster) शब्दकोषहरू Encyclopedia Britannica Micropedia-मा पनि उक्त शब्दहरू पाइन्न। गोर्खा जातिमा यसको महत्त्व कतिपय बहुमूल्य औषधीय गुणको कारणले छ। यसको खील हुँदैन तर यसको ढोंडलाई नोक्सान गर्ने वा मह काटने मानिसलाई यसले अलिकति दुखाउने हिसाबले टोक्ने गर्छ। साधारण मौरीले यसलाई आक्रमण गरे आक्रमणकारीको पखेटा काटिदिन्छ अनि मह काट्ने मान्छेको केश पनि मज्जाले काटिदिन्छ। यसको ढोंडमा चाखा हुँदैन तर यसले रूखको खोटो (resin) र मैन h मिलाएर सानासाना सुन्दर कटौराहरू बनाउँछ अनि त्यसमा आफ्नो तरल मह जमा गर्छ। यसको मह गुलियो तर अलिक अमिलो किसिमको हुन्छ।

पुत्काको मह टम्म बन्द हुने बोतलमा राख्नुहुँदैन कारण यसको ग्यासले बोतल फुटाउनसक्छ। गाँउ घरमा यसको बोतलमा मकैको खोयाको प्रयोग गरिन्थ्यो।

अस्ट्रेलिया तथा निउजिलेण्डमा उन्नत तरिकाको मौरीको ढोंडबाट सय केजीसम्म मह निकालिए पनि पुत्काको ढोंडबाट केवल एक केजी मह निकाल्न सकिन्छ। यसैकारण ती देशहरूमा पनि साधारण महभन्दा पुत्काको मह पाउनु गाहारो अनि धेरै गुणा महँगो पाइन्छ जसरी दार्जीलिङ, डुवर्स आदिमा मौरीको मह एक केजीको १५० रुपियाँमा पाइए पुत्काको मह २० गुणा महँगो दरमा पाइएला। दार्जीलिङ जिल्लाको सिटोङ र आठपञ्चरमा गाउँलेहरूले पुत्का पाली त्यसको मह बिक्री गर्छन् तर मह शुद्ध अनि स्वच्छ भने विरलै पाइएला। यद्यपि ती गाउँलेहरूले पुत्कालाई घरेलु हिसाबमा पालेको सराहनीय छ।

एकपल्ट त्यहाँका एकजना गाउँलेले पुत्काको मह बेच्न मेरो घरमा ल्याएका थिए। त्यस्तो बहुमूल्य औधीय मह एउटा दबाईको बोतल राम्ररी नधोई हालेका रहेछन्। त्यसर्थ त्यो महको गन्ध त्यो दबाईको गन्धले ढाकेको पाएँ। यसर्थ हाम्रा गाउँलेहरूले सफाई र शुद्धतामा ध्यान दिन अनिवार्य सम्झन्छु। अष्ट्रेलियाबाट मगाएको पुत्काको मह त्यसको शुद्धता अनि सफाईले धेरै नै रंग र गन्धमा भिन्नता पाएँ। आजकल पुत्काको

महको औषधीय गुणको प्रचारले यसको माग अनि दाममा बढ़ोत्तरी आएको छ। यो आँखामा पनि हालिन्छ र यो शुद्ध अनि सफा हुन अनिवार्य छ भनी मह काडने अनि बिक्री गर्नेहरूले बुझ्नुपर्ने हो। हालसालै भने साधारण मौरीको महमा निम्बुको रस मिलाएर पुत्काको मह भनी बेच्न पनि थालिएको छ भन्ने पनि सुन्नमा आएको छ।

कहिले कहिँ टेलिभिजन हेर्दा तिरिमिरी देखिन लागे मेरी श्रीमती अनि म एक-दुइ थोपा पुत्काको मह आँखामा हाल्ने गर्छौं। पाँच-दश सेकेण्ड आँखा प्रचण्ड रूपमा पोले पनि केही क्षणपश्चात् टेलिभिजन सफा देखिन लाग्छ अनि बिहान मुख धुँदा आँखाको मैला निस्केको पाउँछौं। टेलिभिजन वा अलिक टाड़ाको वस्तु वा मानिसहरू तिरिमिरी देखिन थाल्नु आँखामा फूला पर्न थालेको लक्षण पनि भनिन्छ अनि पारम्भिक आँखामा फूला पर्दा पुत्काको महले काट्नसक्छ पनि भनिन्छ। यसर्थ समय-समयमा वयस्कहरूले पुत्काको मह एक-दुइ थोपा हाल्ने गरे लाभ नै होला भन्ने मलाई लाग्छ। साह्रो गरी खोकी लागेको बेला अतिकता पुत्काको मह बिस्तारो गरी निले खोकी साम्य भएको मलाई अनुभव छ। कुनै किसिमको कीराले टोकेको ठाउँमा पुत्काको मह दलिदिए दुखेको तुरन्तै हराउँछ साथै घाउ पनि बड़्दैन। काटेको ठाँउमा पुत्काको मह लगाएर काटेको दुवैतर्फबाट केही क्षण थिचिराखे दस-बीस मिनटमा काटेको घाउ क्विक फिक्स (Quick fix) -ले झैं जोड़ि दिन्छ।



मेरो कार्यालायका एकजना बंगाली सहकर्मीको जवान भानिजलाई टी० बी० को दबाईले एकदमै काम गरेन साथै एक जना गोर्खा बैद्यले पुत्काको महको सिफारिस गरेको भन्दा मैले किनेकै दाममा उसलाई आधा केजी जति पुत्काको मह दिएको थिएँ। दिनमा दुइपल्ट गरी एकएक चम्ची खुवाउनू भन्ने सुझाउ पनि दिएँ। तीन महीनापछि विरामी स्वस्थ भयो भन्ने खबर पाए। एकपल्ट पुत्काको महले मिरिकमा एकजना स्त्रीको भूँड़ीको क्यानसर जाती भएको सुन्दा म र मेरी श्रीमती प्रमाणको निम्ति मिरिक गयौं। त्यहाँका एकजना श्री देवान जो बुजुर्ग थिए साथै अघि कतिपय चिया बगानका डाइरेक्टर थिए, सँग भेट गऱ्यौं। उहाँले हामीलाई भन्नुभयो, "हो, मसंग काम गर्ने एकजना कर्मचारी गरीबीको कारण डाक्टरी औषधी गर्न असमर्थ हुनाले केवल पुत्काको मह खुवाएर भूँड़ीको क्यांसर जाती गराएको मैले चाल पाएको हो।" कुकुरले टोक्दा वा साँपले डस्दा पनि हाम्रा मानिसहरू पुत्काको मह वा पुत्काको टुटी दल्ने गर्छन्। साँपले डसेको भाग वरिपरि पुत्काको मह झट्टै लगाइदिए साँपको विष फैलिँदैन भनिन्छ तर यसको व्यवहार भएको भने अझसम्म देखेको छुइनँ। साँपले डसिहाले पुत्काको मह डसेको ठाउँमा झट्टै लगाएर डाक्टरकोमा कुदाए के नोक्सान पो होला? तर पुत्काको मह आफूसँग नभए गाँउ-घरमा पाइनुपऱ्यो। आफ्रिका साथै पाकिस्तानको कतिपय स्थानहरूमा पनि पुत्काको मह औषधिको रूपमा प्रयोग गरिन्छ।





पुत्काले आफ्नो गुड़ँमा पस्न वा त्यहाँबाट निस्कन एउटा टुटी बनाएको हुन्छ जसद्वारा मात्र तिनीहरू आफै साथै मौरी आदि किटहरू गुड़ँ वा ढोंडमा पस्न वा ढोंडबाट निस्कन सक्छन्। यो साँघुरो हुनाले साधारण मौरीलाई पुत्काको गुड़ँमा पस्न निकै गहारो पर्छ। पुत्काले टुटीको बाहिरी मुख दिउँसो खुला राख्छ तर रात पर्दै जाँदा त्यसलाई थुन्ने गर्छ। मैले पुत्काको अध्ययन गरेको चाल पाएर युरोपका एकजना वैज्ञानिकले पुत्का विषयको एउटा भिडियो सी० डी० पठाइ दिएका थिए। त्यसमा पुत्काको टुटी खुलेको अनि बन्द भएको दृश्य अति चाख लाग्दो छ। लाठपञ्चर र सिटोङका गाउँलेहरूले पुत्का पाल्तु बनाएकोमा उनीहरूको सराहना नगरी रहन सक्दिनँ कारण उन्नत देशहरूमा हर मौरीको ढुँडबाट सालानी सय केजीसम्म मह निकाल्नलाई आफ्रीकानाज मौरी पालन



गर्दा रैथाने मौरीहरू लोप हुँदै गइरहेछन् साथै नया प्रजातिका ती मौरीहरूको सङ्ख्या बड़दै जाँदा त्यहाँको पुत्काको आवादी घट्दा कतिपय रैथाने वनस्पति पनि पोलिनेसन् (polinate) हुन नपाएर लोप हुँदै गइरहेछन्। अस्ट्रेलियामा भने महको लागि पुत्का पालन गर्नेहरूको सङ्ख्या घट्दै गए पनि पुत्का लोप नहोस् भनी हामीले घर वरिपरि गमलामा फूल रोपेझैं पुत्काका गुँड़ राख्न थालेका छन्।

संसारका १,६०० प्रजातिका रेथाने मौरीहरूमध्ये अस्ट्रेलियामा केवल १४ प्रजातिका पुत्का पाइन्छन्। पुत्का दक्षिणपूर्व एसियाका देशहरूमध्ये भारतमा हिमालयका निम्न पहाड़ी क्षेत्र, पाकिस्तान, नेपाल, भूटान आदि बाहेक अस्ट्रेलिया, आफ्रिका, मेक्सिको अनि ब्राजिलमा पाइन्छ। गोर्खाहरूबाहेक पाकिस्तानका कतिपय भागमा र आफ्रिकामा पुत्काको महलाई औषधिको रूपमा व्यवहार गरिन्छ तर न्युजील्याण्डको माउरी जातिका मानिसहरू यसलाई स्वाद मानी खानलाई जङ्गलमा जङ्गगल खोजी हिडँछन्। मेक्सिको अनि गाउटेमालाका माया आदिवासीहरूले पुत्का पालन हजारौं वर्षदेखि गरिआएका थिए तर पन्ध्रौं शताब्दितिर त्यो आदिवासी जाति लोप हुँदै जाँदा पुत्का पालन पनि त्यहाँबाट लोप हुँदै गयो।

केही वर्षअघि मेघालयमा सुन्तला बगानमा मौरीको ढोंड राखी खसिया कृषकहरूले सुन्तलाको मह बेची आफ्नो आयश्रोत बढ़एको पाउँदा हाम्रा गाँउलेहरूले पनि मौरी पालनमा उचित ध्यान लगाउन् भन्ने आशयले सुनचरीमा मौरी पालनमा ध्यान आकर्षण गराउन एउटा लेख छपाएको थिएँ। मुख्य मन्त्री डाक्टर पवन कुमार चामलिङ ज्यूसँग पनि एकपल्ट कुरै-कुरामा यो विषय झिकेको थिएँ। दुइतीन सालअघि सिक्किम सरकारले कृषकहरूलाई वितरण गर्न एक हजार उन्नत किसिमका ढोंडहरू सिलगड़ीमा बनाउन दिएको चाल पाएको थिएँ। पश्चिम भारतमा तोरीको खेतमा हजारौं ढोंड़हरू राखी ठूला-ठूला कम्पनीहरूले कृषकहरूलाई रोयल्टी दिइन्छ भने हाम्रो इलाकामा अरू जग्गामा हेरी फूल र फलको किसिमबाहेक सङ्ग्याहरूको कमी छैन। यसर्थ यस भेकमा मौरी र पुत्काको महको उत्पादन राम्रो हुनसक्छ भन्ने मलाई

लाग्छ। संसारका वैज्ञानिकहरूको पुत्काको औषधीय गुणप्रति ध्यान आकर्षण गराउन अहिले घरी म प्रयासमा छु। आजकल अस्ट्रेलिया र न्युजील्याण्डहरूमा पुत्का पालन गरी त्यसको मह बिक्री गर्नेको सङ्ख्या घट्दै गएकोले हाम्रा गाउँलेहरूले त्यस काममा ध्यान दिए पुत्काको महको हाम्रै इलाकामा पनि माग बढ़िरहेको अनि भविष्यमा त्यसको माग विदेशमा पनि बडे हाम्रा गाउँलेहरूको आयश्रोतमा बढ़ती हुन्थ्यो कि जस्तो मलाई लाग्छ। अघि गुण जानेको विषयमा लेख्दा "गोर्खा" नागरीक बेसी बुझिन्छ अनि ती मारवाड़ी, मदेसी, थारू, काश्मिरी, पञ्जाबी, नेपाली नागरिकता लिएर बसेकोले नेपालमा ठेट नेपालीका अधिकार लिएर बसेका तामाङ, गुरुङ्ग, लाप्चे, वालुङ्गपा, शेर्पा साथै अरू नेपालीभाषी भोटिया आदिलाई पनि हाम्रो त्यहाँ केही अधिकार जस्तै स्कुटर आफ्नो नाममा राख्नु, जमीन किन्नु हाम्रो पारम्पारीक व्यवसाई जस्तै पुत्का वा अरू पशु पालन गर्नु इत्यादि भने पहाड़े जातिले मात्र डुवर्स आदिमा हामी गर्छौं। हाम्रो भेकमा पुत्का ४००० फिट माथी मात्र पाल्न सकिन्छ।

आफ्नो ढोंड़मा मौरीहरूले भिन्न फूलको पराग मिसाउँदैन र एकएक ढोंडमा एकैप्रकारको फूलको मात्र पराग ल्याउने गरेकोले हरेक महको सुगन्ध पनि त्यही फूलको सुगन्ध मात्र पाइन्छ। त्यसैले एकैप्रकारको परागको खोजीमा मौरीहरू कोशौं पनि उडनुपर्छ अनि कतिपय थाकेर बाटैमा मर्छन् पनि। पुत्काको विषयमा भने यो चलन मैले जान्न पाएको छुइनँ। मेघालयमा सुन्तलाबारीमा ढोंड़ राख्ने हुनाले त्यहाँको सुन्तलाको मह प्रसिद्ध छ। सुन्तलाको महको रङ्ग पनि सुन्तलाकै रङ्गको हुन्छ अति त्यो सुन्तला कै रङ्ग र रूपको प्लास्टिकको डब्बामा बजारमा बिक्री गरिन्छ। नेपालमा मैले चिउरीको मह चिउरीको भित्री भागको सेतो गुदीको रङ्गको नै देखें। दार्जीलिङ, डुवर्स, सिक्किम आदिमा फूल नाना थरिका साथै पर्याप्त मात्रामा भएकोले यहाँ मौरी अनि पुत्काको महको उत्पादन व्यावसायिक रूपमा पनि सकिएको अनि यो पर्यटन र चियाझैं प्रसिद्ध पनि हुनसक्ला जस्तो मलाई लाग्छ। यसर्थ यस लेखमा, पाठकहरूले मौरी अनि पुत्का पालन विषयमा गाउँलेहरूलाई अवगत गराइदिन्छन् कि भन्ने आशा राख्छु।।

*I am indebted to my father for living, but to my teachers for living well*



Alexander the Great







# समाज निर्माणमा विद्यार्थीवर्गको भूमिका

- विजय नारायण प्रधान
कालेबुङ

समाज निर्माण दिशामा कुनै पनि राष्ट्रका विद्यार्थीहरूको विशाल भूमिका हुनुपर्छ जसरी एउटी आमाले आफ्ना छोरा-छोरीको स्याहार-सुसार गर्छिन् त्यसरी नै विद्यार्थी नै विद्यार्थीहरूले आफ्नो समाजको संरक्षण गर्नुपर्दछ। विद्यार्थीहरू नै समाजका रचयिता एवं शक्ति हुन्। समाजमा धैरै जसो मानिसहरू व्यक्तिगत सोंच एवं स्वार्थवादी ढाँचाका हुन्छन् - जसको समाजसँग कुनै सरोकर हुँदैन। आफूमूखी विकास नै उनीहरूको लागि सर्वोपरी देखिन्छ। यस्तो किसिमको सोच समाज विनाशका स्रोत हुन्। यस्ता सोचाइलाई चाँडै हटाउन नसके एउटा ठूलो विद्यार्थी-शक्ति अन्तमा विलीन हुने सम्भावना देखिन्छ। समाजमा भएका विकृति विसङ्गतिलाई हटाएर स्वच्छ, सभ्य समाजको निर्माण गर्नु नै आजको विद्यार्थीवर्गको मूलभूत भूमिका देखापर्छ।



यसको निम्ति प्रथमतः समाजमा निहित नकारात्मक विचारलाई निर्मल पार्नुपर्छ जसका निम्ति विद्यार्थीशक्तिलाई एकता र सक्षम बनाउनुपर्ने देखिन्छ। जुन कुरोको निम्ति पुस्तकको शिक्षासँगै व्यावहारिक शिक्षाको खाँचो पर्छ। जुन चेतनाले हाम्रो समाजलाई विद्यार्थीवर्गले एउटा ठोस वरिपर्तनको मार्गमा हिँड़ाउन सक्छ। तर शिक्षाबिना सामाजिक चेतना भने विद्यार्थीवर्गले पाउन सक्दैन। जतिसक्दो शिक्षाले विद्यार्थी जीवनलाई ज्ञानसम्पन्न तुल्याउनुपर्छ। त्यही ज्ञानले विद्यार्थीलाई जीवन चिनाउँछ साथै सही मार्गमा निष्ठा एवं कर्तव्य परायण बनी हिँडने अनुभूति दिन्छ।

समाजमा भइरहेको नराम्राहरूलाई पन्साएर असल शिक्षा एवं मार्ग अवलम्बन गर्नु विद्यार्थीवर्गको परम कर्तव्य हुन्। समाजलाई प्रायःजसो पुराना रीति-रिवाज, परम्परा, रुढ़ी आदिले गिजोलिरहेका पाउँछौं। समाजमा कुन या कस्तो कुरोको कस्तो प्रभाव पर्छ त्यो जान्नु विद्यार्थीवर्गको जिम्मेवारी हुन्छ।

यस्तो परम्परा एवं रूढ़िलाई मासेर नया मार्ग एवं चेतनाको जग बसाल्नु नै विद्यार्थीवर्गको मुख्यतः उद्देश्य देखा पर्छ। विद्यार्थीहरूले आफूलाई सुधार गरी समाजको निर्माण गर्नुपर्छ। समाज सुधार नै विश्वमल्याणको शुरूआत हो। विद्यार्थीहरूले आफूलाई सुधार गरि समाजको सुधार गर्नुपर्छ एवं समाज सुधार नै विश्वकल्याणले आफ्नो सफल भविश्यको निर्माण व्यक्तिगत् स्तरमा बाँचेको समाजको अवस्थामाथि निर्भर गर्छ। यसैले सफल समाजको निर्माण नै राष्ट्रका नागरिकको सफल भविश्यको निर्माण गर्नु हो।







१. नीमको जरालाई कम्मरमा बाँधिराख्नाले नेत्र पीड़ाबाट आराम पाइन्छ ।

२. मह फिटिएको दूध पान गर्नाले रक्त-स्राव (Bleeding)को विकारबाट मुक्ति पाइन्छ ।

३. भैंसीको दूधमा त्रिफला चूर्ण मिलाएर तयार गरिएको लेप शिरमा मल्नाले फुलेको सेतो केश कालो हुँदछ ।



४. अल्सरको बिमारीमा बन्दागोभीको रसपान फलदायक हुन्छ ।

५. हाई काढ्नुपर्दा गालामा प्याट्ट हिर्काए हाई आउन बन्द हुन्छ ।

६. बेलको पातको रस ३-पटक दिनमा २ खाने गरे जन्डिसबाट आराम पाइन्छ ।

७. गहत लगातार खाइरहे किडनीमा भएको स्टोन गलेर जान्छ ।

८. छालामा मूसा पलाएको खण्डमा अदुवाको रस वा मेवाको चोप दैनिक रुपमा लगाए हराउँछ। यसबाहेक निम्बुको रस खाने र दल्ने गर्दा पनि मूसा नष्ट हुँदछ ।

९. छाला चिलाउने बिमारमा पदिना पिसेर वा सेतो चन्दन घोटेर दिनहूँ लगाउनाले छला चिलाउनु छोड्छ । (छाला चिलाएमा मकैको पीठो दलिदिनाले पनि बन्द हुन्छ)

१०. उच्च रक्तचापले ग्रस्त मानिसले प्रशस्त तरबुजाको सेवन गर्नु लाभदायक हुनेछ । साथै दुइ-दुइ केस्रा लसुनको टुक्रा दिनमा ३-पल्ट सेवन गरे, रक्तचापमा नियन्त्रण आउँछ । साथै अतिरिक्त निम्न रक्तचाप (Low Pressure वा Hypotension)-मा च्याउको सूप वा सिस्नुको पात अथवा आधा चमच गो-मूत्र दिनहूँ सेवन गरे Low Pressure नियन्त्रित बन्दछ ।







# सम्झनाभित्र मेरो कुमुदिनी

- सुदाश राई (भूतपूर्व छात्र)
दलगाउँ, रोङ्गो

कुमुदिनी परिवारद्धारा निकालिने यो पत्रिकामा कुमुदिनी विद्यालयमा बिताएका क्षणहरू लेखौं भनी बिहानै चियाका चुस्काहरुमा ती दिनहरूलाई याद गर्न लाग्छु अनि आफै छक्क पर्छु, विद्यालयबाट बाहिर आएको पनि ११ वर्ष बितिसकेछ। विश्वास लाग्दैन।

राम्रोसित ती दिनहरू याद गर्न लाग्छु........ रोङ्गो माध्यमिक विद्यालयबाट १९९६-मा माध्यमिक परीक्षा उत्तीर्ण गरेपश्चात् कुमुदिनीमा एघारौं श्रेणीमा भर्ना हुन्छु। त्यस समय म सँगसँगै वरिपरिका विद्यालयहरू साथै डुवर्स, भूटानबाट पनि श्रेणीमा विद्यार्थीहरू भर्ना हुन्छन्। बिहानको एसेम्बलीपश्चात् हामी एक-अर्का हेडमाष्टर-इन-चार्ज पासाङ छिरिङ सरले एघारौं श्रेणीमा परिचय साटासाट गर्छौं। विद्याश्रमको त्यस समयकमा हामी नवागान्तुक विद्यार्थीहरूलाई सम्बोधन गर्दै भन्नुभएको कुरा आज पनि कानमा गुँञ्जिरहन्छ। त्यस दिन उहाँले भन्नु भएको थियो, "तिमीहरू यस विद्याश्रममा विद्यार्जनको साथ यहाँको संस्कृतिसित धुलमिल भएर, यसको नाम उच्च राख्नेछौं भनी कुमुदिनी विद्याश्रम तिमीहरूमाथि भरोसा राख्दछ।" यसरी नै विभिन्न विषयका गुरु-गुरुमा आउनुभएर हामीसित परिचय साटासाट गर्ने क्रम जारी रहन्छ।

बिस्तारै दिनहरू बित्दै जान्छ। साथीहरू एक अर्काका घनिष्ठ हुँदै जान्छौं। तीमध्ये रबिन, उदय, सबिन, प्रितम हामी एकै बेन्चमा पर्छौं। त्यस समय म कलेज पढ्ने दाज्यूहरूसित घर किराइ लिएर डुँग्रामा हाङबु सुब्बाकहाँ बस्थे। त्यसै समय हामी साथीहरू सल्लाह गरेर "समय" पत्रिका निकाल्ने प्रबन्ध मिलाउँछौं। विद्याश्रममा त्यस समय सबैले आदार गर्ने र बेसी डर राख्ने पासाङ छिरिङ सरलाई बाघ सरको उपमा दिएर केटाहरूले नाम राखे तापनि मलाई भने त्यस समय उक्त पत्रिका निकाल्नमा लेख मात्र नदिएर विभिन्न परामर्श पनि दिएर सहयोग पुऱ्याउनुहुन्छ। त्यस समय त्यो पत्रिका कुमुदिनीमा मेरा साथीहरू र गुरु-गुरुमाले ३००-प्रति भन्दा बेसी किनिदिएर थप प्रोत्साहन दिएका थिए।

कुमुदिनी विद्याश्रममा यसरी बिस्तारै समय बित्दै जान्छ। विद्याश्रमको अन्तर श्रेणी तर्क प्रतियोगिता आयोजना हुन्छ। अघि पनि रोङ्गो उच्च विद्यालयमा रहँदा महकुमा स्तरीय तर्क प्रतियोगिता नेतृत्व गरी निश्चल ट्रफी हात पार्न सफल भएको म। तर्कभन्दा त्यसै भाग लिइहाल्छु। त्यस तर्क प्रतियोगितामा पनि हामी विजयी बनेका थियौं।

त्यसै समय कालेबुङमा "राष्ट्रीय राज भाषा सम्मेलन" शुरु हुन्छ। उक्त सम्मेलनले कालेबुङका विद्यालयहरूमाझ दुइ स्तरका निबन्ध प्रतियोगिता आयोजना गर्छ दशौं र बाह्रौं श्रेणीमाझ। कुमुदिनी विद्याश्रमबाट बाह्रौं श्रेणीको प्रतियोगिताको लागि म चुनिन्छु। निबन्धको शिर्षक हुन्छ "भारतीय साहित्यमा कालेबुङको योगदान।" उक्त निबन्धका लागि धेरै परिश्रम गरेर रचना सम्मेलनलाई बुझाउँछु। सम्मेलनको





अन्तिम दिन टाउनहलमा भव्य कार्यक्रममा फलाफल घोषित हुन्छ आफै दङ्ग हुन्छु; प्रतियोगितामा प्रथम भएको रहेछु। डा० ग्राहम्स होम्स र गर्ल्स हाइस्कूलका छात्राहरू क्रमैले दोस्रो र तेस्रो भएका हुन्छन्। उत्तर प्रदेशका राज्यपालबाट हामीले पारितोषक ग्रहण गर्छौं। त्यस दिन कुमुदिनीका साथीभाइहरू पनि मेरो खुशीमा खुशी हुन्छ; विद्याश्रमका सम्पूर्ण गुरु-गरुमाले बधाई दिनुहुन्छ; आज पनि राजभाषा सम्मेलन स्मृति चिन्ह हेर्दा ती दिनहरू आखाँमा झल्झल्ती आइदिन्छ।

त्यस समय भारतीय फूटबल दलको प्रशिक्षण शिविर सार्क फूटबलका लागि कालेबुङमा सम्पन्न हुन्छ। मेला ग्राउण्डमा उनीहरूको प्रदर्शनी म्याच भएको दिन एक नराम्रो घटना घट्छ। हामी कुमुदिनीका छात्रहरूलाई एस० यू० एम० आई०-को साथीहरूले खबर गर्छन् कि कचहरीकै तल आर्मी गाड़ीले जुबली स्कूलकी एक छात्रालाई कुल्चेर मारेछ। हामी त्यहाँ पुग्छौं। आक्रोशित विद्यार्थीहरूले आर्मी गाड़ी जलाइदिन्छ; पुलीस आई विद्यार्थीहरूलाई लाट्ठी चार्ज गर्छ, धेरै विद्यार्थीहरू अस्पतालमा घाइते भई भर्ना हुन्छन्। प्रतिवादस्वरूप त्यस दिन फूटबल म्याच मात्र बन्द नभई, सम्पूर्ण कालेबुङ नै बन्द रहन्छ।

तिता-मिठा दिनरूसँगै विद्याश्रमको सबैभन्दा ठूलो उत्सव २४ मई स्कूल दिवस पालन गर्न व्यस्त रहन्छ। हामी बाह्रौं श्रेणीका केही मिल्ने साथीहरू मत मिलाएर पसल थाप्ने निर्णय गर्छौं। २४ मईको दिन हामी सबै व्यस्त हुन्छौं - कोही दोकानतिर, कोही प्रोग्रामतिर। शायद मेरो विचारमा त्यसै समय कुमुदिनी परिवार पुनः गठन भएको हुनुपर्छ ९७-९८ तिर।

समय बग्दै जान्छ। विद्याश्रमको वार्षिक खेलकूद साथसाथै अब वार्षिक परीक्षा पनि नजिक आउन थाल्छ। अब सम्पूर्ण ध्यान उच्च माध्यमिक परीक्षामाथि हुन्छ सबै विद्यार्थीहरूको। वार्षिक परीक्षाको अन्तिम दिन विद्याश्रमले हामीलाई नवागन्तुक प्रधानअध्यापक श्री भानु बरालको नेतृत्वमा विदाई जनाउँछ। सबै बाह्रौं श्रेणीका हात्रहरू एक-अर्कोलाई अँगालो हाली भावविह्वल हुन्छौं।

..........साँच्चै राम्ररी सोच्दा विद्याश्रमबाट बाहिर आएको हिजोझैं लागे पनि ११ वर्ष बितिसकेछ।




अन्तर आश्रम तर्क प्रतियोगिता,
कुमुदिनी विद्याश्रम २००९
प्रधानाचार्य, शिक्षकगण, प्रतियोगीवर्ग
अनि
निर्णायकका रूपमा भूतपूर्व छात्रहरू।



संस्मरणात्मक लेख

# खेल-जगत्मा मेरो जीवन-यात्रा

- कप्तान अगय छिरिङ लेप्चा
भूतपूर्व छात्र (२/१० गोर्खा राइफल्स)

हामी मानव जाति संसारमा जन्मन्छौं अनि मृत्यु वरण गर्छौं। भनौं यसै मानव जीवनमा हामीले कति कति दुःखकष्ट वहन गर्दै कठिन परिश्रमको साथ उच्च शिक्षा आर्जन गर्दछौं अनि कर्मक्षेत्रको फाँटिलो बगरमा उच्च ओहोदा ओगट्न हामी सक्षम् बन्छौं अनि आफ्नो कर्म प्रतिभाको परिचय दिएर जगत्मा कीर्तिलाई आलोकित गर्दछौं। अन्ततः हामी कर्मक्षेत्रबाट संन्यास लिँदछौं।

मानव जीवन उसै त कर्मद्वारा परिवेष्टत छ। त्यसैले यस संसारमा पुरुष भइकन "कि गरिछाड्नु कि मरिछाड्नु" भन्ने पूर्वजहरूको आहान् अनुसरणीय छ। पौरख नचालाई केवल उदर भर्ने मनुष्य भुसको थैलो सिवाय केही होइन। भनौं यस संसारले उसलाई काँधमा चढ़ाउँछ जसले पौरख चलाउँछ। यो कथन अनुरुप पौरखी बन्ने पथहरू यहाँ बग्रेल्तै छन्। सङ्गीत, साहित्य, विज्ञान, व्यापार, फौजदारी, कृषि, सरकारी एवं नागरिक सेवा, खेलकूद आदि पौरखी पथका खाँटी उदाहरणहरू हुन्। विदित रहोस् - मानवले यसै पथको अवलम्बनद्वारा नै जीवनमा प्रतिभा-सम्पन्न एवं उन्नत साथै समृद्धिशाली बन्दछ। भन्नुपर्छ, यस कुराको अनुभव जीवनको लामो यात्रा गरेर केश पाके पछि नै हुन्छ। तर कलियुगीन आजको माहोलमा सबै नै बाठा-टाठा र जान्ने भएपछि हाम्रो कुरो कसले पो सुन्ने हुन्? अतः म कमलकारको व्यक्तिगत अनुभवजन्य भनाइ के छ भने हामीले सानै उमेरदेखि एउटा लक्ष्य राखेर विद्या आर्जनको साथसाथै खेलकूद र कला क्षेत्रमा पूर्ण मनोयोग दिएर कठोर साधना गर्नसके भविष्यका दिनमा यसको मीठो फल अवश्य चाख्न पाउँछौं।

अब गुरु हुन्छ मेरो पौरखी जीवन यात्राको फपत्त्यासब्याक किंवा मेरो जीवन-यात्रा, मेरो फुटबल खेल यात्राको संस्मरणात्मक अतीतका झझल्कोहरू। परिचयको ब्याजमा भन्नपर्दा म कलमकार एक साधारण कृषक लेप्चा परिवारमा १४ जुलाई, १९४१-को दिन अप्पर सिन्देबोङ बस्ती, कालेबुङमा जन्मेको हुँ। हामी पाँच दाजु-भाइ, एक दिदीमाझ म स्व० दावा छिरिङ लेप्चा र स्व० श्रीमती डोमा ल्हमु लेप्चाका माइलो छोरो हुँ। मेरो प्राथमिक शिक्षा (Waugh - 11 Mile) प्राथमिक पाठशालाबाट भएको थियो। त्यसताक हामी छात्रहरू हाफपेन्ट लगाई खालीखुट्टा जानुपर्थ्यो। हुनको लागि यो वाग-स्कूल लिली वागको स्मृतिमा सन् १८९९-मा स्थापित गरिएको थियो जसको आयु अहिले १११ वर्ष पुगिसकेको छ। तथापि अहिले आफू यस पाठशालाको छात्र छँदा यसको जुन अवस्था थियो हिजोआज पनि त्यही अवस्थामा देख्न पाउँछु। यति वर्ष नाघिसक्दा पाठशालाको कायापलट नहुनु अनि कुनै

परिवर्त्तन नआउनु आश्चर्यवत् कुरो हो। यदि गाउँका गण्यमान्य व्यक्तिहरूले चाहेको भए यस पाठशालाको विकासमा तन-मन-धन लगाएर यसलाई उच्च विद्यालयको तहमा अभिवृद्धि (graded) गर्न सक्थे। तर कसैले पनि पाठशालाको विकासक्रियामा चासो देखाएनन्।

म कुमुदिनी होम्स (टाउन स्कूल)मा सन् १९५१-५२-मा भर्ना भई सन् १९६३-मा उच्च माध्यमिक स्तरीय शिक्षा पूर्ण गरेको थिएँ। तत्पश्चात् सन् १९६४-मा घरमै बारी खन्नु, गोरु जोत्नु र साथी-सँगीहरूसँग फुटबल खेल्नु मेरो दैनिकचर्या बनेको थियो। हामी कुमुदिनी होम्सका विद्यार्थी छँदा स्कूलको फुटबल टिम (दल) अरू स्कूल टिमभन्दा अधिक दह्रिलो र परिपक्व थियो। अन्य स्कूलका फूटबल टिमले बाहिरबाट खप्पिस खेलाड़ीहरू झिकाई कुमुदिनीको प्रतिद्वन्द्विता गर्दा पनि बाहिरका खप्पिस खेलाड़ीहरूलाई कुमुदिनीमाथि विजय पाउन सक्तैनथे।

उसै त सन् १९६०-६२-मा हाम्रो कुमुदिनी फुटबल टिम कलकत्ता पुगेर दुइ-दुईपल्ट उत्तर बँगाल चेम्पियन बन्नसक्नु हाम्रो निम्ति गर्वको विषय थियो। कलकत्ताजस्तो महानगरमा खेल्न जाँदा रातभर रेलयात्रा गरी शियालदह स्टेशनमा सुताइ भएको आलो सम्झना अझै छ। भोको पेटमा अथवा दिनमा डम्म भोजन गरेर फुटबल खेल्नु र प्रतिद्वन्द्वीलाई जित्नु असम्भव जस्तै लाग्थ्यो।



यसै फुटबल खेल यात्राकै क्रममा विद्यार्थी जीवनमा नै कालिम्पोङ XI-को पक्षमा हर्ली-कपको निम्ति कैयौंचोटि फुटबल खेल खेल्ने अवसर मैले पाएँ। यस अतिरिक्त DC. XI-को पक्षबाट पनि मैले हर्ली कप फुटबल खेल प्रतियोगितामा अंशग्रहण गर्ने सुयोग प्राप्त गरेको थिएँ। अरू त के कुरो - सन् १९६२-मा गभनर्र कपजन्य फुटबल प्रतियोगितामा समेत खेल प्रदर्शन गर्ने सुनौलो मौका पाएकै हो मैले पनि। अझ भन्नुपर्दा त्यसै ताक अन्तर्महकुमा (Inter Sub Division) फुटबल प्रतियोगितामा पनि दार्जीलिङ, कालेबुङ, खरसाङ औ सिलगड़ीमाझ प्रतिद्वन्द्विता मैले गरेको थिएँ। यही आनन-फाननमा मेरो निम्ति जागिरको प्रबन्ध मिलाइँदै थियो।

कुरो यतिमै टुँगिदैन, सन् १९६४-मा डा० ग्राहाम्स होम्स फुटबल टिम गठन गरेर कालुराम मिन्त्री स्मारक कप लिग म्याचमा जितेपछि १५ अगस्तमा खेलिने स्वाधीनता दिवस फुटबल प्रतियोगितामा पनि उक्त टिमले स्वाधीनता दिवस शिल्ड (Independence Day Shield) जित्न सक्षम बन्यो जसको श्रेय मलाई दिइयो। यसको ठीक वर्ष-दिनभित्र मार्च १९६५-मा मलाई धरान (नेपाल) जाने काम आइपर्‍यो। एक रात





त्यहाँ गुजारेपछि भोलिपल्ट बिहान दाजुको मित्रले - "भाइ मलाया भर्ती जाने?" भनी सोधे। मैले पनि "जान्छु" भनी सहमति जनाएँ। तर मलाई केही थाहा नै थिएन मलाया कहाँ छ भनेर। पछि बुझ्दा घोपा क्याम्प रहेछ पुग्नुपर्ने ठाउँ। त्यसपछि दाजुका मित्रले कार्यालयमा पुऱ्याएर एसिस्टेन्ट क्लर्कसंग परिचय गराए। कारण जोसित सोझो परिचय गर्नु थियो ती हेडक्लर्क साहब त्यहाँ उपस्थित थिएनन्। तथापि ती एसिस्टेन्ट क्लर्कले मेरो अभिलाषा (Ambition)-बारे एउटा निबन्ध लेख्नको निम्ति आग्रह गरे। मेरो पनि खेलकूदप्रति विशेष अनुरक्ति भएको कारण र त्यसमाथि पनि फुटबल खेल मलाई अति प्रिय लाग्ने हुनाले पश्चिम बङ्गालका प्रायः सबै जिल्लाहरूमा फुटबल खेलको कौशलताको प्रदर्शन गरेर कलकत्तामा दुइपल्ट विजयको आफ्नो विद्यालयलाई सन् १९६१-६२-मा गौरवान्वित तुल्याएको र दुइपल्ट उत्तर बङ्गाल चेम्पियन बनेका तथ्य अनि खेलसम्बन्धित अनुभव रूपमा निबन्ध लेखेर ती अधीकारीको हातमा सुम्पिदिएँ।

धरानको धरामा प्रवेश गर्नअधि मैले Short Service Commission को लागि जलपाइगढ़ीमा पत्राचार (आवेदन) गरें तर पत्राचार गर्न विलम्ब भएको जानकारी मैले पाएँ। धरानमा त्यसबखत भर्ना खुलेको थिएन। निबन्ध बुझाएको भोलिपल्टदेखि क्याम्पमा आएर बस्ने अनुमति प्राप्त भयो। मेरो भर्ना जुलाई-अगस्त १९६५-तिर भएपछि कलकत्ताबाट हामी चढ़ेको पानीजहाज हप्ता-दिनमा मलायाको पेनाङ नामक बन्दरगाहमा पुग्यों। त्यसपछि त्यहाँबाट तालिम शिविरमा हामी जवानहरूलाई लगिएर तालिम शुरू गराइयो। हामी जवानहरूमा शुरूमा त्यति पारस्परिक परिचय आदन-प्रदान नभए पनि शनैः शनैः हामीमाझ घनिष्टता बढ़्दै गयो। तर रातो माटो युक्त तालिमे मैदानमा गर्मी असाध्य हुँदो रहेछ हाफपेन्ट नलगाए पनि। यस ठाउँको तुलनामा सिलगढ़ीको गर्मी केही होइन भन्ने अनुभव हामीले गऱ्यौं।

धरान भर्ना (Recruitment) भएपछि मेरो खेलकुदको यात्राअन्तर्गत Inter-Department Six Side Football Tournament को अन्तिम चुड़ान्त खेलमा Recruit Clerk Team-ले १९६५को Trophy जित्न सफल भयो। स्मरण रहोस्, 'Nepal Cup' केवल गोर्खा पल्टनमाझ खेलाउने गरिन्छ। अतः मलायामा खुट्टा हालेपछि Training Depot-बाट मलायाको Sevemban भन्ने ठाउँमा गएर फुटबल खेल्ने सुयोग मैले पाएँ।

सन् १९६६-मा हाम्रो तालिम (Training)-को समापनपश्चात् पुनः सिँगापुरको निशुन (Neesoon) भन्ने ठाउँमा Basic Clerk Course गरियो। यसै क्रममा हाम्रो २-१० गोर्खा राइफल Blackangmati ले Santosha Island मा गई केही वर्ष बिताउनु परेपछि फेरि पल्टन मलेशियाको पेनाङ शहरमा सरुवा भयो। यस ठाउँ २-१० गोर्खा राइफलको सरुवा हुँदा १० गोर्खा राइफलबाट "नेपाल कप" तथा ब्रिगेड अफ गोर्खाज टिमबाट मलेशियाका प्रायः सबै जिल्लाहरूमा पनि गएर मैले फुटबल खेलको कौशलता देखाउने अवसर पाएँ। यस अतिरिक्त १० गोर्खा राइफल्सले 17th Division Malaya District फुटबल खेलमा विजय पायो भने हाम्रो दल Combine Services Trophy जित्न सफल बन्यो।

फुटबल खेलकै परिप्रेक्ष्यमा पुनः भन्नु हो भने पल्टनको पक्षमा र पल्टनदेखि अलग पेनाङ राज्यको





पक्षमा Malasia Cup को निम्ति अनि Penang State Selection, Penang State Indians साथै Tamilian Physical and Cultural Association (T.P.C.A.) को पक्षबाट पनि प्रायः मलेशियाका अरू राज्यविरुद्ध खेल्ने मौका मैले नपाएको होइन। सन् १९६९-मा सिँगापूर प्रथमपल्ट मैत्री खेल खेली गोल छिराउँदा मलाया वासीसबै दर्शकको मन जित्न म पुनः सफल बनें। यसदेखिबाहेक मैले Medan (Indonesia) मा पनि पेनाङ राज्यको पक्षबाट खेल प्रदर्शन गर्नमा आफ्नो दक्षता दर्शाएको थिएँ। त्यसताक महिला दल पनि फूटबल खेल मैदानमा अभ्यास गर्दा रहेछन् अनि फुटबल खेल्दा रहेछन्। यस विषयप्रति म उसै पनि अनभिज्ञ नै थिएँ छु। यतिसम्म कि मेरो खेल प्रदर्शनको मीठो सम्झनाको छाप खेल-प्रेमीहरूको मनमा छोड़िराखेको छु जुन मलेशियाको एउटा पत्रिकामा Lepcha Net Hattric को शीर्षकमा प्रकाशित भइसकेको छ।

अब यता आफ्नै मातृथलो कालेबुङमा जग्गा-जमीन लिएर बस्न लागेका बेला पनि आफ्नै देश भारतवर्षको राष्ट्रीय-दलका खप्पिस खेलाड़ी जर्नलसिंह औ दङ्गराजहरूका विरूद्ध चाखलाग्दो खेल प्रदर्शन गरी आफूलाई दक्ष एवं प्रतिष्ठित खेलाड़ीको परिचय दिनसकें। अझ भन्नुपर्दा हङकङ स्टेडियममा पनि ब्रिगेड अफ गोर्खाज XI-को पक्षबाट Maccan Army टिम सँगको मैत्री खेल खेलिँदा जितबाजी हाम्रै हातमा परेको थियो।

सन् १९७०-७१ सालको कुरो न हो, मलेशियाबाट हङकङ सरूवा भएपछि हामीलाई अनिवार्य रूपम हक्की खेलको निम्ति निर्देश दिइयो। यस खेलको अभ्यसबाट अभ्यास्त भइसकेपछि हक्की खेल प्रतियोगितामा Land Forces, Hongking Major र Minor Unit Hockey Trophy दुवै हत्याउन सक्यौं। यसै क्रममा २/१० गोर्खा राइफल्सको पक्षमा हाम्रो हक्की दलले सर्वप्रथम U.K.(United Kingdom)-मा सन् १९७३-मा Infantry Battalion Hockey British Army Trophy-को विजेता बन्ने सुयोग पाएको थियो। एवंरीतले कहिले कालेबुङको खेलमैदानदेखि विदेशका खेलमैदान, कहिले बालुवाको खेलमैदान त कहिले दुबोको खेलमैदान गर्दै कहिले पानीझरी र प्रचण्ड गर्मी अनि कहिले चाहिँ हिउँको बर्षात्को सामना गर्दै खेल खेल्नुपर्दा साँच्चै मलाई एउटा नौलो अनुभव हुन गएको छ।

सन् १९६५-मा म सिपाही क्लर्क (Rifleman Clerk)-को पदमा नियुक्ति पाएपछि आफ्नो अफिसको काम १०-११ बजे रातसम्म निप्टाइ सक्थें अनि ५:३० बजे सखारै खेलमैदानमा पुगी सहकर्मीहरूसित खेलको अभ्यासहेतु भेला हुन पुग्थें। एवंरीतले प्रत्येक बिहान-बेलुकी गरेर आठ घण्टा खेल-मैदानमा अभ्यास गर्नुपर्ने नियम नै बसेको थियो। नत्र खेल मैदानमा पुग्न विलम्ब भए शास्तीमूलक कार्वाही हुँदथ्यो।

उच्च पदोन्नतिहेतु मैले मलेशिया, सिँगापुर, हङकङ औ ब्रिटेनमा रहेर धेरै कोर्सहरू गर्नुपर्‍यो। कठोर परिश्रमको साथ कोर्सको अध्ययन गरी सकेर उच्च दर्जामा म पास भएँ अनि १८ वर्षको सेवाको परिणामस्वरूप सन् १९८३-मा ब्रिटेनमा छँदा मेरो Commission Lieutenant-को दर्जामा पदोन्नति (Promotion) हुनगयो। फेरि यस पदमा रहँदा-रहँदै सन् १९८७ सालमा मैले कप्तान (Captain)-को पदभार ग्रहण गरें। तत्पश्चात् कप्तान पदमा कार्यरत





रहेको तीन वर्षपछि सन् १९९०-मा हाम्रो बटालियन २/१० गोर्खा राइफल ब्रनई भन्ने ठाउँबाट पुनः हङकङ फर्क्यो अनि १९९१ सालदेखि २३ वर्षको पेन्सन अवकास लिई आफ्नो थलो कालेबुङ फर्किआएँ।

देश-परदेश खाएर अनि खेलकूदमा नाम कमाएर कालेबुङ फर्केपछि मैले के कति काम गर्नसकें, कसैलाई थाहा भएन। विदित गराउन चाहन्छु कि मेरो अवकाशमय जीवनमा १९९५-देखि १९९८-सम्म Area Welfare Officer को पदभार लिएर भूतपूर्व सैनिक सङ्गठनमा सेवारत रहें। विश्वयुद्ध विभिषिकाबाट बाँचेका बाल-वृद्ध-बनिताहरूलाई कल्याण कोषबाट अनुदान प्रदान गरियो, रोगीहरूलाई औषधि-वितरण, जल-आपूर्तिको प्रबन्धको साथै अग्निकाण्ड तथा आइलाले धन-जनको नाश भएको खण्डमा कोष प्रदान गऱ्यो हाम्रो सैनिक संगठनले। सन् १९६९-मा Gorkha Charitable Trust-को निम्ति ब्रिगेड अफ गोर्खाज (Brigade of Gorkhas) टिमको पक्षबाट मलेशिया र हङकङमा फुटबल प्रदर्शन गरी केही मात्रामा भए पनि कोष सङ्ग्रह गरियो अनि आवश्यकताअनुसार पीड़ितहरूलाई सहयोग गरियो। यस प्रकारको प्रवृत्ति आज पनि यथावत् छ।

अन्ततः मेरो भन्नुपर्ने कुरो यति छ कि हाम्रो दार्जीलिङ भेकका युवाहरूले सबै खेलमा दक्षतापूर्ण प्रदर्शन गर्नसके उनीहरूको भाग्य अवश्य चम्कने छ। किनकि पक्कापक्की भन्नु हो भने मणिपुरको खेल प्रदर्शनको तुलनामा पहाड़को खेल प्रदर्शनमा यहाँका युवाहरू धेरै पछौटे छन्। मेरो यस कथनको साथसाथै खेलकुद विषयक मेरो रचनालाई कुमुदिनी परिवारको स्मारिकामा स्थान दिलाउनमा सहयोग गरेबापत म कवि टी० एन० सुवेदीप्राति आभार प्रकट गर्दै धन्यवाद दिन चाहन्छु।

~~~~~~~•~~~~~~~



*The education of the heart*
*cannot be imparted through books.*
*It can only be done through the living*
*touch of a teacher.*

- Mahatma Gandhi

~~~~~~~•~~~~~~~

## लेखक परिचय



| | | |
|---|---|---|
| नाउँ | : | कृष्ण बुढ़ाथोकी |
| माता-पिता | : | स्व० मोतीमाया, स्व० अर्जुन बुढ़ाथोकी |
| जन्म | : | ७ दिसम्बर, १९५४ (६ माइल, ऋषि पथ कालेबुङ) |
| शिक्षा | : | एम० ए० |
| पहिलो प्रकाशित रचना | : | १९६६ (गोर्खा, कुमुदिनी होम्स स्कूल पत्रिका) |
| सम्पादन | : | ज्वालामुखी, नमस्ते, चौबन्दी, निर्माण, नवज्योति, चासो, सरोकार, आँखीझ्याल, अनुभूति, Gladiolus आदि। |
| प्रकाशित कृत्ति | : | १. इन्द्रेणी (बाल गीत र कविता सङ्ग्रह)<br>२. जीवन यात्राका सहयात्रीहरू (संस्मरणात्मक लेख सङ्ग्रह)<br>३. गीत-गङ्गा (गीति सङ्ग्रह) |
| प्रकोशोन्मुख कृति | : | १. आदर्श विद्यालयको परिकल्पना<br>२. एक बिटा संस्मरण |
| स्थायी ठेगाना | : | ठूलो मङमाया बस्ती, दार्जीलिङ, सम्पर्क -8016107893,<br>email- kribusayami@gmail.com |

# बिर्सनै नसकिने (मास्टर) मित्रसेन थापा

**- कृष्ण बुढ़ाथोकी**

को हुन् यी मित्रसेन थापा?......... नेपाली सङ्गीत-सागरमा डुबुल्की लगाउने अर्थात् नेपाली सङ्गीतलाई आत्मसात् गरी यसलाई नजिकबाट नियाल्ने वा अध्ययन गर्ने हामीमध्ये कोही पनि प्रौढ़वर्गका लागि उक्त प्रश्न अनौठो नलाग्ला तर हाम्रो नव युवा पिँढ़ी जो आज आधुनिकताको नाउँमा पाश्चात्य सङ्गीतमा डुब्दै गइरहेको छु। हाम्रो लोक संस्कृति र परम्परादेखि टाढ़िँदै गएको हुनाले आफ्नो इतिहासप्रति न त्यस्तो कुनै चासो छ औ न ती युगपुरुष प्रति श्रद्धा र गौरवानुभूति नै छ। पाश्यात्य सङ्गीतमा हाम्रो भावी पिढ़ी अन्धोभक्त हुने क्रम यथावत् रहिरहे मित्रसेन थापाजस्ता युग पुरुषहरू विस्मृत हुनेछन्। अहिले नै धेरै ओझेल परिसकेको आभास हुन्छ। यस्तो अन्याय हुनदिनु हामी प्रत्येक (के नयाँ के पुराना) जातिप्रेमी र सङ्गीतप्रेमी नेपालीहरूको कर्त्तव्य हो।

साहित्य (नाटक, कथा, निबन्ध, काव्य) -मा प्रशस्त कृति जन्माएर उल्लेखनीय योगदान पुऱ्याए पनि उनले नेपाली सङ्गीतिक क्षेत्रमा नै विशेष ख्याति आर्जन गरेर आज नेपाली सङ्गीतको आकासमा एक चम्किलो नक्षत्र हुन पुगेका छन्।

मास्टर मित्रसेन थापाको जन्म भाग्सुको धाराखोला नामक गाउँमा २९ दिसम्बर, १८९५ -को दिन भएर मृत्यु भएको थियो ९ अप्रेल, १९४६ -मा। उनका पिता मानवीरसेन थापाले सन् १८७१-तिर

तत्कालीन अङ्ग्रेज-भारतको १/१ गोर्खा राइफल्समा जागिर शुरू गरेका थिए। यसर्थ मित्रसेनको बाल्यकाल भाग्सुमै बित्यो। उनकी माता राधा थापा अत्यन्त धर्मपरायण अनि कर्मकाण्डमा गहिरो रुची राख्ने हुनाले त्यसको असर छोरो मित्रसेनमा नपरी छाड़ेन। फलस्वरूप उनलाई जन्मनसाथ माता-पिताले जोगीलाई बेचेका थिए कारण त्योभन्दा अघिका पुत्र-सन्तान जन्मँदै-मर्दै गरेका थिए रे। उनका तीनजना दिदी थिए भन्ने जानिन्छ।



मित्रसेन थापाको बाल्यकाल भाग्सुमै बितेको हुनाकारण उनको कालान्तरको जीवनलाई गहिरो छाप पार्ने दुइवटा घटनाहरू छन्। त्यसबेला त्यतातिर उर्दू माध्यममा पढ्नुपर्ने हुनाले उनले पनि आठौं कक्षासम्म उर्दूमै पढ़े र अर्को घटना चाहिँ लाठे भएको हैसियतमा उनलाई पनि सेनामा जागिर खानुपर्ने वाध्यता थियो। ब्रिटिश सेना छाउनी वरिपरि जति पनि सानासाना केटा (छोकड़ा)-हरूलाई "लाइन छोकड़ा" भनिन्थ्यो जसमाथि सेनाका उच्च पदाधिकारीहरूको गिद्धे दृष्टि नपरी छाड्दैन थियो। उसै पनि सैनिकको छोरो भएपछि मित्रसेनलाई "लाइन छोकड़ा"-देखि १/१ गोर्खा राइफल्स अन्तर्गत सिग्नल विभागमा भर्ना गराइयो। यसको लगत्तै दुइ वर्षपछि पहिलो विश्वयुद्धको डड़ेलो सल्कियो चारैतर्फ। उनी भर्ना भएको कम्पनीसमेत नरसंहार गर्ने युद्धमा धकेलियो तर आफ्नो हातले मान्छे मार्ने दुस्साहस उनमा थिएन कि? या त हुनसक्छ आफ्नो जन्मभूमि भारतमाताप्रति श्रद्धाभक्तिकै कारण परोक्ष रुपमा बृटिशप्रति घृणा थियो र नै उनी सैनिक पेशाबाट कसो गरी हुन्छ छुटकारा चाहन्थे। इच्छा भए उपाय किन ननिस्कनु? आखिरमा त्यस बन्धनबाट आफूलाई कुनै बलियो बहाना देखाएर मुक्त गराइछाडे। वास्तवमा उनीजस्ता भावुक हृदय भएका कलाकारलाई सैनिक पेशा त्यो पनि बृटिशको पक्षमा अप्नाउनु भनेको उनको कलाकारी प्रतिभाप्रति ठूलो अन्याय हुन्थ्यो। पल्टनको जागिरे बन्धनबाट मुक्त भएपछि उनको अघि अब आत्म-निर्णयको बाटो खुल्ला थियो। अन्य साधारण मानिसलाई कुनै जीविका अप्नाएर जीवन धान्नु धौ-धौ पर्छ तर उनी असाधारण मानिस भएकैले जीविकोपार्जनलाई भन्दा कलाकारितालाई प्राथमिकता दिएर जीवनभर सङ्घर्ष गरिरहे। पचास वर्ष पूरा गरी उनको इहलीला समाप्त हुँदासम्म मित्रसेन थापा साँच्चै हाम्रा मास्टर मित्रसेन थापा भइसकेका थिए।

हिन्दी र उर्दू भाषा आफ्नो मातृभाषा थिएन तथापि उनी यी भाषाहरूमा कति पोख्त थिए भने यसको ज्वलन्त उदाहरण सन् १९२६-देखि १९२८-सम्म थुप्रै





नाटकहरू लेखेर मञ्चनसम्म आफै गर्थे। यिनै नाटकहरूलाई मञ्चन गर्न उनले "हिमालय थिएट्रिकल कम्पनी" गठन गरी ठाउँ-ठाउँमा घुमेका थिए। हिन्दी र उर्दू भाषामा नाटकहरू मञ्चन गर्दै हिँड्दा जनसाधारणले उनलाई थुप्रै ज्ञान भएका एकजना अधिकारसम्पन्न वा ज्ञाता भन्न सुहाउने मानिस देखेर उनको नाउँको अघाड़ि "मास्टर" उपाधि जोड्नथाले। त्यसपछि उनी सार्वजनिक रुपमा मास्टर मित्रसेन थापा भए। उनकी धर्मपत्नीलाई लाजवन्ती थापा भनेर चिनिन्छ जसले आफ्ना पतिका बहुमूल्य पाण्डुलिपिहरू खुबै जतन गरी राखेकी थिइन्। १२०-वटा कृतिका पाण्डुलिपिहरू उनीबाट हाम्रा मूर्धन्य साहित्यकार श्री इन्द्र बहादुर राईको वशमा परेपछि नै मित्रसेन थापा हामीबीच व्यापक चर्चाको केन्द्रबिन्दु बने। नेपालीभाषी वा गोर्खा जनमानसमा मास्टर मित्रसेन थापालाई व्यापक रुपमा परिचित गराउने उच्च कोटीका व्यक्तिहरूमा स्वनामधन्य श्री इन्द्र बहादुर राईको नाउँ अग्रपंक्तिमा आउँछ। उनीप्रति हामी अत्यन्त आभारी छौं।

आफ्नो ५१ वर्षे जीवनकालमा २० वर्ष नै सृजनात्मक कार्यमा चुर्लुम्म डुबाएर उनी अमर बन्नपुगे। शुरुमा केही वर्ष यता हिन्दी र उर्दू साहित्यमा योगदान गरी १९३२-देखि मृत्युपर्यन्त भने नेपाली भाषा, साहित्य, गीत र संस्कृतिको सेवामा मेरिमेटेको पाइन्छ। दुर्भाग्यवश नेपाली जगत्ले उनीबाट अझ धेरै सेवा पाउनसकेन उनको अल्पायुबाट पनि जति प्राप्त गर्नसक्यो त्यति मात्रले पनि हाम्रो वाङमयलाई मलिलो र फाँटिलो बनाइदिएको छ भनिदिँदा अत्युक्ति हुनेछैन।

जीवनको अन्तिम २० वर्ष उनले सम्पूर्ण रुपले नेपालीपन अँगालेर गीत लेख्ने, गाउने अनि ६-वटा नाटकलाई "डिस्क रेकर्ड" गर्नमा तल्लीन राखे। नाटक मात्र होइन भारतीय नेपाली समाजमा नेपाली गीतलाई "डिस्क रेकर्ड" गर्नेमा उनी पहिलो व्यक्तिको कीर्तिमान् रचेका छन्। यसभन्दा पूर्व नेपाली गीत "डिस्क" भर्ने कलाकारमा सेतुराम श्रेष्ठ र मेलवा देवी छन्। उनीहरू नेपालका बासिन्दा हुन्। मेलवादेवीको दुःखद् मृत्यु कलकत्तामा भएको थियो। मास्टर मित्रसेन थापाको अविष्मरणीय कृति नेपाली भाषाको पहिलो रेडियो नाटक "बालभक्त ध्रुव" -को निर्माण सन् १९३६-मा भएको हो।

यस्ता बहुमुखी प्रतिभामा धनी अनि अनेकौं कीर्तिमानका मालिक मास्टर मित्रसेन थापाको पुण्यस्मृतिलाई सदैव आलो राख्न सिक्किमबाट "नेपाली साहित्य परिषद्" -ले अत्यन्त सराहनीय कामको छ त्यो हो "मित्रसेन स्मृति पुरस्कार"-को गठन। यसमा चयनित कुनै श्रेष्ठ कलाकारलाई एकाउन्न हजार अङ्क रुपियाँ प्रदान गरिन्छ। यसबाहेक परिषद्ले उनका कलाजयी (classics) गीतहरूलाई एउटा "क्यासेट"-मा सङ्ग्रह गरी सुरक्षित राख्ने अर्को महत्त्वपूर्ण कार्य गरेको छ।

उनका अनेक कलाजयी गीतहरूमा एउटा हो-

"लाहुरेको रेलीमाई
फेशनै राम्रो
रातो रुमाल रेलीमाई
खुकुरी भिरेको..........."

आफ्नै गीत, गायन (स्वर) आफ्नै र आफैले प्रथमपल्ट तयार गरेको "डिक्स रेकर्ड" तत्कालीन ब्रिटिश गोर्खा सिपाहीको माध्यमबाट उक्त लोकप्रिय गीत दोस्रो विश्वयुद्धमा संसारको कुन कुनामा पो गुञ्जिएन होला र........?



Gathering of Ex-Students of Kumudini Homes on School day 2009



Bhaichung Bhutia, being feliciated by Pariwar in 2009 for his excellent Performance in Jhalak Dhikla Ja, also seen Udai Kumai (L) and T. Lachungpa (R)



Marathon Runners Prabal Chhetri, sponsored by Kumudini Pariwar



Kumudini homes teaching staff 2010





# ज्ञान-विज्ञान

(सङ्कलित)

१. अमेरिकाले यसै एक्काइसौं शताब्दीको अन्तरालभित्र चन्द्रमाको धरातलमा पनि पृथ्वीमा जस्तै पर्यटन, बेंक र प्रयोगशालाको स्थापना गर्ने योजना तयार पारेको छ।

२. आगामी सन् २०१४ ई०-मा अमेरिकाले मङ्गल ग्रहमा अन्वेषण हेतू मान्छे पठाउने सुरसार गर्दैछ।

३. अमेरिकाको न्यूयोर्कको एउटा थियोसोफिकल हलमा जड़ित एन्टिनाको माध्यमबाट परिवारले मृतक आत्मासँग कुराकानी गर्नसक्ने व्यवस्था मिलाइएको छ।

४. जापानमा शैल्य-चिकित्सा गर्ने रोबोट मनुष्यको निर्माण भएको छ।

५. हालै एउटा ताइवानी कम्पनीले विवाह-सुलभ योग्य वर-वधूको छनौट गर्ने र जोड़ी मिलाउने "लव भेजिशियन" भन्ने एउटा एलेक्ट्रोनिक मसिनको निमार्ण गरेको छ।

६. टेरिलेविस नामक व्यक्तिले आफ्नो सङ्ग्रहालयमा राखेको ३००० वर्ष पुरानो मिश्र देशकी एक महिलाको शवको मूल्य एक करोड़ दिनार तोकेको थियो।

७. फ्रान्सका एक वेंधशालाका खगोल-शास्त्रीहरूले नौवटा ग्रहलगायत अझ अर्को दुइवटा ग्रहको पत्तो लगाएका छन् जसको नाम "हु-आर्म" बताइएको छ।

८. ताइवान देशमा त्रिमुचेक लियाङ नामक व्यक्तिले कुकुरहरूको लागि अत्याधुनिक सुविधा-सम्पन्न होटल निर्माण गरेका छन्। ४० कोठाको यस होटलमा कुकुरहरूको श्रृङ्गारको लागि अलग्गै "डग व्यूटी पार्लर"-को प्रबन्ध गरिएको छ। यस अतिरिक्त यस होटलमा कुकुरहरूको जन्मदिन (Birthday) मनाउने चलन छ।

९. भिन्न-भिन्न भाषागत चलचित्रहरूमा प्रथमपल्ट प्रदर्शित चलचित्रहरू हुन् - नेवारी भाषाका "शिलु", गुरुङ भाषाका "पाते र न्याम्सो न्यौही", लिम्बू भाषाको "तरेवा", मगर भाषको "लङधन", तामाङ भाषाको "सेमरि छोरङगन" अनि राई भाषाको "सयाबुङ"।









# हृदय रोगको विषयमा केही जानकारी औ अनुभव

- सी० के० प्रधान
(चन्द्र कुमार प्रधान)

हृदय रोग सबैभन्दा घातक रोग मानिन्छ। हामीहरू सुन्छौं, कसैलाई "Heart Attack" भयो भनेको। कोई मर्छन, कोई बाँच्छन् तर बाँचे पनि खँजा भएर बाच्छन् तथा अघिजस्तो स्वाभाविक स्वस्थ भएर रहन सक्तैनन्। जीवनभरिनै औषधिको सहारामा जिउनु पर्छ। साधारणत: आज व्यस्त जिवनमा "Heart Health" विषय लिएर हामी त्यति चिन्ता पनि गर्दैनौं अनि आफ्नो "Heart Condition" कस्तो छ भनी चेक-अप गर्दैनौं जबसम्म केही समस्या देखिँदैन अथवा डाक्टरले भन्दैनन्। जब डाक्टरले "Heart Check Up" गर्ने सल्लाह दिन्छन् - त्यस समयसम्म समस्याले गम्भीर रूप धारण गरिसकेको धेरै उदाहरण पाइएको छ। विशेष गरी साठी साल पार गरेपछि अनिवार्य रूपमा "Heart Health" विषयमा चेतनशील रही आफ्नो "Heart Condition, Lipid Profile Test, Blood Sugar, Blood Pressure" इत्यादि समय-समयमा जाँच गर्दै गरे, पछिबाट आइपर्ने कठिनाइबाट धेरै मात्रामा बाँच्न सकिन्छ।

१९९१ सालमा मैले सेवाबाट अवकाश लिँदा म सिर्फ ५८ वर्षको थिएँ, हेर्दा ४०-४५ जस्तै भन्थे सबैले। खुसीले मक्ख पनि पर्थें। मेरा साथीहरूले हाँस्दै तँलाई हेरेर आरिस नगरी सकिन्न भन्थे। यस्तै प्रकारले विभिन्न समाज-संस्थातिर संग्लग्न भएर सेवा गर्दै जाँदा समयले रफ्तार लिँदै भएको पत्तै भएन। ७३ वर्ष पार भइसकेछ - २००८ सालमा।



म स्वास्थ्य विषयमा सधैं सतर्क रहने, खानपान शारीरिक योग व्यायाम, मर्निङ वल्क इत्यादिमा म रूचि राख्ने भएकोले मेरो "Perfect good health" छ भन्ने मलाई आत्मविश्वास थियो। "असल स्वास्थ्य" (Optimal good health)-को लागि चारवटा मुख्य कुरालाई म सधैं ध्यान दिन्थें अनि आफ्ना साथी-सँगी तथा नाता गोताहरूलाई पनि समय-समयमा त्यसरी नै ध्यान दिने सल्लाह दिन्थें। ती चारवटा मुख्य कुराहरू हुन् (4 Important Principles) : 1. Positive Thinking 2. Regular Exercise 3. Well Balanced Nutritional Diet & 4. Sufficient Rest. हुन पनि १६-१७ वर्षको लामो रिटायर्ड लाइफसम्म म कहिले पनि बिरामी परेर ओछ्यान लागिनँ अथवा अस्पताल राख्नुपरेन पनि। तर अचानक अगस्त २००८-मा "भारतीय गोर्खा परिसंघको" National Council Executive Committee Meeting" मा अंशग्रहण गर्न Assam (Meghalaya) जानुपर्‍यो औ त्यहाँबाट फर्केर कालेबुङ आउँदा सर्दी, खाँसी, ज्वरो, टाउको दुख्ने, घाँटी दुख्ने इत्यादि समस्या आइलाग्यो। डाक्टरको सल्लाहअनुसार १०-१२ दिन दबाई खाएँ, रेस्ट गरें। केही मात्रामा आराम भयो तर सम्पूर्ण रूपले राम्रो चाहिं भएन। एकदमै बेसी खाँसी लाग्ने, टाउको





दुख्ने हुनाले धेरै किसिमको Investigation गरेर हेर्दा पनि खाँसीको समस्या हल नहुँदा आखिरमा Physician/Heart Specialist-लाई देखाउने सल्लाह भयो। Dr. G.M. Dey-ले Chest X-Ray र E.C.G. गरेर हेर्दा Heart Problem देखाए। मलाई आफ्नो "Health Condition" हेरेर डाक्टरको कुरामा विश्वास लागेन। लगत्तै Calcutta-का प्रचलित "Heart Surgeon" डा० मणि कुमार छेत्रीज्यूलाई देखाएँ। उहाँले झट्टै "Eco Doppler" गरेर रिपोर्ट ल्याउनू भन्नुभयो। त्यसको निम्ति (Dr. Kumar Bhandari, Gangtok)-सँग सपर्क गरी त्यो टेस्ट गरेर हेर्दा "Heart Blockage"-को कुरा पक्का "Confirm" भयो र उहाँले पनि कलकत्ता गएर "Angiography/Angioplasty" गर्नू भन्ने सल्लाह दिनुभयो। रिपोर्ट ल्याएर Dr. Mani Kr. Chettri लाई देखाइयो अनि उहाँले पनि "AMRI HOSPITAL-CAL" मा गएर Dr. Kumar Bhandari-Gangtok-ले दिएको सल्लाहअनुसार जतिसक्दो चाँड़ो काम गर्नू भन्नुभयो।

यो सल्लाहअनुसार मैले २००८ सालको दिसम्बर महिनामा कलकत्ता गएर आफ्नो Heart Treatment गराउने प्रबन्ध मिलाएँ। त्यै समय मेरा विशेष मित्र श्री लक्ष्मण गजमेर (त्यस समय दुःख निवारक सम्मेलनका मूल सचिव)ले मलाई New Delhi बाट प्रकाशित "Monthly News Letter for SAAOL Family" भन्ने एउटा पत्रिकाको कपी हात लगाई दिए र त्यो पत्रिका राम्रोसँग पढ़ेर Dr. Chajjar भन्ने मान्छेसँग कलकत्तामा भेट गरी आफ्नो समस्याबारे बातचित गरी निर्णय लिनुहोला भन्ने सल्लाह दिनु भएको मेरो अनि मेरो परिवारको निम्ति गुप्त रुपमा ईश्वरको ठूलो आशिष र कृपा प्रमाणित भयो। उहाँको यो सेवा गुणको निम्ति म अनि मेरा परिवार उहाँप्रति ऋणी रहनेछौं सधैँ। त्यसै समय मेरो कान्छा छोरोले पनि उसका साथीहरूबाट Dr. Chajjar-को "Heart Treatment" गर्ने अर्कै नयाँ पद्धतिबारे जानकारी जोगाड़ गरेर (Heart Treatment) गर्नअघि Dr. Chajjar-लाई Consult गर्ने अनि मात्र अन्तिम निर्णय लिने सल्लाह भयो।

यही निर्णयअनुसार म छोरोलाई लिएर १८ तारिक दिसम्बर, २००८ कलकत्ता हिँड़ें। १९ तारिक बिहान कलकत्ता पुगी Dr. Chajjar-सँग भेट गरी बातचित गर्दा उहाँले कलकत्तामा हुँदै गरेको "Seminar - SAAOL CAMP" (Science and Art of LIving) ता० २० दिसम्बरदेखि २२ दिसम्बरसम्मको केम्पमा अंशग्रहण गर्ने सल्लाह दिनुभयो र "As a special case" मेरो निम्ति प्रबन्ध मिलाई दिनुभयो (कारण यस्तो केम्पमा १-२ महिना अघाड़ि नै आफ्नो निम्ति सिट आरक्षण गर्नु पर्दो रहेछ।) २० तारिक बिहान ७.३० बजेदेखि सेमिनार शुरू भयो र २२ तारिक बेलुकी ५ बजे समापन भयो। यो सेमिनार अवधि Dr. Chajjar लगायत उनका सहयोगी डाक्टरहरूले हृदय रोग भनेको के हो? लक्षणहरू के-कस्ता हुन्छन्? कसरी हामीहरूलाई रोगले आक्रमण गर्छ? हृदय रोग भइसकेपछि रोगीले के-के होशियारी गर्नु पर्छ? के-के खानु के-के नखानु? कस्तो एक्सरसाइस गर्नु? साथै हालमा हृदय रोग नहुनेहरूले पनि भविष्यमा यो घातक रोगबाट अघिबाट नै यसलाई रोकथाम गर्ने दिशामा विस्तृत ज्ञान र जानकारी माथि लेक्चर दिए औ एल० सी० डी० माध्यम प्रदर्शन गरेर देखाए। यसबाहेक योगा गुरूले योगा औ प्राणायम सिकाए। डाइटिसिएनहरूले हृदय रोगीहरूको खाना (१ थोपा पनि खाने तेल-घिउ-नहाली) कसरी तयार गर्ने? "Pratical Demonstration" गरेर देखाए-सिकाए। हामी कम-से-कम २ सय जति





"Heart Patients" हरूलाई बिहानको नाश्ता, दिउँसोको भोजन अनि बेलुकीको हल्का चिया-चमेना, तीन दिनसम्म त्यहीं खाने व्यवस्था मिलाइएको थियो। यि तीनै दिनको खानाको कुनै आइटममा पनि एक थोपासम्म तेल/घिउ इत्यादि नहालेको भन्दैथिए। तेल/घिउ हालेर बनाएका भोजनभन्दा पनि रसिलो स्वादिलो अनि साँच्चै नै मीठो मानेर सबैले मुग्ध कण्ठले प्रसंशा गर्दै खाए।

त्यहाँ सेमिनारमा भनिएको अथवा सिकाइएको आधारमा यदि हृदय रोगीहरूले ठीक नियमावलीहरू राम्रो सँग, इमान्दारी र निष्ठासँग पालन गरे साथै खानपानमा सावधानी गरे लाखौं-लाखौं धन खर्च गरी रिस्क लिएर "Heart Operation/Augioplasty ByPass Surgery" इत्यादि गर्नु नपर्ने रहेछ भन्ने हामीहरूलाई आत्मविश्वास भयो/गराइयो।

त्यसपछि म AMRI HOSPITAL, CALCUTTA नगई लगत्तै २३ दिसम्बर कलकत्ताबाट घर फर्किएँ। Heart Operation गर्ने कुरालाई पर राखिदिएँ अनि २००९-को जनवरी महिनाको शुरूदेखि नै मैले सेमिनारमा पाएको ज्ञानलाई दैनिक कार्यक्रमको रूपमा प्रयोग गर्नथालें-औषधि चलि नै रह्यो पाँच किसिमको औषधि खानुपर्थ्यो। बिहान ५ बजी उठेर आधा घण्टा मेडिटेसन, साँढ़े ६ बजे देखि साधा घन्टा भित्रमा ३ कि० मि० मर्निङ वल्क (Brisk Walk), त्यसपछि ४५ मिनट H.R.E. (Heart Rejuvirating Exercise) जसमा - Eyes, Ears, Face, Neck, Shoulders, Chest, Abdomen, Waist, Thighs, Knees, Ankles इत्यादिको एक्सरसाइस पर्छ। त्यसपछि योगासन-जस्तै- Padahastasana, Trikonasana, Sasankasana, Bakrasana, Uttanpadasana, Merudandasana, Bhujangasana र Salavasana त्यसपछि सूर्यनमस्कार र २०/२५ मिनट प्राणायम्। फेरि बेलुकी आधा घण्टा मेडिटेसन, १५ मिनट (H.R.E.) अनि २०/२५ मिनट प्राणायम्। त्यसको साथमा सधैँ नै सात्विक, हलुका भोजन-बिना तेल/घिउ (Oil Free Diet) बनाइएको लिनथालें। यसरी ९ महिनासम्म कठोर व्रत धारण गरे झैं गर्दै लगें।

पहिलो नतिजा १० किलो शारिरको ओजन कम भएछ। रातमा मीठो निद्रा, खानामा रूची, पाचनक्रिया एकदमै राम्रो (अघि-अघि पेट गड़बड़ी भइरहने, कन्सटिपेसन भइरहने) भएर आयो। शरीर एकदमै हलुका, फुर्तिलो अनुभव हुन थाल्यो। Lipid Profile Test हेर्दा पहिलाभन्दा धेरै राम्रो, डायबिटिज र ब्लड प्रेसर पनि ठिक कन्ट्रोलमा आयो र म २००८-को सेप्टेम्बर महिनामा चेकअपको लागि फेरि कलकत्ता गएँ र Dr. Chajjar-लाई भेटें र उनको सल्लाहअनुसार C.T. Angiography गरेर हेर्दा मेरो मुटुमा कुनै ठाउँमा Blockage पाइएन-सबै पहिला देखिएको Blockage Clear भएछन्। रिपोर्ट हेरेर डाक्टरले भन्नुभयो कि तपाईंले "SAAOL SYSTEM" को Principle-लाई यसरी नै चालु राख्नुभयो भने फेरि भविष्यमा Heart Problem हुने सम्भावना छैन। म आजपर्यन्त एकदमै स्वस्थ जीवन बिताइरहेछु, केही समस्या छैन अनि भविष्यमा पनि हुनेछैन भन्ने पूर्ण विश्वास छ। शुरुमा Heart Problem-को लागि मात्र, पाँच किसिमका औषधि लिनुपर्थ्यो तर हालमा केवल एउटा मात्र लिंदैछु। हृदय रोगले पिड़ित/चिन्तित भएका दिदी-बहिनी तथा यो घातक रोगप्रति जागरूकहरूमाझ मेरो आफ्नो व्यक्तिगत साक्षात् प्रमाण/अनुभवको सन्देशले उहाँहरूलाई जरुरै उत्साह मिल्नेछ भन्ने उद्देश्यले यो लेख प्रस्तुत गर्दैछु अनि अझै विस्तृत जानकारीको आवश्यकता परे मसँग सम्पर्क गर्न सक्नुहुनेछ। (Tel. No.: 03552-274547, Mobile : 94341-43220) सेवाको निम्ति हमेशा तत्पर रहनेछु।।





# माचिस

- सहदेव एस० गिरी

बिहानको प्रथम प्रहरसितै मुनाल बास्न थालेको छ। चुरा-चुरुँगी पनि चिरिविरी गर्दै उड्दैछन्। म मेरो स्लिपिङ ब्यागभित्र न्यानो भएर सुतिरहेको थिएँ। मुनालको डाक कानमा पर्नसाथ उठने तरखर गर्दछु।

तर........ म किन उठ्ने? उठ्नु त अरुलाई पो पर्छ। म फेरि स्लिपिङ व्यागलाई बेस्सरी तान्छु र चेन लगाउँछु.....। जाड़ो भने अति छ। एकैक्षण स्लिपिङ ब्यागबाट टाउको - हात बाहिर निकालेको थिइनँ, चिसोले झ्याम्म छोप्यो.......। आ.....। यो चिसो पनि। यो जग्गामा भने जाड़ो कहिले गएन। म फेरि ब्यागभित्र मिलेर न्यानो हुन चाहन्थें तर हात र अनुहार भने चिसो भइसकेको थियो।

आ.....। अब निद्रा भने लाग्ने होइन.....। म ओछ्यानबाटै मनेलाई बोलाउँछु..........। "ए..... मने? ए.....मने.....।" अहँ उ बोल्दैन। बरू बिनोद भने हतारिँदै बोल्छ.........."हजुर, सर?"।। "उठेर आगो सल्का..... अनि चिया बना। आज हाटको दिन हो। हामी बजार जानुपर्छ.......... लौ छिटो गर..........।" म ओछ्यानबाट कराउँछु।

विनोद उठेर काठको भूइँमा ठ्याक-ठ्याक गर्छ भान्सा कोठातिर जान्छ। अरू केटाहरू पनि खस्याक-खुसुक गर्न थाल्छन्। शायद तिनीहरू उठ्ने प्रयास गर्दैछन्।

म सिरानीमुनि राखेको सिग्रेट र माचिस निकाल्छु र सिग्रेट सल्काउँछु..........। अँह..... माचिस भने दुइवटा सिन्का मात्र रहेछ। म भित्तामा अड़ेस लागेर सिग्रेट तान्न थाल्छु।

"सर.....!" बिनोदले बोलाउँछ

"हँ..... के भयो? " म ओछ्यानबाटै जवाब दिन्छु।

"सर..... माचिस छ?"

"छ.....!" तर एउटा सिन्का मात्र..........! बिनोद ओछ्यान को छेवैमा आइपुगेको छ। म बिनोदलाई माचिस दिन्छु। उ माचिस लिएर भान्सा कोठातिर लाग्छ। म भने सिग्रेटको एक सर्को मज्जाले तान्छु। बिहान र बेलुका दुइ-चारवटा सिग्रेट पिउने गर्छु। कोही बेला सिग्रेट सकिएको छ भने केटाहरूलाई बिँड़ी मागेर पिउँछु। यो जङ्गलमा दोकान कहाँ पाउनु?

हाम्रो क्याम्प भने बजारदेखि झन्डै चौबीस किलोमिटर टाड़ामा छ। बजार छाड़ेपछि कुनै घर छैन। केवल आठ-दस किलोमिटरमा अझ दुइवटा क्याम्पहरू छन्। एउटा पूर्वपट्टि अनि एउटा भने पश्चिमपट्टि। जता गए पनि त्यही आठ-दस किलोमिटर टाड़ा। अ..........! यस्तै केही किलोमिटर टाड़ामा भने गाईका पुराना गोठहरू छन्। यहाँ जाड़ो निकै हुन्छ।

यसको उँचाई झण्डै आठहजार पाँच सय फिट तल होला। म आफ्नो ओछ्यान छोड़ेर बाहिर निस्केको छु। हातमा तातो चियाको गिलास छ बिनोदले दिएर गएको। चियाको गिलासले हातलाई न्यानो तुल्याएको





छ | म बरन्डामा उभिएर पूर्वपट्टि हेर्छु | आकासमा केही हलुका उज्यालो उभ्रिएर आउँदैछ |

जङ्गलमा चारैतिर चराहरू बेस्सरी कराउन थालेका छन् | चिसो हावाले भने मलाई हिर्काइरहेको छ | म..... बरन्डाबाटै कराउँछु.......... "मने उठ्यो..........? छिरिङलाई उठा..........त्यसलाई सुत्न पायो भने केही चाहिँदैन |"

"हजुर, सर..........! म उठें" मने बोल्छ भान्सा कोठाबाट |

"बजार जानुपर्छ ! के-के छैन हेर है मने !"

"हुन्छ सर.........." भनेर मने यताउता हेर्नथाल्छ | म लुगा लगाउन थाल्छु |

"खाजा के बनाइस् बिनोद..........?" म लुगा लगाउँदै सोद्धछु |

"भुटेको भात.........." बिनोद भान्साकोठाबाट उत्तर फ्याँक्छ मतिर |

"त्यो.....! हिजो रातीको च्याउको सब्जी पनि हाल् है, मिठो पो हुन्छ......." म भन्छु | जङ्गलमा च्याउ, मालिङोको टुसा, सिस्नो, चिन्डेको मुन्टा, सिमरायो, काब्रा, ठोटने, निग्रो, सब्जी त्यही त हो | वाक्क लाग्छ कोही बेला | धेर जसो मुसुरी दाल, चाना-मटर र आलू, न्यूट्रेला | अरू त पाए पो? हप्तामा एकचोटि भने मासु खान पाइन्छ | मासु पाकेको दिन कम्ती रमाइलो हुँदैन | औधी मज्जा आउँछ | मासुसित अलिकति बजारबाट लिएर आएको रम.......... | आहा.......... | आधा रातसम्म गीत गाउँछौं हामी रमले रमाएर.......... अनि.......... फेरि अर्को हप्तालाई पर्खिन्छौं | कम्भर मर्काई-मर्काई भान्सा कोठा भत्काउलै जस्तो गरेर केटाहरू नाच्छन् | थाल, ढकनी केही छोड्दैनन् तिनीहरू |

खाजा खाएपछि क्याम्पमा ताला झुन्डाएर हामी बजारतर्फ लाग्छौं..........हाट झर्नलाई | आज त्यो हप्ताको खुसीको दिन |

हामी क्याम्प छोड़ेर ओरालो लाग्छौं | पूर्वपट्टिको आकास रमाइलो भइसकेको छ | म एकपल्ट पूर्वपट्टि हेर्छु | जति-जति पूर्वपट्टि हेर्छु त्यति-त्यति रमाइलो लाग्छ मनमा | लालिमा छाएको छ आकासमा |

"मने.......... | सबै कुरा हेरिस् हैन? के छ..... के छैन?"

"हेरें सर.......... | चामल, आटा, चाना-मटर, न्यूट्रेला, चियापत्ति दाल, सबै थोक छ |"

"अनि के-के ल्याउनुपर्छ त?"

"नून, सब्जी, चिनी, दूधको पाउडर, मसला अलिक कम्ती छ, त्यो पनि ल्याउनु पर्छ |" मनेलाई सब मुखजबानी छ |

"अन्त..........विनोद अरू केही..........?" म सोध्छु,

"अरू पर्दैन सर....." विनोदले प्याट्ट जवाब दिन्छ |

"अन्त.......... बिहान माचिस छैन भन्दै थिइस् नि त्यो चै नभुल्नू है |"

"हुन्छ सर.........." भनेर बिनोद मौन हुन्छ | हामी फटाफट हिंडिरहन्छौ | जङ्गलको बाटो पात-पतिङ्गर धेरै छ | खस्याक-खुसुक, खस्याक-खुसुक आवाज आइरहन्छ भूइँबाट | हामी हिँड़िरहन्छौं | बजार पुग्ने हतार भने सबैलाई छ | किन नहोस् | हप्ताभरि जङ्गल बस्दा-बस्दा वाक्क-दिक्क पनि त हुन्छ | हप्तामा एकदिन त हो रमाइलो हुने |

"उ सर.......... | बिनोद लड्यो अगाड़ि" छिरिङ्ग बोल्छ |





"बिनोद बिस्तारै हिँड्......., हतार नगर्, खुट्टा भाँच्चिएला नि मोरा।" म पछिबाट कराउँछु। बिनोदको बानी फड्किँदै हिँड्ने। के सुनथ्यो र मैले भनेको। उ फड्किरहन्छ।

हामी हिँड़ेको तीन घण्टापछि बजार पुग्छौं। "हैन माथि रचेलामा त छ्याङ्ङै थियो तर यहाँ बादल छाएको छ। पानी पो पर्ला जस्तो छ त सर..........।" मने सानो स्वरमा बोल्छ। शायद फर्किन गाह्रो पर्छ भनेर हो कि।

हामीले भने छाता वा बरसाती केही पनि बोकेका थिएनौं। जे पर्ला-पर्ला हेरूँ।

सबै मिलेर बजार गर्छौं। नून, तेल, सब्जी सब थोक किनिसकेपछि अघाउञ्जेल मोमो खान्छौं।

मोमोको सूप पिउँदै म मनेलाई सोध्छु - "सब थोक भयो हैन मने?"

"भयो सर..........।" अब मासु किन्नुपर्छ अनि त्यो रातो पनि।

"ल..... ल.....। जाने बेलामा किनौंला। पहिला खाजा खाइहालौं ल.........."

खाजा खाएर पैसा तिरेपछि हामी मासु किन्न जान्छौं। "खसी लाने कि कुखरा?" म सोध्छु केटाहरूलाई।

"जे लगे पनि हुन्छ सर.........." छिरिङ्ग बोल्छ।

"गोरूको कि..........छिरिङ?" म छिरिङलाई जिस्क्याँउछु।

"सरलाई कहाँ चल्छ।" मनेले पछिबाट भन्छ।

हामी सबै हाँस्छौ। "लौ त.......... यो हस्रा खसी ल केटाहरू।"

सबैले "हुन्छ सर" भन्छन्।

म छेवैको दोकानबाट दुइ प्याकेट सिग्रेट किन्छु अनि सबैलाई पान पनि किनिदिन्छु। गुवा पान। म भने सुपारी मागेर कुटुक्क टोक्छु।

"जा..... जा..... बिनोद यसो हेर् त..... कतै कुनै गाड़ी पाइन्छ कि? माथिसम्म सजिलो हुन्थ्यो।"

एकैक्षणमा बिनोद कुदेर आउँछ। "सर एउटा ट्रक रैछ। कामको सिमेन्ट र रड छ।"

"जाऊँ त.....।" हामी ट्रकमा चड़ेर उक्कालो लाग्छौं। जाड़ो धेरै छ आज। दिन धुम्मिएको छ। शायद पानी पो पर्छ कि? छाता भने ल्याइएन..........। के हुने हो। यस्तै कुराहरू मनमा खेलाउँदै थिएँ। हामी उँभो चढ्ने ठाउँ पुग्छौं।

गाड़ीबाट झरेर सामान मिलाउन थाल्छौं। सामान मिलाएर सबैले एक-एक पोका बनायौं र उक्कालो लाग्यौं। त्यहाँबाट झण्डै दुइ-अढ़ाइ घण्टा हिँड़ेपछि क्याम्प पुग्नेछौं। जति-जति उकालो हिँड्दै छौं, त्यति-त्यति जीउ तातिँदै जाँदैछ। झण्डै एक घण्टा हिँड़ेपछि हामी रमिते डाँड़ामा आइपुग्यौं र मज्जाले बिसायौं।

"लौ केटाहरू अब थकाइ मेटियो, हिँड़ौं। पानी पनि पर्लाजस्तो छ, बाटो पनि धेरै छ अनि रात पनि पर्नै लाग्यो।" मैले अफ्नो घड़ी हेरें चार बज्नै लागेछ।

हामी सरासर उकालो हिँड्न थाल्यौं। यस्तै पैंताँलीस मिनट हिँड़ेपछि पानी छिट्याउन थाल्यो।

"ला छाता पनि छैन, आजै पानी परेको।"

हामी झन् छिटो-छिटो हिँड्न थाल्यौं। हेर्दा-हेर्दै छर्किने पानी पर्न थाल्यो। केही बेर कटुसको रुखमुनि ओत लाग्यौं। तर पानी पर्न भने कम भएन। हामी हस्याङ र फस्याङ हुँदै हिँड्न थाल्यौं। बाटो भने चिप्लो थियो। हामी चिप्लिँदै उकालो चड्न थाल्यौं। भिजेर मूसाझैं हुन लागेका थियों। अँध्यारोले पनि

छोपिसकेको थियो ।

"अब्बुई.......... ।" बिनोद झस्कियो र करायो । "सर भालू.........."

"खै.........." मैले बिस्तारै सोधें ।

"उ पर बाटोमा .......... कटुस टोक्दैछ ।" बिनोदले आत्तिएर भन्यो ।

"चूप..... चूप..... हल्ला नगर्.......... । एकछिन् पर्खी ।" म सुस्तरी चालमा बोल्दै थिएँ । रात झपक्क परिसकेको छ । अगाड़ि पन्ध्र-बीस फूटमा भालू आरामसाथ कटुस खाइरहेको छ । अब क्याम्प कसरी पुग्ने.....? क्याम्प अझै टाड़ो छ । पानी भने सिमसिम परिरहेको छ ।

शरीर भिझेर केही छैन । टर्चलाइट बालेर यसो हेर्छु कालो केही देखिँदैंछ, टाड़ामा, भालू नै हो । साँझ झमक्क परिसकेको छ । बिनोद छुकछुके ह्याट-ह्याट गर्दै कराउँछ । भालूलाई भने त्यस बेला हाम्रो उपस्तिथिको आभास भएजस्तो हुन्छ र हामीपट्टि एकचोटि हेरेर बाटो मुनितिर झर्छ । म ढुक्कको लामो सास फेर्छु ।

"जाऊँ अब..... । भालू गइसक्यो..... ।" म बिस्तारै बोल्दै थिएँ । त्यसपछि फेरि हस्याङ-फस्याङ गर्दै हिँड्छौं, टर्चलाइटको भरमा ।

पतलुङ पानीले भिजेर फिलामा च्याप्प टालिन्छ । जति हिँड्यो उति टाल्लिन्छ । उकालो हिँड्न गाह्रो भइरहेछ । पाइला नै सार्न छाड्यो । भिजेकोले जाड़ो पनि औधी भइरहेछ ।

बल्ल हतार-हतार चालीस मिनटजस्तो हिँड़ेपछि क्याम्पमा आइपुग्छौं । मनेले ताला खोल्न थाल्छ । बिनोदले टर्चलाइट देखाउँछ । क्याम्पभित्र पसेर बत्ती बाल्छु म झटपट तर यो सोलार लाइट पनि.......... । म फत्फतिन्छु । आज यहाँ घाम लागेन रैछ क्यारे................ । सोलर लाइटको ब्याट्री चार्ज नै भएन रहेछ । जसोतसो मधुरो बल्नलाई त्यसले पाँच मिनेट लगायो । म लुगा फेर्न थाल्छु, केटाहरू पनि लुगा फेर्छन् ।

"ए मने? चिया पका तातोतातो । आम्मामा कम्ती जाड़ो त भएन आज । पानी पनि आजै पर्नु परेको । सधैं म छाता बोक्ने गर्थे तर आजै छाता पनि भुल्लिनुपरेको ।" यस उमेरमा बजारको नाम सुन्दा कति आतुर म । यस्तै कुराहरू मनमा सोच्दै, सिरानी-मुनिबाट सिग्रेट निकाल्छु । जाड़ोमा एक खिली सिग्रेट पिउनुपर्‍यो, सोच्दै । अँह.......... माचिस त बिहान बिनोदलाई दिएँ, अब छैन.......... ।

म मुखबाट सिग्रेट निकाल्दै बिनोदलाई कराउँछु । "ए बिनोद माचिस दे त.......... ।"

बिनोदले मनेलाई भन्छ....., "मने, सरलाई माचिस दे त ।"

"माचिस..........? माचिस त मसित छैन ।"
"छैन.......... । बजारमा माचिस किनिनस?" भन्दै म तिनीहरूको कोठामा पुगिसको थिएँ ।

"अहँ.......... । मैले त किनिनँ" मनेको ओठे जवाब ।

छिरिङले हतार-हतार भन्छ, "हैन किनेजस्तो लाग्छ" र झोला खोतेल्न थाल्छ । भएजति सामानहरू सबै एक-एक गरेर बाहिर निकाल्छ । अहँ.......... माचिस भने छैन । ट्वाल्ल परेर एकअर्काको अनुहार हेर्न थाल्यौं । मने एउटा आसामीसरह टाड़ा उभिएको थियो । हामी सबै आफ्नो ओछ्यानतिर माचिस खोज्न थाल्यौं । अहँ..... छैन । कतै एउटा सिन्का पो पाइन्छ कि भनेर खोज्न थाल्यौं । चारैजना हतास् भइसकेका थियौं । रातको अन्धकार छ । उ त्यो सोलरलाइट पनि निभ्नै आँटिको छ । माचिस भने छैन । लालटिन मोमबत्ती, धिव्री सबै भेटिसक्यौं तर माचिस भने छैन ।





सधैं सिग्रेट किनेपछि माचिस पनि किन्ने गर्थें सर कसरी भुलें आज मैले? म आफै छक्क पर्छु। हुस्सु साला.......... | सिग्रेट पिउने तर माचिस नबोक्ने - आफैलाई बेस्सरी गाली गर्छु |

केटाहरूको अनुहार हेरिसक्नु छैन। निम्बु निचोरेझैं भएको छ | बजारको मोमोले अघि बाटैमा छोड़िसकेको छ | मासु त्यसै छ | भोक पनि औधी लागेको छ | अँगेना चिसो छ | दिनभरि भुमरो के बस्थ्यो र.......... | फेरि पानीमा भिजेकोले जाड़ो औधी लागेको छ | केटाहरू रुन मात्र सकेका छैनन् | आफ्नो पनि हालत त्यस्तै छ | न रुन, न हाँस्नु.......... | यस्तो क्षणमा के गर्ने | अन्य क्यामपहरू दस किलोमिटर टाड़ा छन् |

बाहिर फेरि पानी पर्न थालेको छ | आज चूला जल्दैन | सधैंझैं आजको दिन रमाइलो पनि हुँदैन.......... | मासु पनि पाक्दैन | गीत पनि हुँदैन..... कम्बर पनि मर्किंदैन | जाड़ोमा हामी सबै एकै ठाँउ भेला भएर, मेरिगोल्ड बिस्कुट बाँड़ेर खान्छौं | अनि चिसो पानी पिएर सुत्छौं | पेटको भोक त्यो बिस्कुटलाई छाड़ेर | पानी भने परी नै रहेको हुन्छ |

~~~~~~~~·~~~~~~~~

# घर कसको जल्यो ?

-दिनेश खाती

चकमन्न...... सूनसान चूक घोप्टे सरह...... | रात गहिरिँदैछ |
म ब्यूँझेको छु | अनेक चेष्टा गरे | सुत्नै सकिनँ |
हुनत तिमी भूस निद्रामा छौ | हुनसक्छ कोल्टे फेर्दैछौ |
तर म...... म ब्यूँझेको छु | निँद कोशौं दूर छ - मेरा नयनहरूदेखि |
सौँच्दैछु | बाध्यता छ - सौँच्नु मेरो | हिजै घर जलाइएछ |
जलाउनेहरू मैले आस्था राखेकै पार्टीहरू | शुभखबर हिजै फोनमार्फत् जनाइएको |
तर...... तर छैन मनमा |
घर जलाइयो | जलाउनेहरू मेरै...... आफ्नो पार्टीहरू
तर......
"म गोर्खा हुँ" धाक पिट्छु | हो ! म गोर्खा हुँ |
गोर्खा हुनुको अभिमान छ - ममा |
हिजो धन बहादुर मगरको घर जल्यो |
......धन बहादुर मगर को हो? को हो धन बहादुर मगर??
कसको घर जल्यो?


~~~~~~~~

## लेखक परिचय



| | | |
|---|---|---|
| नाम | : | मणि कुमार रसाइली |
| जन्म मिति | : | १६ मार्च, १९५७ |
| पिता | : | स्व० देवीलाल रसाइली |
| जन्मथलो | : | टारी गाँउ, बमबस्ती, कालेबुङ |
| शिक्षा | : | बी० एस्सी० (बायो) |
| अरू शिक्षा | : | इ० एफ० आर० सी० - सन्त मेरिज हिलबाट, रेञ्जर्स तालिम प्राप्त |
| पेशा | : | फरेस्ट रेञ्ज अफिसर |
| साहित्य रुची | : | नेपाली साहित्यमा लेख, कविता लेख्ने रुची। |

# सम्झी राखेको माया कुमुदिनी विद्याश्रमको.........

**- मणि कुमार रसाइली**

बमबस्ती सरस्वती पाठशालामा चौथो श्रेणी सिध्याए पछि पञ्चम श्रेणीमा अध्यायन गर्ने सौभाग्य कुमुदिनी विद्याश्रममा प्राप्त भयो। सात वर्षसम्म समयको क्रमश: बहाछि सितै एघारौं श्रेणीको शिक्षान्त पनि यसै विद्याश्रममा भयो। यसरी आफूलाई कुमुदिनी विद्याश्रमको भूतपूर्व छात्र बन्न पाउँदा गर्व लाग्छ अनि यस विद्याश्रमप्रति हृदयको साष्टांग दण्डवत्।

कालेबुङ शहरको दक्षिण-पूर्वपछि केही टाड़ोमा प्राय ९.४० ऐकर भूमिको परिधिमा स्वच्छ शान्त परिवेशमा कुमुदिनी विद्याश्रम अवस्थित रहेको तथ्य सर्वविदित छ। सुश्राव्य विद्याश्रमको सम्झना गर्नेबित्तिकै त्यो सुन्दर अर्ध चन्द्रमाजस्तो प्रवेशद्वारले प्रतिक्षा साँचिराखेको हुन्छ अनि प्रवेशद्वार कै सिरानमा जड़ित सुन्दर ढाँचाको मोनोग्राममा अकिंत आदर्श वाक्य - "चरित्रं हि वलम्" ले हृदय र्स्पश गरिरहेको हुन्छ। विद्याश्रमको त्यो मनमोहक प्रवेशद्वार, त्यो आधुनिक ढाँचाको विशाल तीनतल्ले भवन, फराकिलो प्राङ्गण, सुन्दर धरोहर अनि ठूला घड़ीहरू, धर्महल, खेलमैदान इत्यादिले विद्याश्रमको भव्यतालाई नित्य उज्यालो पारेको हुन्छ - भूत, वर्तमान अनि भविष्यलाई।

कुमुदिनी परिवारको स्मारिका-२००७ मा आफ्नो लेख स्व० टीकाराम शर्माप्रति शिर्षकअन्तगर्त श्रद्धेय ज्ञान सुतार - स्व० टीकाराम सरको प्राचार्यकालीन अवधिलाई कुमुदिनी विद्याश्रमको स्वर्णिम युग भन्नसकिन्छ भन्ने मन्तव्य व्यक्त गर्नुहुन्छ भने अर्कोतर्फ सन् १९५३-देखि १९६३ सालसम्मका वर्षहरूलाई कुमुदिनी होम्सको उत्थान र विकासको काल भनिन्छ भनि श्रद्धेय हर्क बहादुर परियारले त्यसै स्मारिकामार्फत् जनाउनु हुन्छ। कुरा सत्य होला, उहाँको प्राचार्यकालीन अवधि-सायद अप्रेल १९४८-देखि





अगस्त १९६७-सम्ममा वर्तमान विद्याश्रम परिसरमा पाइने निर्मित आभूषित वस्तुहरू जस्तै त्यो आकर्षक प्रवेशद्वार, भव्य तिनतल्ले कक्षा-भवन, राजा दोर्जे धरोहर (घण्टाघर), रङ्गमञ्चसितको विशाल धर्महल, सुव्यवस्थित छात्रवास इत्यादिको निर्माण भएको थियो। भनिन्छ, २४ मई १९५५ सालको दिन विद्याश्रमको स्थापना दिवसमा धर्महलको अति हर्ष-उल्लासको साथमा श्री गणेश भएको थियो। त्यस दिन शिक्षा अनुरागी गुरुजन, विद्यार्थी, अभिभावक, शुभचिन्तक कति खुशी थिए होलान। त्यसपछि धर्महलको रङ्गमञ्चले कति शैक्षिक, साहित्यिक, साङ्गीतिक सांस्कृतिक, सामाजिक आदिको उत्थानमा योगदान पुऱ्यायो होला। मुख्य पाठशाला भवनअन्तर्गत ठूला-ठूला फराकिला श्रेणी कक्षा, विज्ञान विषयको स्तरीय प्रयोगशाला, संग्रहालय, पुस्तकालय अनि क्राफ्ट कक्षा समेत समावेश गरिएका थिए। प्रत्येक श्रेणीमा चौड़ादार ब्लाकबोर्ड अनि ध्वनि प्रसारण वक्सहरू जड़ान गरिएको थियो। यी स्मूर्ण थोक स्व० टीकाराम शर्माकै प्राचार्यकालीन स्वर्णीम समयका अंश हुन्।

उहाँको कुशल नेतृत्व एवम् अपूर्व प्रशासनिक दक्षतामार्फत् कुमुदिनी विद्याश्रमलाई एउटा मार्मिक अवस्थादेखि डोऱ्याएर प्रगतिको शिखरसम्म पुऱ्याउने कार्य भयो। समर्पित गुरुजनको उपस्थितिले गर्दा कुमुदिनी विद्याश्रमको नाम-सुवास, यश-कीर्ति तिनताक चारैतिर फैलिएर एउटा आदर्श विद्याश्रम बन्न पुगेको थियो। शिक्षाको स्तर उच्च भएबापत् परीक्षाफल उत्कृष्ट हुने गर्थ्यो। विद्यार्थीहरू क्षेत्रिय स्थानका मात्र नभएर दार्जीलिङ, खर्साङ, सिलिगुड़ी, डुवर्स, कलकत्ता, सिक्किम, भूटान अनि नेपालबाट पनि प्रशस्तै विद्यार्थी यस विद्याश्रममा शिक्षा आर्जन गर्न आउँथे। प्राचार्य - स्व० टीकाराम शर्माको पारदर्शिताको कारणले विद्याश्रमले शिक्षाको क्षेत्रसित विद्यार्थीवर्ग सर्वाङ्गीण विकास हेतु अरू क्षेत्र फुटबल, भलिबल, खेलकुद, तर्क, वाद-विवाद, कविता पाठ, साङ्गीतिक, नाट्यकला, एन० सी० सी०, स्काउटिङमा पनि यश-कीर्ति आर्जन गरिसकेको थियो।

फुटबलको कुरा लेख्नुपर्दा - १५ अगस्त १९५५-मा कालेबुङ मेलाटारमा खेलाइएको फुटबल खेलमा कुमुदिनी विद्याश्रम मध्येको प्रथम जीत हो। राष्ट्रीय स्तरको सुब्रत मुखर्जी कपमा नर्थ बेङ्गल च्याम्पियन भएर कलकत्तासम्म खेल्न पुगेको बिद्याश्रम, कुमुदिनी नै थियो। ७०-८० को दशकमा म्याराथन दौड़मा पनि विद्याश्रमले धेरै ख्याति प्राप्त गरेको थियो। अथक धावक स्व० हरि थापा अनि होम्स निवासी श्री नरबहादुर छेत्रीले विद्याश्रमको नाम रोशन गरेका थिए। श्री नरबहादुर छेत्री पछि गएर अन्तराष्ट्रिय खेलमा पनि भाग लिएको विशेष सूत्रबाट थाहा लागेको छ।

कुमुदिनी विद्याश्रमको इतिहासमा नाटक मञ्चनलाई पनि स्वर्ण अक्षरले लेख्नसकिन्छ। यस विद्याश्रमको धर्महलमा मञ्चित नाटक यसप्रकार थिए- शाहाजहाँ (१९६०), मुना मदन (१९६१), आमाको पुकार (१९६२), प्रह्लाद (१९६३), फ्रन्टियर (१९६४), मुनामदन (१९६५), चेली (१९६६) र टुहुरी (१९६७)। यी नाटकहरूमध्ये आमाको पुकार, चेली, टुहुरी स्व० टीकाराम शर्माका मौलिक कृतिहरू हुन्।

कुमुदिनी विद्याश्रमले प्रगतिको पथामा शिखर चुमे पनि यसको आफ्नै दुःखेसोको इतिहास र विशेषता





छ | वर्तमान कुमुदिनी विद्याश्रम एक रात्रि पाठशालाबाट प्रारम्भ भएको भनिन्छ | समय सालमा पछि यो दिवा (डे) पाठशालामा परिणत भई क्रमशः बढ्दै १९४० सालमा टाउन एम० इ० नाउँले स्वीकृति प्राप्त गरेछ अनि १९४७ सालभित्र यो निम्न उच्चतर पाठशाला भएछ | यस निम्न उच्चतर पाठशाला - "टाउन स्कूल" कालेबुङको वर्तमान हाटबजारमाथि प्रणामी मन्दिर छेउमा एउटा बाँस र माटोले बनेको घरमा सञ्चालन भएको भनिन्छ | अर्कोतर्फ वर्तमान विद्याश्रमको परिसरमा अहिले एक एडमण्ड नाउँ गरेका एक अंग्रेज आफ्नो विशाल प्रायः नौ (९) ऐकर जमीनमा मकैको खेती गरेर, एउटा सुन्दर बङ्गलामा बस्ने गर्थे | उनको दोस्रो नाउँ "मकै साहेब" पनि थियो | उनले त्यस परिसरलाई "मर्निङ साइड" भन्ने गर्थे | समयको अन्तरालपछि मकै साहेबको त्यो परिसरलाई ढाकानिवासी एक धनी व्यापारी - रणदेव शाहा नामक व्यक्तिले किने | तर कति परिस्थीतिवश शाहालाई आफ्नो त्यो परिसर कुनै सेवा संस्थानलाई दानस्वरूप प्रदान गर्ने इच्छा जाग्यो | फलस्वरूप तत्कालीन स्व० डम्बरसिंह गुरूङको घनिष्ट, सम्बन्ध अनि प्रभावमा शाहाले कुमुदिनी नाउँ गरेकी आफ्नी स्वर्गीय आमालाई श्रद्धाञ्जलि चढ़ाउने हेतुले टाउन स्कूललाई त्यो परिसर एउटा ट्रस्टको नाउँमा दानस्वरूप प्रदान गरे | यसरी फरवरी १९४८-मा टाउन स्कूलका छैटौं श्रेणी देखि नवौं श्रेणीका विद्यार्थी लिएर बजारको त्यो साँघुरो वातावरणदेखि मर्निङ साइडको त्यो खुल्ला शान्त वातावरणमा आफ्नो नाउँ कुमुदिनी विद्याश्रममा परिवर्तित भई बसाई सरेर आयो | अप्रेल १९४८ सालमा स्व० टीकाराम शर्मा प्राचार्य एस० यू० एम० आई०-बाट कुमुदिनी विद्याश्रममा पदार्पण गर्नुभयो |

कुमुदिनी विद्याश्रमको इतिहासमा १९६७ साल महत्वपूर्ण मान्न सकिन्छ कारण यस वर्षको अवधिमा प्राचार्य स्व० टीकाराम शर्माले कुमुदिनीको मोहलाई तोड़ेर जानुपर्दा कुमुदिनी परिवारले अश्रुपूरित विदाई गर्नुपरेथ्यो - मानौं माइतिघर त्यागेकी दुलहीसरह | अर्कोतर्फ एक भिन्न व्यक्तित्व भएका प्राचार्य स्व० सी० बी० राणाको विद्याश्रममा स्वागत | कुमुदिनी विद्याश्रमले प्रारम्भका दुइ भिन्दा-भिन्दै अद्भूत व्यक्तित्व भएका प्राचार्य पाउन सक्यो | स्व० टीकाराम शर्मा सुडौल शारीरिक गठन, गोरो मुहारमा ठूल्ठूला आँखामाथि निख्खुर कालो आँखीभौ र बाक्लो, कालो जुँगा भएका व्यक्ति हुनुहुन्थ्यो | उहाँको नेत्र तेजस्वी र बोली ओजस्वी भएको कारणले होला जो कोही मानिस मुहारमा सोजै ठाँड़ो नजरले हेर्न सक्तैन थिए | तिनताक ठूला-ठूला भुसतिध्रे विद्यार्थीको झूण्ड पनि प्राचार्यलाई देख्ने बित्तिकै यत्र-तत्र छरपस्ट भइहालेको दृश्य आफूले देखेको हुँ | उहाँको शिक्षण विधि अत्यन्त सरल र सरस हुने गर्थ्यो | मुना-मदन पाठ पढ़ाउदा प्रायः सबै नै विद्यार्थीका आँखा आँशुले भिजेका हुन्थे रे | उहाँ सर्वमान्य, राजनैतिक, समाजिक, साहित्यिक, धार्मिक, समाजसेवी व्याक्ति हुनुहुन्थ्यो | उहाँको शैक्षणिक कार्य क्षमताको कारण सन् १९९१ सालमा ब्रिटिश काउन्सिलले बेलायतमा विभिन्न पाठशाला र शिक्षण संस्थाहरूको परिभ्रमण र अध्ययन गर्नको निम्ति चयन गरिएका पाँचजना शिक्षकमध्ये उहाँ एक हुनुहुन्थ्यो |





यस विद्याश्रमका एक अर्का प्राचार्य सी० बी० राणा हुनुहुन्थ्यो। उहाँको आकृति गहुँ गोरो, छरितो, सिनिक्क केश कोराइ, सौन्दर्यले युक्त-हेर्दा चलचित्रका नायकजस्ता देखिन्थे। उहाँको बोलीमा आकर्षण थियो। भनिन्छ उहाँको मित्रता मुम्बई फिल्म अभिनेता दिलिप कुमार, स्व० राज कपुर अनि देव आनन्दसित पनि थियो। अंग्रेजी विषय पढ़ाउँदा विषय वस्तुलाई रोचक पार्ने हेतुले अरू मीठा-मीठा कथन, दृष्टान्त दिने गर्नुहुन्थ्यो। पढ़ाइलाई मुख्य स्थान दिएर खेलकुद, अरू कलामा विकास गर्ने जोश-उत्साह विद्यार्थीलाई दिने गर्नुहुन्थ्यो। उहाँ भन्नु हुन्थ्यो - "केटा मान्छे भएपछि मरनच्याँसे नभएर सधैँ रातो-पिरो, हृदयपुष्ठ, निरोगी हुनुपर्छ।" एक दक्ष-शिक्षक भएर राजनितिक क्षेत्रमा पनि एक रोचक वक्ता हुनुहुन्थ्यो। अक्टुबर २००५ मा स्वर्ग रोहण हुनअघि धेरै कालसम्म विद्याश्रमप्रति योगदान पुऱ्याउनु भयो।

कुमुदिनी विद्याश्रमका अर्का एक प्राकार्चको कारयभार सम्हालेर योगदान पुऱ्याउने शिक्षक एवम् प्राचार्य स्व० आर० ए० प्रसाद हुनुहुन्थ्यो। अग्लो, गोरो उहाँको आकृति, बिस्तारै हिँड्ने-बस्ने, बोल्ने उहाँको आचरण थियो। विद्याश्रममा २७ अप्रेल १९६४ सालमा पर्दापण गर्नुभएको थियो अनि ६ अगस्त, २००९ सालमा स्वर्ग रोहण हुनुभयो।

प्राचार्यवर्गको सम्झाना क्रममा उप-प्राचार्य श्री बी० सी० सुब्बाको पनि सम्झना राख्न मन पर्छ। उहाँको स्वभाव सरल एवम् भृदुभाषी हो। शिरदेखि पाउसम्मका पहिरन सधैँ सफा, चिटिक्कै शरीरमा मिलेको पाउछौं। एउटा असल बानीलाई यतिका वर्षसम्म कायम राख्न खेल-ठट्टाको कुरा होइन। १९४७ सालदेखि विद्याश्रमलाई योगदान पुऱ्याई अवकाश प्राप्त जीवन बिताई रहनु भएको छ। श्रदेय गुरू बी० सी० सुब्बा एक सबैभन्दा पुराना शिक्षक अझै पनि हामीमाझ हुनुहुन्छ, उहाँमा कोटी प्रणाम छ।

तिनताक शिक्षार्जन समयमा रवीन्द्र जयन्ती, भानु जयन्ती, शिक्षक दिवस अरू विविध साङ्गीतिक कार्यक्रम ठूलै रूपमा मानिए तापनि विद्याश्रमको जन्म-दिवस २४ मई भने भव्य रूपमा हर्ष-उल्लासको साथमा पर्व झै मानिन्थ्यो जो आज पर्यन्त कायम छ। उक्त दिनमा विविध साङ्गीतिक, सांस्कृतिक कार्यक्रम, नाटक धर्महलमै हुने गर्थ्यो। अरू कति मनोरञ्जनात्मक खेल विभिन्न कक्षामा नै गरिन्थ्यो। स्थानीय ग्रामवासीद्वारा सेलरोटी, अरू मीठा-मीठा पकवान् तयार गरिन्थ्यो। धर्महल, प्राङ्गण सम्मुखीन मुख्य कक्षा भवन विशेष रूपमा रंगी-बिरंगी फूलहरूले सजिने गर्थ्यो। मुख्य भवनको हुडमा ताँबाका चम्किला गाग्रीहरूमा फूल भरेर बिहे मण्डपसरह झपक्क सजाइएको हुन्थ्यो। ती दृश्य आज पर्यन्त आँखाबाट ओझेल हुन सकेका छैनन्।

विगत शिक्षार्जनको समयमा हामीलाई शिक्षा-दान गर्ने श्रद्धेय गुरूजनवर्गमा तिवारी सर, पासाङ सर, सी० के० सर, एस० के० सर, ब्लोन सर, लामा सर, खगेन्द्र सर, शाहा सर, गौतम सर, जोन सर, टी० बी० सर, पाण्डे सर, भरत सर, देवान सर, प्रसाद सर, अग्रवाल सर, सी० जे० पी० सर, महानन्द सर, पि० एल० सर, हरि सर, केसाङ मेडम इत्यादिको स्मरण छ। सम्पूर्ण शिक्षक-शिक्षिकावर्ग पारखी अनि अनुभवी हुनुहुन्थ्यो। विशेष सी० के० सरको हँस्यौली-ठटेउली, पी० सी० अग्रवाल सरको साँच्चै सत्य कहानीमा आधारीत देश-विदेशका रोचक कथा, कुमार सरको केटौलेपनको अभिनय, केसाङ मेडमको जीव-विज्ञान शिक्षण शैली, पासाङ सर अनि तिवारी सरको





गणित अनि रसायन विज्ञान जादुगरी शिक्षण शैली आजतक आलो भई सम्झनामा बाँचिरहेछन् ।

कुमुदिनी विद्याश्रमका विगत दिनहरूका अरू सम्झनामा पासाङ सर कक्षामा आई विद्याश्रमको एक होनहार विद्यार्थी वर्तमान डा० आर० बी० भुजेल (क्लुनी कलेजका प्रिन्सिपल)-को तीक्ष्ण विवेक विषय प्रशंसा प्रायः गरी भन्नुहुन्थ्यो- "राम बहादुर भुजेलको विवक कयामाराको फिल्मजस्तो छ" - सिकाएको कुरा छट्टै टिप्पी हाल्ने - यो भनाइ कति सत्य । यस्तै दर्जाका विद्यार्थीमा मेरा मित्र जीवन प्रधान (कुमार सरको सालो) थिए । खाता वा पुस्तकमा लेखिएको वस्तु दुइ-चोटी जस्तो सरसर पढ़ेपछि हातले खाता छोपी फररर........... भनिदिने ।

सम्झना भित्रका सहपाठीमध्ये पञ्चम् श्रेणीदेखि एघारौं श्रेणीसम्म अध्ययन गर्ने मित्र श्री नयन रिजाल (वर्तमान सेरीकल्चरको अधिकारी) मेरो नयनदेखि ओझेल हुन सकेनन् -त्यस्तै प्रकारले अरू सहपाठी बिष्णु पराजुली, सुभाष शर्मा, अशोक अग्रवाल, बिनोद अग्रवाल, परम मित्र जीवन प्रधान एवम् गाउँले समकालीन मित्रवर्ग श्री दुर्गा दंगाल, बद्री दंगाल, शंकर कार्की, खगेन्द्र नउपाने, चन्द्रमणि पौड्याल, कुवेर सिकतेल इत्यादिको सम्झना आउँछ ।

विशेष तिनताक विद्याश्रमका म्याराथन धावक स्व० हरि थापा, श्री नरबहादुर छेत्री, भलिबलका उत्कृष्ट खेलाड़ी श्री लेखनाथ अधिकारी, उत्तम छेत्री, फुटबलका उत्कृष्ट खेलाड़ी श्री योगेन गजमेर, भीम प्रधान (गोल रक्षक), श्री केशव प्रधान, तर्क प्रतियोगी श्री कमल काफ्ले, श्री दिन दयाल अग्रवाल, श्री अरूण आचार्य, श्री रामकृष्ण पौड्याल, श्री दावा घिसिङ अनि वर्तमान सिक्किमका चर्चित व्यक्ति श्री चुनिलाल घिमिरे (चलचित्र क्षेत्र), श्री भीम दाहाल (एस० डि० एफका प्रवक्ता), श्री थुकथुक लाचुङपा (पूर्व मन्त्री) वर्गको पनि सम्झाना आलो छ ।

अन्तमा आज-भोलि पनि कुमुदिनी विद्याश्रमको बाटो भएर ओह्रालो-उकालो हिँड्दा एकपल्ट फेरि त्यही अतीतको प्रवेशद्वार, विशाल कक्षा भवन, फराकिलो प्रांगण हेर्न पाउँछु अनि त अतीत बल्झाउँदै हृदयलाई भन्छु........... सम्झी राखेको माया कुमुदिनी विद्याश्रमको .......... ।

Ex-Students of Kumudini Homes
may visit our website &
submit their Bio-Data Proforma at
www.kumudinipariwar.org









# दलितका मसिहा "भारत रत्न" डा० भीमराव अम्बेदकर

- बी० के० सिलाल

महापुरुषहरूले भनेका छन् - परिस्थिति र समयअनुकूल नै महापुरुषहरूको जन्म हुन्छ। प्रत्येक युगमा एक न एक युग प्रवर्तक महापुरुष, सन्त महात्माहरूले जन्म लिई सत्प्रयास एवं महान् कार्यको माध्यमद्वारा युग-निर्माता बनी उच्च पदमा अर्थात् ओहोदामा पुगेका हुन्छन्। यसरी नै भारतरत्न डा० भीमराव अम्बेदकर पनि यिनै महान् परम्पराद्वारा नै एक अग्रिम महापुरुष थिए। तिनले आफ्ना सम्पूर्ण जीवन दलित, पीड़ित, गरीब, दुःखी, शोषितहरूको उत्थान, उद्धार औ प्रगतिको निम्ति समर्पित गरेका थिए।

डा० भीराव अम्बेदकरको जन्म एक दलित वर्गमा भएकोले उक्त वर्गको पीड़ित एवं प्रताड़ित मनुष्यको गाथाको प्रत्यक्ष अनुभवको विशाल भण्डार थियो उनमा। धेरै शताब्दीपहिलेबाट नै भारतीय समाजमा अछूत वर्गका मानिसको जीवन दुःखमय, उपेक्षित अनि प्रताड़ित थियो। त्यो सबैले जानेकै कुरा हो। सामन्ती समाज व्यवस्थामा अछूत वर्गका मानिसहरू पशुभन्दा तुच्छ सम्झी, घृणित व्यवहार गरी दासका रूपमा हेरिन्थ्यो। यिनीहरूको जीवन जिउँदैमा नारकीय थियो। यस्तो शोषणमूलक व्यवस्था साथै सामाजिक असमानताविरुद्ध सङ्घर्ष गर्ने एक दीर्घ परम्परा बसेको थियो। प्राचीन कालमा महात्मा बुद्ध, महावीर स्वामी मध्यकालमा कबीर, रविदास, गुरू नानक र आधुनिक कालमा रामकृष्ण परमहंस, विवेकानन्द, महात्मा गान्धी आदिले यस्तो असमानता, सामाजिक संरचनाविरुद्ध आ-आफ्नै ढङ्गद्वारा सङ्घर्ष गर्दै आए। यसरी नै डा० भीमराव अम्बेदकर पनि यस्तै सङ्घर्षशील परम्पराका सुद्धढ़ स्तम्भ थिए।

डा० अम्बेदकरको जन्म महाराष्ट्रको भूमि "मूल"-मा अनुसूचित जातिको एक अत्यन्त निर्धन परिवारमा १४ अप्रेल १८९१ ई० -मा भएको थियो। तिनी आफ्ना मातापिताको चौधौं (चौदह) सन्तानमा सबैभन्दा कान्छो थिए। तिनले जन्मँदै विशेष प्रतिभा लिएर आएका थिए। सन् १९०७ ई०-मा तिनले मेट्रिकको परीक्षा उत्तीर्ण गरेपश्चात् त्यही वर्ष रामबाईसित विवाह गरे। वैवाहिक जीवनको निर्वाह गर्दै, आफ्नो अध्ययन पनि जारी राख्दै सन् १९१२ ई०-मा स्नातक (बी० ए०) परीक्षामा उनी उत्तीर्ण भए। अर्थ अभावको कारण उच्च-शिक्षा प्राप्त गर्नमा बाधा उत्पन्न भयो तर संयोगवश वड़ौदाका नरेशले अम्बेदकरलाई सहायता दिने घोषणा गरे। साथै उहाँकै सहायताबाट तिनी उच्च शिक्षा प्राप्त गर्न १९१३ ई०-मा न्यूयोर्क गए। अमेरिका, जर्मन, लण्डनमा गएर गम्भीर अध्ययन गरेपश्चात् १९२३ ई० सम्ममा तिनी एम० ए०, पी० एच०डी०, बार एट० ल० -का महत्त्वपूर्ण परीक्षाहरूमा उत्तीर्ण भए। स्वदेश फर्किएपश्चात् जीविकोपार्जनको साथसाथै बाबा साहेब डा० भीमराव अम्बेदकर दलित वर्गको उत्थानको कार्यक्रममा सक्रिय रहे। दलित वर्गका सर्वमान्य नेता हुनाका साथै तिनी देशमुक्तिको साथसाथै सामाजिक एवं शैक्षणिक व्यवस्थाको पनि





अनिवार्य रहेको अनुभव गर्थे। तिनको धारणा थियो - जबसम्म भारतबाट जातिप्रति छुवाछुत भेदभाव हट्दैन तबसम्म राजनीतिक स्वतन्त्रता अधुरो रहनेछ। राजनीतिक क्रान्तिको समानान्तर सामाजिक औ सांस्कृतिक क्रांन्ति पनि अनिवार्य छ। १९२३-१९३१ -सम्म बाबा साहेबको जीवनमा खूबै सङ्घर्ष अनि उत्थानको समय रहेको थियो। तिनले "मूक" नामक पत्रिकाको प्रकाशन एवं सम्पादन गरेका थिए। यसैको माध्यमद्वारा दलित, पीड़ित र उपेक्षितहरूका समस्याप्रति विचारोत्तेजक ढङ्गबाट रचनाहरू प्रकाशमा ल्याउँथे। दलितहरूलाई तिनी शिक्षा दिनको साथै सङ्घर्षको निम्ति सङ्गठित हुने शिक्षा दिन्थे। तिनको धारणा थियो - यिनै सामञ्जस्य एवं समन्वयनबाट दलितहरूले आफ्नो उद्धार र उत्थान गर्नसक्छन्। सर्वप्रथम अम्बेदकरले १९२७ -मा महाड़मा "चौबदार तालाब" आन्दोलन गरे। २ मार्च, १९३० -मा नासिक मन्दिर प्रवेश आन्दोलन गरे। तिनको भनाइ थियो - अछूत जाति आफ्नो धर्मावलम्बी मन्दिरमा प्रवेश गर्नदेखि किन वञ्चित छन्? योभन्दा ठूलो अत्याचार अरू के हुनसक्छ? ६ दिसम्बर, १९३०-मा डा० अम्बेदकर अनुसूचित जाति एवं पछौटे जातिहरूको समोचित अधिकार दिलाउन "गोलमेज" कांग्रेसमा सामिल हुन लण्डन गए। यस्तै प्रकारले दोस्रोपल्ट १९३१ -मा पनि "गोलमेज" परिषद्मा तिनले हिस्सा लिए। डा० अम्बेदकरको ओजस्वी वाणी, प्रतिभा अनि सही तर्क प्रस्तुतिले अंग्रेजहरू अत्यन्त प्रभावित भएका थिए। २४ सितम्बर, १९३२ -मा डा० अम्बेदकरसित अंग्रेजहरूले "पूना पैक्ट" गरेका थिए। यसैको परिणामद्वारा दलितहरूको अधिकारमा बढ़ोत्तरी भयो। अभाग्यवश १९३५ -मा डा० अम्बेदकरकी धर्मपत्नी देहान्त भयो। यस्तो आघात पुगेको समय तिनले ज्यादै कठिनाइको जीवन बिताउनुपर्‍यो।

सन् १९३६ -मा तिनी श्रमिक अनि दलितहरूको सङ्घर्षका निम्ति मजदूर सङ्गठनलाई ठूलो शक्ति मान्थे। बाब साहेब भन्नुहुन्थ्यो - दलितहरूका उथानका निम्ति जति आवश्यकता आर्थिक औ सामाजिक सङ्घर्षको हुन्छ त्यति नै उत्थान शिक्षाको हुन्छ। शिक्षाबिना मनुष्यको चेतनामा जागृति आउनसक्तैन। उपरोक्त उद्देश्य पूर्तिका निम्ति तिनले २० मई, १९४६ -मा सिद्धार्थ महाविद्यालयको स्थापना गरे। डा० अम्बेदकरको प्रतिभा, परिश्रमनिष्ठा, कर्तव्य परायणता, कार्यकुशलता आदिको करण तिनको प्रसिद्धि समस्त विश्वमा फैलियो।

भारत स्वतन्त्रतापश्चात् प्रथम प्रधानमन्त्री जवाहरलाल नेहरूको द्वष्टि डा० अम्बेदकरमाथि पर्‍यो अनि तिनलाई आफ्नो मन्त्रीमण्डलमा वित्तमन्त्री नियुक्त गरे। २१ अगस्त, १९४७-मा डा० अम्बेदकरलाई भारतको संविधान प्रारूप समितिको अध्यक्ष नियुक्त गरियो। डा० अम्बेदकरको निर्देशनमा स्वतन्त्र भारतको संविधान बनियो जसको मूल उद्देश्य धर्मनिरपेक्ष लोकतन्त्र अनि साम्यवाद निर्धारण गर्नु थियो। २६ जनवरी, १९५० -मा तिनले भारतको संविधान राष्ट्रलाई समर्पित गरे। तिनले आफ्नो मन्त्रित्वकालमा अनेकौ महत्त्वपूर्ण संवैधानिक कार्यहरू गरेका थिए। यसैबीच तिनले देश-विदेशको भ्रमण गरे औ आफ्नो ओजस्वी भाषणद्वारा प्रत्येक भारतीयलाई प्रभावित पार्नकसे। २७ सितम्बर, १९५१ -मा डा० अम्बेदकरले मन्त्रीमण्डलबाट त्यागपत्र, विधि विशेषज्ञता, निष्ठा अनि आस्थादेखि समस्त विश्व प्रभावित भयो। १९५२ -मा कोलम्बो विश्वविद्यालयले तिनलाई एल० एल० डी० -को उपाधिले सम्मानित गर्‍यो भने उस्मानिया विश्वविद्यालयले १२ जुन, १९५३ -मा डी० लिट्-को उपाधि प्रधान गर्‍यो।

डा० अम्बेदकर एक बहुमुखी प्रतिभसम्पन्न व्यक्ति थिए। बौद्ध दर्शन औ धर्मको विषयमा अगाध ज्ञान उनमा थियो। उक्त दर्शनद्वारा अत्यन्तै प्रभावित हुनको साथै अन्तमा उनी बौद्ध बने।

सन् १९५४ -मा भएको विश्व बौद्ध परिषद्मा भाग लिन रङ्गुन अनि नेपाल गए। २० नवम्बर, १९५६ -मा उनले बुद्ध औ कार्ल मार्क्स नामक आफ्नो ऐतिहासिक भाषाण दिए जुन भाषण अत्यन्तै महत्त्वपूर्ण थियो। अम्बेदकर एक कुशल लेखक पनि थिए। भगवान् बुद्ध औ तिनका धर्म नामक पुस्तक तिनको ज्यादै ख्यातिप्राप्त कृति थियो। बाबा साहेब डा० भीमराव अम्बेदकर महान् विधिवेत्ता, राजनीतिज्ञ, समाज सुधारक ओजस्वी वक्ता औ लेखक थिए। उनले आफ्नो प्रतिभाको बहुआयामी सन्दर्भ प्रदान गरे जसले सामाजिक, राजनीतिक, सांस्कृतिक औ आर्थिक क्षेत्रमा समान रुपमा प्रभावित गर्नसक्छ।

सन् १९९०-९१ -सालमा उनको जन्मशताब्दी वर्षको रुपमा पालन गरियो। यो शताब्दी वर्ष भारतमा मात्रै नभएर विदेशमा पनि बड़ो धुमधाम सँग पालन भयो। राष्ट्र, समाज, जाति औ धर्मको क्षेत्रमा उनले जुन महान् योगदान गरे यस प्रतिदानमा राष्ट्रले विभिन्न स्थानमा भावविह्वल "श्रद्धाञ्जली" अर्पिक गऱ्यो। डा० अम्बेदकरको निस्वार्थ सेवाको निम्ति भारत सरकारले पनि देशको सर्वोच्च उपाधि "भारत रत्न" -ले विभूषित गऱ्यो।

बाबासाहेब डा० भीमराव अम्बेदकरको स्मरण गर्नको मुख्य लक्ष्य देश औ समाजले उनले देखाएको मार्गमा हिंड़न सक्नुपर्छ। उनले दलित पीड़ित, गरिब, उपेक्षितहरूको उत्थानका निम्ति जसरी आफ्नो जीवन समर्पित गरेका थिए त्यसरी नै हामीले पनि त्यो कर्तव्य पालन गरी उनले देखाएको मार्गलाई अप्नाउन सक्छुपर्छ। जबसम्म देशमा एक व्यक्तिको आँशामा आँशु बहनेछ जबसम्म देश र जाति समाजको कल्याण हुनेछैन। यसबारे समयमा नै हामीमा चेतना आएको हुनुपर्छ। बाबा साहेबको जयन्ती मनाएर मात्रै हुँदैन। उहाँको सपनालाई साकारं बनाउन हो भने हामी प्रतिज्ञा गरौं डा० भीमराव अम्बेदकरले देखाएको मार्गलाई अनुकरण गरे मात्र यसैमा हाम्रो भविष्य सन्निहित हुनेछ भन्ने।



जय भारत

जय अम्बेदकर

(डा० अम्बेदकरको जन्म जयन्ती २५ अप्रेल, १९९८-मा टाउन हल कालेबुङमा सुनाइएको वार्ता - लेखक)



# सम्झनालाई लैजाऊँ सम्हाली
# २४ मई

- हीरा छेत्री

२४ मईले जन्माएको हो शिक्षाको गौरव कुमुदिनी होम्सलाई। कुमुदिनी होम्सको प्रारम्भिक जुगको शैक्षिक योगदान अविस्मरणीय र अतुलनीय छ। श्रद्धेय गुरूवर तथा कुमुदिनी विद्याश्रमका संस्थापक श्री टीकाराम शर्माज्यूको अथक प्रयासको लगानीले यस स्कूलले पुरानो समयमा जुन गरिमा प्राप्त गर्न सकेको थियो त्यसको प्रशंसा जति नै गरे पनि थोरै हुन्छ अनि आज ती गौरवपूर्ण दिनहरूको केवल प्रशंसै गर्न सकिन्छ कार्यान्वयन सायदै होला। कुनै एक विद्वान्ले भनेका छन्, "कसैको प्रशंसा गर्नमा आफ्नो नष्ट नगर, त्यसलाई अप्राउने प्रयास गर"। यस स्कूलले गुमाएको मानमर्यादाको पुनर्बहाली गर्ने कर्तव्य प्रत्येक भूतपूर्व विद्यार्थी एवं शिक्षक-शिक्षिका र अभिभावकको हो।

आज कुमुदिनीले नयाँ जोश, उमङ्ग र उत्साह भएका युवा सञ्चालनकर्ता, शिक्षक-शिक्षिका अनि कर्मचारीहरूको संसर्ग पाएको छ। यस कुमुदिनी माताका कोखमा हुर्केका भूतपूर्व छात्रछात्रा पनि आज कम ओहदातिर छैनन्। एक्लो टीकाराम सरले गरेर देखाइदिएका सम्पूर्ण गौरवशाली क्षणको एकै अंश पनि आजका कुमुदिनीप्रेमी सबै मिलेर फर्काइल्याउन सक्यौं भने यो स्वर्णजयन्तीको ठूलो उपलब्धि हुनेछ। स्वर्णजयन्तीलाई धर्महलभित्र कँज्याएर राख्नु हुँदैन तर यसको माध्यमद्वारा यस पाठशालाको पुरानो प्रतिष्ठा फर्काइल्याउने काम व्याव्यहारिक रुपमा गर्नुपर्छ। आशा गरौं कुमुदिनीलाई फेरि टीकाराम सरको कुमुदिनी "जस्तो" बनाउने अठोट २४ मईका दिन गरिनेछ अनि यसका निम्ति कार्य शुरू गरिनेछ यसपालि। स्वर्ण जयन्ती घरिघरि आउँदैन, जमघट फेरि हुँदैन।

पण्डित् धरणीधर शर्माले पनि यसै कुमुदिनी होम्सलाई आदर्श मानेका थिए अरे। कुमुदिनी विद्याश्रमका संस्मरणहरू यदाकदा पत्र-पत्रिकातिर पढ्न पाइन्छन्। आफू पनि सोही स्कूलको भूतपूर्व छात्र हुनाले स्कूले जीवनका केही तीता-मीठा अनुभवहरू पोख्ने उद्देश्यले यो लेखौट तयार गरिएको हो। यसै रचनाको माध्यमद्वारा विस्मृतिका गर्भमा विलुप्तिएता साथी-सङ्गी र क्षणहरूलाई स्मरण गर्ने प्रयत्न गरिरहेछु।

सन् १९७८-मा मैले पहिलोपल्ट कुमुदिनी होम्सको "चरित्र हि बलम्" अङ्कित फाटक देखें। छैटौं श्रेणीमा भर्ना लिन जानेहरू हामी। राजु- उ आजकल आफ्नो ग्यारेज खोलेर बसेको छ; ज्ञान छिरिङ थाहा छैन कता छ, समय-समयमा भेटिन्छ, प्रेम थापा-तोपखानामा घर छ, व्यापार गर्छ; महेश बसोर - आन्दोलनपछि देखिएको छैन र म थियौं एउटै स्कूलबाट भर्ती हुन गएका। स्टाफ रुमको अघिल्तिरको चौरमा हाम्रो नाम लेखेका थिए - कुमार प्रधान र रुपराम देवान सरले। केही दिनपछि जाँच भयो कम्मन रुममा। हिसाब र नेपाली-अङ्ग्रेजी व्याकरणको जाँचमा महेश बसोर छोड़ेर हामी उत्तीर्ण भयौं। नयाँ श्रेणी हुलियौं सिक्स "सी"। भित्र पस्दा





दुर्गाप्रसाद पराजुली मात्र थियो त्यस श्रेणीमा वरिष्ठ अनुत्तीर्ण भएर हामीलाई पर्खिरहेको। आजकल उ सिक्किममा छ- कहिलेकाहीँ भेटघाट हुन्छ। भरत थापा सर क्लास टिचर। हिसाब पढ़ाउँथे, खेलकुद सिकाउँथे। गुणा रट्न लगाउँथे। "आठ एक आठ, आठ दो सोल" भन्दै हामी मुखाग्र गर्थ्यौं। सरले श्रेणीभित्र पस्ने बित्तिकै सोद्धथे- "आठ नौ?" बिजुलीको गतिमा "बहत्तर" भनेनौं भने गाला रन्कन्थ्यो। हिसाबमा ज्ञानी हो गङ्गाराम। हिसाबमा जण्डा गङ्गाले राजनीति विज्ञानमा स्नातकोत्तर गरेर अहिले सुकेपोखरीमा शिक्षण गर्दैछ। विभिन्न प्राथमिक पाठशालाबाट भर्ना लिन आएका दौंतरे साथीभाइहरू पचासजना थियौं हामी।

सातौं श्रेणीमा पुगेपछि कति पुराना छोड़िए, कति नयाँ भेटिए। लामा सरले "रसिक"-का कविता पढ़ाउँथे। त्यस्तै प्रेरणाप्रद व्याख्यानहरू सुनेर साहित्यिक भावले मनभित्र गुँड़ लगाउन थाल्थ्यो कि जस्तो लाग्छ अहिले सम्झँदा।

आठौं श्रेणी ......... तिवारी सर क्लास टिचर। कड़ा-कड़ा सरहरू भेटिए अब। हिसाब ज्यामिति- ब्लोन सर, अङ्ग्रेजी व्याकरण-हरि सर। हरि सर मान्छे त भद्र तर विद्यार्थीले टेरेन भने पिट्नुमा त्यो भद्रता ताण्डवमा परिणत हुने। नेपाली व्याकरण- पी० एल० सुब्बा सर। बदमासलाई पिट्नुमा कम थिइनन् -हरि सरभन्दा एक स्तरमाथि। एक दिन सोधे, "यो क्लासमा सबैभन्द ज्ञानी को छ?" कोही पनि नउठेर सबैले मलाई उभ्याए। यो क्लास भनेपछि एट "सी"-को मात्र घटना हो - सम्पूर्ण आठौंको होइन। ज्ञानीहरू त सेक्सन "ए" र "बी"-मा हुन्थे। फेल भएर एउटै श्रेणी दोहोऱ्याउने अनि अरू स्कूलबाट भर्ती पाएर आउनेहरू मात्र "सी"-मा राखिन्थे। त्यस्ताहरूमा ज्ञानी म। ज्ञानीको रुपमा उभ्याइएको मलाई नाम, ठेगाना सोधेपछि बस्न लगाएर सरले भने, "मैले यो प्रश्न तिमीहरूलाई किन गरेको भने अचेल तिमीहरू बजारमा भाषणहरू सुन्छौ होला नि, "छुट्टै प्रान्त" "गोर्खाल्याण्ड" भन्ने। के ठेगाना भविष्यमा त्यो पाइयो भने तिमीहरूबाटै कोही मुख्य मन्त्री हुन्छौ कि?"

केही बेरपछि श्यामपटमा नजर डुलाएर सोधे- "यो तारीक कसले लेखेको ३ वाँ अगस्त १९८१ भनेर?" मैले नै लेखेको हुनाले स्याबासी पाउने आशामा उभिएँ तर कान निमोठी मागें। "३ वाँ अगस्त भनेको त तेस्रो अगस्त भयो, आजसम्म आएका अगस्तहरूमा यो तेस्रो भए के अगस्त महीना आजको दुइ वर्ष पहिले चाहिँ थिएन? फेरि यो "वाँ" नेपालीमा हुँदैन। नेपालीमा त "औं" हुन्छ त्यो पनि पाँचौदेखि पछाड़ि। पाँचौको अघि चौथो, तेस्रो, दोस्रो र पहिलो हुन्छन्।" यसरी भाषिक शुद्धता नियमहरू सिक्थ्यौं हामी।

आठौं श्रेणीमै हुँदा २१ जुलाई, १९८१-का दिन दिउँसो एक बजेर दश मिनटमा श्रेणी फेरि लागेपछि सबै विद्यार्थीहरूलाई हलभित्र उभ्याइयो। सरहरू उदास थिए। मञ्चमा चढ़ेर प्राध्यानाध्यापक राणा सरले बताए- महान् नाटककार बालकृष्ण "सम" -को देहान्त भएछ। समको नाम हामीले सुनेका थियौं वा थिएनौं कोनि। बुझ्यौं तिनी महान् नाटककार, चित्रकार, फोटोग्राफर, कवि, कथाकार आदि थिएछन्। भरत सर, राणा सरले ती समसित जड़ित आफ्ना संस्मरणहरू भावविह्वल भई सुनाउँदा हामी केही नजानेर पनि ती महान् विभूतिप्रति नतमस्तक बनेका थियौं। समले "आज दार्जीलिङले जे सोच्छ, भोलि नेपालले





नवौं श्रेणीमा पुग्दा हरि सर भए क्लास टिचर। सरहरूले पढ़ाउने खास विषयहरू त अब पो खुट्टिन थाले। पहिले हिसाब सिकाउने भरत सर पढ़ाउँदा रहेछन् नेपाली- कथा-कुसुम। अङ्ग्रेजी पढ़ाउने अग्रवाल सर भूगोल। अरू सरहरू भेट्यौं -टी० बी० सर- नेपाली, पासाङ सर - भौतिक विज्ञान, एस० के० सर - अङ्ग्रेजी, बी० सी० सर-इतिहास, खगेन्द्र सर अङ्ग्रेजी व्याकरण आदि। नवौं श्रेणीमा पुगेपछि आफ्नो उत्तरदायित्वको बोध गर्ने भयौं हामी। तर्क प्रतियोगितामा भाग लिनुपर्‍यो, अन्तर हाउसको खेलकूद, सांस्कृतिक होड़, वार्षिकोत्सव २४ मईको तयारी गर्नुपर्‍यो, वार्षिक परितोषिक वितरण इत्यादि गतिविधिलगायत माध्यमिक परीक्षा नजिकिँदै गएको हुनाले अध्ययन। त्यस बेला ट्युशनको रोग अलिलि घुस्दैथ्यो।

कुमुदिनी होम्सको अतीतमा रुमलिँदै नवौं र दसौं कक्षाका सम्झनाहरू आला लाग्छन्। २४ मई- स्कूलको जन्मदिन। स्कूल मैदानमा मेला लाग्थ्यो। हाउस-हाउसका विद्यार्थीहरू दिलोज्यानले खट्थे। सांस्कृतिक कार्यक्रममा आनन्द लिन आउने अभिभावकहरूको भीड़ले धर्महल खचाखच हुन्थ्यो। कार्यक्रममा मुख्य अतिथि हुन्थे कहिले बी० टी० कलेजका प्राचार्य टी० बी० ठकुरी, कहिले एस० यु० एम० आई०-का प्रथानाध्यपक पी० आर० प्रधान।

यसरी नै नवौंमा पुग्दा हामी कतिपय विद्यार्थीहरूमा साहित्यिक रुचीको बीजारोपण हुन थालेको हो। पूनम घिसिङ, गोपाल धिताल र म स्कूले पत्रिकामा लेख्थ्यौं देवान सरको पथप्रदर्शनमा। देवान सर पुस्तकालयाध्यक्ष पनि थिए - पढ्न दिन्थे हामीलाई साहित्यका राम्रा-राम्रा पुस्तक। "अकादमी निबन्धावली", "स्रष्टा र साहित्य", "कथा नवरत्न", "रसिक रचनावली", "दोभान"-हरू त्यतिखेर पढ़िसिद्धयाएका थियौं। निकै धेर साहित्यक अभिरूची जागेको चाहिँ गोपाल धितालमा हो। पढ्दा-पढ्दै उसले उपन्यास लेख्यो र छाप्यो। उसले "असंलग्न आन्दोलन"-माथि आयोजित गोष्ठीमा भाग लिएर सबैलाई चकित तुल्याइदिएको थियो। हामी भने "गोर्खा"-मा हँसेउलीहरू र "हिमालचुली"-को "जनमत" स्तम्भमा चिट्ठी-पत्र लेखे बानी बसाउँथ्यौं।

नवौं श्रेणीमै हुँदा देवान सरका हात-खुट्टाबाट मैले जुन प्रकारको धुलाइ खाएथें कुमुदिनी होम्सको ऐतिहासिक धुलाइ थियो त्यो। आज पनि त्यस घटनाका साक्षीहरू त्यस दृश्यको स्मरण गर्नुपरे काम्छन्।

२४ मईलाई धूमधामसित मनाउने काममा लाग्नुपर्थ्यो ९ र १० श्रेणीका विद्यार्थीहरू। सांस्कृतिक कार्यक्रममा इच्छा हुनेहरू तयारीमा लाग्थे। १९८२-मा हामी नवौंमा हुँदा दसौं श्रेणीका साथीहरूसित मिलेर तयारी गर्‍यौं उद्घाटन गीतको। "लहुरेलाई मुग्लानमा बास छैन भन्दिनु" भन्ने गीत गायौं। दसौंमा हुँदा गायौं- "यो नेपाली, हामी नेपाली, हाम्रो हातमा छ यो खुकुरी, लड्नेछौं हामी शिर उचाली"। भोटाङ, नेपाललगायत भारतका अन्य प्रान्ततिरका विद्यार्थीहरू हुन्थ्यौं हामी। आज को कता छन् पत्तोफाँट छैन। एउटा चलन थियो अटोग्राफ राख्ने। "आँशु र हाँसो, मिलन र विछोड़ संसारको नियम हो" भन्दै अटोग्राफका पानाहरू भर्थ्यौं तर ती निर्जीव शब्दहरूले के अर्थ दिँदा रछन् आज आएर बुझिँदैछ।

आज कतिजना सरहरू छैनन्। कतिजना सेवानिवृत्त भए। कतिजना बाटामा भेटिन्छन्। बाटामा भेट्दा आफूलाई त्यही पुरानो दिनहरूमा बाँचिरहे जस्तो लाग्छ। कतिजना सरहरूले चिन्छन्, कतिले बिर्सिए समयको गतिसितै। पाँच वर्षका ती तीता-मीठा





सोच्नेछ" भनेका घटनाहरू, भरत सरहरू "मुना मदन" नाटक लिएर नेपाल जाँदा समसित भएको भेटघाटका घटनाहरू सुनेर हामी छक्कै परेका थियौं ।

नवौं श्रेणीमा पुग्दा हरि सर भए क्लास टिचर । सरहरूले पढ़ाउने खास विषयहरू त अब पो खुट्टिन थाले । पहिले हिसाब सिकाउने भरत सर पढ़ाउँदा रहेछन् नेपाली- कथा-कुसुम । अङ्ग्रेजी पढ़ाउने अग्रवाल सर भूगोल । अरू सरहरू भेट्यौं -टी० बी० सर- नेपाली, तासाङ सर - भौतिक विज्ञान, एस० के० सर - अङ्ग्रेजी, बी० सी० सर-इतिहास, खगेन्द्र सर अङ्ग्रेजी व्याकरण आदि । नवौं श्रेणीमा पुगेपछि आफ्नो उत्तरदायित्वको बोध गर्ने भयौं हामी । तर्क प्रतियोगितामा भाग लिनुपऱ्यो, अन्तर हाउसको खेलकूद, सांस्कृतिक होड़, वार्षिकोत्सव २४ मईको तयारी गर्नुपऱ्यो, वार्षिक परितोषिक वितरण इत्यादि गतिविधिलगायत माध्यमिक परीक्षा नजिकिँदै गएको हुनाले अध्ययन । त्यस बेला ट्युशनको रोग अलिलि घुस्दैथ्यो ।

कुमुदिनी होम्सको अतीतमा रुमलिँदै नवौं र दसौं कक्षाका सम्झनाहरू आला लाग्छन् । २४ मई- स्कूलको जन्मदिन । स्कूल मैदानमा मेला लाग्थ्यो । हाउस-हाउसका विद्यार्थीहरू दिलोज्यानले खट्थे । सांस्कृतिक कार्यक्रममा आनन्द लिन आउने अभिभावकहरूको भीड़ले धर्महल खचाखच हुन्थ्यो । कार्यक्रममा मुख्य अतिथि हुन्थे कहिले बी० टी० कलेजका प्राचार्य टी० बी० ठकुरी, कहिले एस० यु० एम० आई०-का प्रथानाध्यपक पी० आर० प्रधान ।

यसरी नै नवौंमा पुग्दा हामी कतिपय विद्यार्थीहरूमा साहित्यिक रुचीको बीजारोपण हुन थालेको हो । पूनम घिसिङ, गोपाल धिताल र म स्कूले पत्रिकामा लेख्थ्यौं देवान सरको पथप्रदर्शनमा । देवान सर पुस्तकालयाध्यक्ष पनि थिए - पढ्न दिन्थे हामीलाई साहित्यका राम्रा-राम्रा पुस्तक । "अकादमी निबन्धावली", "स्रष्टा र साहित्य", "कथा नवरत्न", "रसिक रचनावली", "दोभान"-हरू त्यतिखेर पढ़िसिद्धयाएका थियौं । निकै धेर साहित्यक अभिरूची जागेको चाहिँ गोपाल धितालमा हो । पढ्दा-पढ्दै उसले उपन्यास लेख्यो र छाप्यो । उसले "असंलग्न आन्दोलन"-माथि आयोजित गोष्ठीमा भाग लिएर सबैलाई चकित तुल्याइदिएको थियो । हामी भने "गोर्खा"-मा हँसेउलीहरू र "हिमालचुली"-को "जनमत" स्तम्भमा चिट्ठी-पत्र लेखे बानी बसाउँथ्यौ ।

नवौं श्रेणीमै हुँदा देवान सरका हात-खुट्टाबाट मैले जुन प्रकारको धुलाइ खाएथें कुमुदिनी होम्सको ऐतिहासिक धुलाइ थियो त्यो । आज पनि त्यस घटनाका साक्षीहरू त्यस दृश्यको स्मरण गर्नुपरे काम्छन् ।

२४ मईलाई धूमधामसित मनाउने काममा लाग्नुपर्थ्यो ९ र १० श्रेणीका विद्यार्थीहरू । सांस्कृतिक कार्यक्रममा इच्छा हुनेहरू तयारीमा लाग्थे । १९८२-मा हामी नवौंमा हुँदा दसौं श्रेणीका साथीहरूसित मिलेर तयारी गऱ्यौं उद्घाटन गीतको । "लहुरेलाई मुग्लानमा बास छैन भन्दिनु" भन्ने गीत गायौं । दसौंमा हुँदा गायौं- "यो नेपाली, हामी नेपाली, हाम्रो हातमा छ यो खुकुरी, लड्नेछौं हामी शिर उचाली" । भोटाङ, नेपाललगायत भारतका अन्य प्रान्ततिरका विद्यार्थीहरू हुन्थ्यौं हामी । आज को कता छन् पत्तोफाँट छैन । एउटा चलन थियो अटोग्राफ राख्ने । "आँशु र हाँसो, मिलन र विछोड़ संसारको नियम हो" भन्दै अटोग्राफका पानाहरू भर्थ्यौं तर ती निर्जीव शब्दहरूले के अर्थ दिँदा रछन् आज आएर बुझिँदैछ ।





आज कतिजना सरहरू छैनन्। कतिजना सेवानिवृत्त भए। कतिजना बाटामा भेटिन्छन्। बाटामा भेट्दा आफूलाई त्यही पुरानो दिनहरूमा बाँचिरहे जस्तो लाग्छ। कतिजना सरहरूले चिन्छन्, कतिले बिर्सिए समयको गतिसितै। पाँच वर्षका ती तीता-मीठा क्षणहरूलाई सम्झेर ल्याउँदा आज आफैलाई कस्तो-कस्तो लाग्छ।

सन्त अगस्तिन स्कूलले सालैपछि म्याराथन दौड़को आयोजना गर्थ्यो। कति रामएका थियौं सबैभन्दा अघि प्रसाद सुब्बा आफ्नै कक्षाका मित्र दौड़ेर मेलाटार पुग्दा।

१९८४-मा माध्यमिक परीक्षा दियौं अनि सबै आ-आफ्ना कर्तव्यपथमा अग्रसर। तर ती पुराना सरगुरामाले प्रदान गरेको शिक्षा, प्रेरणा र प्रोत्साहन हाम्रा मानसपटमा जीवित छन्।

आजको यस २४ मईको पूनित स्वर्णजयन्ती अवसरमा आफ्नो प्यारो स्कूल, आदरणीय शिक्षक-शिक्षिका तथा साथीसङ्गीको स्मरण यस रचनाद्वारा गर्न पाउँदा पुलकित भएको छु।

शुभकामना कुमुदिनी तिमीलाई अनि बधाई।
स्वर्ण जयन्ती (१९९८)-को अवसरमा "सुनचरी"-मा प्रकाशित।





# कुमुदिनीका उपज

## यी साहित्य-स्रष्टाहरू.......

- टी० एन० सुवेदी
कालेबुङ



"चरित्र हि बलम्" - कुमुदिनी विद्याश्रमको एक नारा, एक उक्ति र एक सन्देश। यसै उक्तिको थाङ्ग्रा समातेर विगत ७५ वर्षअघिदेखि कालेबुङ नगरको छातीमा आफ्नै एउटा इतिहास, आफ्नो अस्तित्व र आफ्नो अस्मिता बोकेर कुमुदिनी विद्याश्रम हिमालझैं शानले खड़ा छ। "चरित्र हि बल्म" अर्थात् चरित्र नै बल हो भन्ने सन्देशद्वारा कुमुदिनीले आज पनि आफ्नो गौरव गाथा बोकेको छ। वास्तवमा यस सन्देशले विद्यार्थीवर्गको चरित्र-निर्माणतर्फ जागरुक हुन प्रेरित गरेको छ। हुन पनि कुमुदिनी होम्सका पूर्व संस्थापक एवं प्रधान अध्यापक स्व० टिकारम शर्माको शिक्षाको उद्देश्य विद्यार्थीवर्गको चरित्र-निर्माण तथा सर्वाङ्गीण विकासको घड़ेरी पूर्ण रुपमा उठाउनु थियो अथवा भनौं, चरित्र-निर्माणको शिक्षाद्वारा विद्यार्थीवर्गलाई "हुने बिरुवाको चिल्लो पात" बनाउने स्व० टिकाराम शर्माको ध्रुव सङ्कल्प नै थियो।

अब हिलोमा फुलेको कुमुदिनी (कमल पुष्प)-बाट हुने बिरुवाका चिल्ला पातहरू धेरै नै उत्पन्न भएका हुन् अकाट्य रूपमा पनि। नहोस् पनि किन? चरित्र-निर्माणको शिक्षाकै कारण अनेकन् प्रतिभाशाली विद्यार्थीरत्नहरू कुमुदिनीको शिर उच्च पार्न सफल भएका पनि हुन्। भन्नुपर्दा कुमुदिनी होम्सका उपजहरूमा कोही डाक्टर भए त कोही इञ्जिनियर, कोही सेना-नायक बने भने कोही प्रहरी नायक हुनपुगे। यस अतिरिक्त पूर्व विद्यार्थीहरू कोही सिक्किमेली मन्त्रीपदमा सेवारत भए, कोही भूटानका डासो पदमा स्थित रहे। अझ भन्नु हो भने कुमुदिनीकै छत्रछायाँमा हुर्केका चरित्रशील छात्रहरूमा पनि कोही लब्धप्रतिष्ठ चित्रकारका रुपमा देखा परेका हुन् भने कोही-कोही चाहिँ कीर्तिमान् खेलाड़ीका रुपमा सम्मानित भइरहेका छन् मात्र होइन आदर्श शिक्षक पनि बनेका हुन्।

यसै क्रममा भनौं, स्व० टिकाराम शर्माको प्रशासनिक अनुशासनमा शिक्षित विद्यार्थीहरूमा कसैले सांसद औ एम० एल० ए० -को कुर्सी हत्याउन सफल भए पनि कसैले अधिवक्ता र कसैले फिल्म र नाटकका कलाकार हुने सुयोग पाई सफलताको उचाइँलाई स्पर्श गर्न पुगे। तर कुमुदिनी विद्याश्रमका उक्त उपजहरूदेखि अक्षुण्ण अर्को जमात छ जसले अस्मिताको हुँकार लिएर कलमवीर साहित्यकारका रूपमा प्रतिष्ठित बन्ने गोरेटो पैल्याएका छन्। उक्त सबै बयानबाजीको आधारमा कुमुदिनीलाई चरित्र-निर्माणको कारखानाको रुपमा औंल्याउँदा अत्युक्ति नहोला। प्रस्तुत छ यसै विद्याश्रमबाट साहित्यकासमा उज्ज्वल बनेका केही प्रतिष्ठित साहित्यकारहरूको उपलब्ध ज्ञानकारी :-

## देव भण्डारी



साहित्यिक नाम : देव भण्डारी
वास्तविक नाम : देवी प्रसाद भण्डारी
माता-पिता : स्व० सविन्री भण्डारी, स्व० भगीरथ भण्डारी
जन्म-तिथि : ७ अगस्त, १९४७
जन्म-थलो : गहिरी गाउँ, बम बस्ती, कालेबुङ
वर्तमान ठेगाना : बम बस्ती, लेप्चा म्युजियम संस्थान निकट, कालेबुङ
शिक्षा : स्नातक तह (बी० ए०), कालिम्पोङ महाविद्यालय।
रुची : साहित्य लेखन औ पठन (विशेषतः कथा, उपन्यास, कविता, आख्यान)
सम्प्रति : अवकाश-प्राप्त ब्याङ्क प्रबन्धक (सेन्ट्रल ब्याँक)
रचना प्रकाशित भएका पत्र-पत्रिकाहरू : दीयो, दियालो, बधैंचा, हिमालचुली, सुनचरी, स्रष्टा, हिमालय दर्पण, चौबन्दी आदि।
प्रकाशित कृतिहरू : **यही बाटो भएर**-उपन्यास (१९७८); **किनारा**-उपन्यास (१९७८); **शब्दहीन**-उपन्यास (१९८२); **अभिषेक**-कविता सङ्ग्रह (१९८८); **कथा आफ्नै** उपन्यास (२००६)।
संलग्नता : नेपाली साहित्य अध्ययन समिति, नेपाली साहित्य प्रकाशन समिति।
उपलब्धि : पूर्ण राई स्मृति पुरस्कारले सम्मानित (कथा-**एउटा अज्ञात दिशातिर** -को निम्ति) ने० सा० अ० स० बाट।
कुमुदिनी विद्यालयमा अन्तिम वर्ष : सन् १९६७।
सम्पर्क न० : ९४३४१-८७१३३

## नरबहादुर दाहाल



साहित्यिक नाम : नर बहादुर दाहाल
जन्म-तिथि : ५ सेप्टेम्बर, १९३७
जन्म-थलो : कालेबुङ
वर्तमान ठेगाना : सुकुना, दार्जीलिङ।
शिक्षा : दशम् कक्षा, कुमुदिनी होम्स, कालेबुङ
कार्य-क्षेत्र : लेखन पुस्तक-व्यवसाय, नेपाली चलचित्र वितरण संस्थान, गुवाहटी।
सर्वप्रथम प्रकाशित -रचना : "स्मरण" - **प्रभात** पत्रिकामा प्रकाशित

## कृ० बु० संयमी



साहित्यिक नाम : कृष्ण बहादुर बुढ़ाथोकी

वास्तविक नाम : कृ० बु० संयमी

माता-पिता : स्व० मोतिमाया राई

जन्म-तिथि : ७ दिसम्बर, १९५४

जन्म-थलो : निम्न छिबो बस्ती (नासे), कालेबुङ

वर्तमान ठेगाना : उच्च मङमाया बस्ती, दार्जीलिङ

शिक्षा : स्नातकोत्तर (एम० ए०), बी० एड०

पेशा : अध्यापन-नामथाङ उच्च माध्यमिक विद्यालय, द० सिक्किम।

साहित्यमा प्रवेश : विद्यार्थी जीवनको अष्टम् श्रेणीदेखि।

रचना प्रकाशित भएका
पत्र-पत्रिकाहरू : दियो, दियालो, गोर्खा, प्रगति, हाम्रो ध्वनि, बाडुली, स्रष्टा, उदय, सगरमाथा, हिमालचुली, सुनचरी, आजभोलि इत्यादि।

प्रकाशित कृतिहरू : **जीवन यात्राका सहयात्रीहरू** (संस्मरण सङ्ग्रह), **इन्द्रेणी** (बाल-कविता सङ्ग्रह), **गीत गंगा** (गीत सँगालो)।

उपलब्धि : सिक्किम सरकारको पक्षबाट भानु पुरस्कार र स्रष्टा पुरस्कारले सम्मानित।

प्रकाशोन्मुख कृतिहरू : **आदर्श विद्यालयको परिकल्पना, एक बिटा संस्मरण, डेरा-डेराका कथा**।

सेवा : सभापति-तुरुक सांस्कृतिक केन्द्र औ नव जागरण एकता समिति, शिक्षक साहित्य संस्थान, सिक्किम लेखक सङ्घमा सल्लाहकार, भाव तरंङ्गका आयोजक।

सम्प्रीति : नेपाली साहित्य अध्ययन समिति, साहित्य प्रकाशन परिषद्

सम्पादन गरिएका कृति : चौबन्दी, चासो, निर्माण, उद्गार, ज्वालामुखी, नवज्योति आदि।

कुमुदिनी विद्यालयमा
अन्तिम वर्ष : सन् १९६६।

सम्पर्क न० : ९८३२५-१७९६५



## टी० एन० सुवेदी

साहित्यिक नाम : टी० एन० सुवेदी (शर्मा)





रचना प्रकाशित भएका
पत्र-पत्रिकाहरू : संगम, हाम्रो संकेत, साहित्य संकेत, दीयो, दियालो, गोर्खा, सुनचरी, हिमालय दर्पण, सुनाखरी आदि ।

सम्पादन गरिएका
पत्र-पत्रिकाहरू : गोर्खा, संगम, प्रतिनिधि आदि ।

प्रकाशित कृतिहरू : **उन्माद** (कविता सङ्ग्रह), **वर-पीपल** (कथा सङ्ग्रह), **मध्य रातको तारा तथा अन्य** (उपन्यास), **तिम्रो प्रित नै मेरो गीत** (कविता सङ्ग्रह),

उपलब्धि : नेपाली साहित्य अध्ययन समितिबाट पारसमणि प्रधान पुरस्कार प्राप्त ।

## ज्ञान सुतार



साहित्यिक नाम : ज्ञान सुतार

वास्तविक नाम : ज्ञान बहादुर सुतार

माता-पिता : स्व० हर्कमाया छेत्री, स्व० गणेश बहादुर छेत्री "सुतार"

जन्म-तिथि : १ अप्रेल, १९४४

जन्म-थलो : मल्ली बजार, कालेबुङ

वर्तमान ठेगाना : इष्टमेन रोड, कालेबुङ

शिक्षा : बी० ए०, बी० एड०

पेशा : भारतीय सेना (ए० इ० सी०)-मा शिक्षा अनुदेशक (१९६३-१९९२) औ मानद सुबेदार मेजर पदमा कार्यरत रहेर सेवानिवृत्त भएपछि आयकर निरीक्षक पदमा सेवारत रही २००४-मा सेवानिवृत्ति ।

रचना प्रकाशित
भएका पत्रिका : दीयो, दियालो, संगम, चौबन्दी, सैनिक समाचार, बाडुली, हाम्रो संकेत, साहित्य संकेत, हिमालचुली, हिमालय दर्पण, सुनचरी, हास्य-व्याङ्ग्य आदि ।

प्रकाशित कृतिहरू : **यौवन लुटिएपछि** (उपन्यास-१९६६); **सालीज्यूको झुम्के बुलाकी** (कथा सङ्ग्रह-१९८२); **पर्खिदिनु है माया** (उपन्यास-९७९); **करुणा भाउजू** (उपन्यास-१९८६); हास्य-व्यङ्ग्य रचना सङ्ग्रह (१९९०); **राग-अनुराग** (खण्ड-काव्य, १९९४) र **विद्रोही शब्दहरू** (कविता सङ्ग्रह - २००७) ।

उपलब्धि : पूर्ण राई स्मृति पुरस्कारले सम्मानित (ने० सा० अ० स०-को पक्षबाट)

गतिविधिहरू : नेपाली साहित्य अध्ययन समिति, कुमुदिनी परिवार, भा० गो० प० आदि ।

सम्पर्क न० : २७०७६०





| | | |
|---|---|---|
| वास्तविक नाम | : | तारानाथ शर्मा "सुवेदी" |
| माता-पिता | : | स्व० इन्द्रमाया शर्मा, स्व० काशीनाथ शर्मा "सुवेदी" |
| जन्म-तिथि | : | १२ मार्च, १९४७ (शैक्षिक प्रमाण-पत्रमा १-लो दिसम्बर, १९४६) |
| जन्म-थलो | : | कालेबुङ नगर, बाघधारा पथ |
| वर्तमान ठेगाना | : | हिमाली नगर, रेली रोड, कालेबुङ |
| शिक्षा | : | उच्च माध्यमिक शेष परीक्षा उत्तीर्ण (१९६९) |
| तालीम | : | प्राथमिक शिक्षक प्रशिक्षण (बी० टी०) |
| पेशा | : | अध्यापन-पूर्व प्रधान अध्यापक, चन्द्र माया प्रा० पाठशाला, सिन्देबोङ बस्ती। |
| साहित्यमा प्रवेश | : | सन् १९७१-देखि |
| रचना प्रकाशित भएका पत्र-पत्रिकाहरू | : | हिमालचुली, प्रतिनिधि, सञ्चै छ!, सुनचरी, सुनाखरी, हिमालय दर्पण, उदय, चौबन्दी, जम्बुलिङ, बसिबियाँलो, प्रेरणा, कुमुदिनी, प्रणामाञ्जली, नव पल्लव, खिरोदा स्मृति ग्रन्थ, शिक्षक दीप, शिक्षक परिवेश आदि। |
| प्रकाशित कृति | : | **ज्वार भाटा** (कविता सङ्ग्रह - २००९) |
| सम्पादन | : | गोर्खा संवाद्, चासो, प्रयास, खेल-दर्पण, शिक्षक-दीप, शिक्षक परिवेश। |
| समालोचना | : | आवाज, प्रतीक्षा, दीयो सदा जलि रहोस्, फेरि बनाऊँ, त्यो फलैंचा आदि। |
| उपलब्धि | : | अभि-जमान स्मृति पुरस्कारले सम्मानित |
| अन्य गतिविधि | : | नेपाली कथानक चलचित्र "भयानक प्रतिशोध"-मा अभिनय। |
| सम्प्रीति | : | नेपाली साहित्य अध्ययन समिति, साहित्य प्रकाशन परिषद्, हिमाली समाज, कालिम्पोङ प्रेस क्लब (१९९९-२००६) बसिबियाँलो। |
| कुमुदिनी विद्यालयमा अन्तिम वर्ष | : | सन् १९६८ |
| सम्पर्क न० | : | ९१५३१-९६४४९ |

## दिनेश खाती



| | | |
|---|---|---|
| नाम | : | दिनेश खाती |
| माता-पिता | : | स्व० दिलमाया खाती, श्री बुद्धिमान खाती |
| जन्म-तिथि | : | १० मार्च, १९७७ |
| जन्म-थलो | : | थर्बु चियाबारी, मिरिक |
| वर्तमान ठेगाना | : | भेट्नेरी परिसर, तोपखाना, कालेबुङ। |
| शिक्षा | : | बाह्रौं श्रेणी (कला) |
| पेशा | : | भारतीय जीवन वीमा निगममा अभिकर्ता |
| संस्थापक | : | प्रेरणा स्मृति प्रकाशन (स्था० २००१) |

प्रकाशित भएका
रचनाहरू : विभिन्न पत्र-पत्रिकाहरूमा रचनाहरू प्रकाशित
सम्प्रीति : कुमुदिनी परिवार, साझा साहित सञ्च, संघ आत्मा-बोधी ।
गतिविधि : खरसाङ रेडियो नाटक प्रसारण ।
प्रकाशित कृतिहरू : **स्मृतिको गर्भभित्र** (कथा सङ्ग्रह), **आशाको महलभित्र** (कथा सङ्ग्रह), **जीवन-पथ** (उपन्यास), **विकल्प** (नाटक सङ्ग्रह), **लव इन मसानघाट** (नाटक सङ्ग्रह) ।
सम्पादन : प्रेरणा (सामयिक पत्रिका)
कुमुदिनी विद्यालयमा
अन्तिम वर्ष : सन् १९९३
सम्पर्क न० : ९८३२४-३८०४० , ९९३२३-४९९९४

## डा० राजेन्द्र भण्डारी



साहित्यिक नाम : राजेन्द्र भण्डारी
माता-पिता : स्व० सवित्री भण्डारी, स्व० भगीरथ भण्डारी
जन्म-तिथि : १५ सेप्टेम्बर १९५८
जन्म-थलो : गहिरी गाउँ, बम बस्ती,, कालेबुङ
वर्तमान ठेगाना : गहिरी गाउँ, बम बस्ती, कालेबुङ
शिक्षा : उत्तर बङ्ग विश्व विद्यालयबाट स्नातकोत्तर (एम० ए०) अनि पी० एच० डी० विद्यावारिधि (डाक्टर) उपाधिले सम्मानित ।
साहित्यमा प्रवेश : विद्यार्थीकालदेखि ।
रुचि : साहित्य लेखन एवं अध्ययन ।
सम्प्रति : सिक्किम सरकारी महाविद्यालयमा व्याख्याता
प्रकाशित कृतिहरू : **हिउँदो यी चिसा रातका पर्दाहरूमा** (कविता सङ्ग्रह); **क्षर-अक्षर** (कविता सङ्कलन); **यी शब्दहरू : यी हरफहरू** (कविता सङ्ग्रह) तथा **शब्दहरूका पुनर्वास** (कविता सङ्ग्रह) ।
उपलब्धि : दियालो पुरस्कार, शोभा योगिम पुरस्कार (गान्तोक) एवं गुमानसिंह चामलिङ स्मृति पुरस्कारहरूले सम्मानित ।
कुमुदिनी विद्यालयमा
अन्तिम वर्ष : सन् १९७२ ।
सम्पर्क न० : ९४३४१-५३३१२





## हीरा छेत्री



| | | |
|---|---|---|
| साहित्यिक नाम | : | हीरा छेत्री |
| माता-पिता | : | श्रीमती इन्द्रमाया छेत्री, स्व० बिर्ख बहादुर छेत्री |
| जन्म-तिथि | : | ३० अप्रेल, १९६८, मङ्गलबार |
| जन्म-थलो | : | नामनाङ, गान्तोक (सिक्किम) |
| वर्तमान ठेगाना | : | हीरा कटेज, शहीद नगर, तोपखाना, कालेबुङ |
| शिक्षा | : | एम० ए० (नेपाली), पत्रकारितामा डिप्लोमा |
| पेशा | : | केन्द्र सरकारअधीन सेवा |
| साहित्यमा प्रवेश | : | सन् १९८१-देखि |
| प्रकाशित पुस्तक | : | **भारतेली नेपाली पत्र-पत्रिकाको शताब्दी** (१८८७-१९८६), **छुल्याहाको गन्थन** |
| सम्पादन | : | चरित्र, बाल-बधैंचा, हास्य-खुराक, खिरोदा खड्का स्मृति ग्रन्थ। |
| सम्मान-अभिनन्दन | : | नेपाली साहित्य अध्ययन समिति, कालेबुङद्वारा अभिनन्दित, टिकालाल निरौला पुरस्कारले सम्मानित। |
| अन्य गतिविधिहरू | : | ज्ञानरत्न गुठी, गाउँले जमात, कालेबुङ प्रेस क्लब, कुमुदिनी परिवार, भारतीय गोर्खा परिसंघ, सनही प्रोडक्सन, निश्चल ट्रफी तर्क सभा समिति, प्रवाह को अपरेटिभ सोसाइटी, आदिसित संलग्न। |
| कुमुदिनी विद्यालयमा अन्तिम वर्ष | : | सन् १९८४-मा माध्यमिक। |
| सम्पर्क न० | : | फोन - २५६९३३, सेल - ९४३४१-२७१७५ |

## दिल सुब्बा



| | | |
|---|---|---|
| साहित्यिक नाम | : | दिल सुब्बा |
| वास्तविक नाम | : | दिल कुमार सुब्बा |
| माता-पिता | : | श्री चन्द्रमान सुब्बा, स्व० पेनिमा सुब्बा |
| जन्म-तिथि | : | ०४ मई, १९४८ |
| जन्म-थलो | : | छिबो बस्ती, कालेबुङ |
| शिक्षा | : | स्नातक, उ० ब० विश्व विद्यालय |
| सेवा | : | सन् १९६६-१९७० भारतीय वायु सेनामा सेवा, १९७३-२००८ भारतीय डाक विभागमा सेवापछि २००८-देखि अवकाशप्राप्त |





प्रथम प्रकाशित रचना : जिन्दगी माइला (कथा), दीयो मई (१९६५)

प्रकाशित कृतिहरू : एक खोलाका दुइ किनार (कथा सङ्ग्रह) १९६५, कमलफूल (उपन्यास) १९६८, मरेको मान्छे (उपन्यास) १९७२, विश्वासको फूल (उपन्यास) १९८५, भत्किएका सपनाहरू (कथा सङ्ग्रह) १९८६ ।

यसबाहेक दीयो, दियालो, धुवाँ, नवज्योति, चौबन्दी, कंचनजङ्घा, भानु स्मारिका, सैनिक समाचार, हिमालचुली, हिमालय दर्पण आदि पत्र-पत्रिकामा फुटकर रचनाहरू प्रकाशित ।

कुमुदिनी विद्यालयमा अन्तिम वर्ष : सन् १९६४



# श्रद्धाञ्जली

कुमुदिनी परिवारका निम्नलिखित सदस्यहरूको आकस्मिक निधनप्रति हामी हार्दिक श्रद्धाञ्जली प्रकाट गर्दै उनीहरूको आत्माले चिरशान्ति पाउन सकून् भनी सर्वशक्तिमान् इश्वरप्रति कामना गर्दछौं

**सोनाम ग्यारोङ (आजीवन सदस्य)**
**मृत्यु १७.१२.२००९**

**लोकनाथ शर्मा (आजीवन सदस्य)**
**मृत्यु ०८.०४.२०१०**



| | |
|---|---|
| Name | : RATNA BAHADUR BHUJEL |
| Mother's name | : Late Indra Maya Bhujel |
| Father's name | : Late Harka Bahadur Bhujel |
| Nationality | : Indian |
| Date of birth | : 13/09/1931 |
| Place of birth | : Sindebong Busty Kalimpong |
| Year of passing out /leaving | : 1950 |
| Class last attended | : X (TEN) |
| Occupation / Post held | : Registration Asstt. S.D.O. office |
| Department | : Registration Govt. of West Bengal |
| **Address** | |
| Permanent | : Middle Sindebong Busty, B.P.O. Jore Manay Kalimpong. |
| Present | : Middle Sindebong Busty, B.P.O. Jore Manay Kalimpong. |
| Cell No. | : 9800265141 |
| Fax / land Phone | : |
| E-mail id | : |
| Type of Membership | : Ordinary |



| | |
|---|---|
| Name | : CHANDRA KUMAR PRADHAN |
| Mother's name | : Late Chatra Kumari |
| Father's name | : Late Padam N. Pradhan |
| Nationality | : Indian |
| Date of birth | : 18/11/1934 |
| Place of birth | : Kagey Busty Kalimpong |
| Year of passing out /leaving | : 1952 |
| Class last attended | : X (TEN) |
| Occupation / Post held | : West Bengal Police Service |
| Department | : West Bengal Police Service |
| **Address** | |
| Permanent | : 12th Mile, Rishi Road, Upper Sindebong Busty Kalimpong |
| Present | : Chandra Niwas, 12th Mile, Rishi Road Kalimpong, Darjeeling |
| Cell No. | : 9434143220 |
| Fax / land Phone | : 03552-274541 |
| E-mail id | : ckpradhan1@rediffmail.com |
| Type of Membership | : Life |

